पानीमा हाली पकाउनू, १ पाउ बाँकी रहेपछि छान्नू, त्यो छानेको चोटा फेरि २।। पाउ पानीमा पकाउनू र १ पाउ बाँकी रहेपछि छान्नू अनि पहिलेको काढ़ामा मिलाई शीशीमा बन्द गरी राख्नू। झाड़ा लागेको मानिसलाई ५-५ तोला काढ़ा दिनको ३ पटक पिलाउनू, झाड़ा थामिन्छ।

२१ हैजामा–नीमको पात पिंधेर गोला बनाउनू र त्यसमाथि माटाको १ अङ्गुल मोटो लेप गर्नू र भुङ्ग्रो भित्र हालिदिनू, जब माटो रातो हुन्छ तब निकालेर त्यसको रस निचोर्नू र शीशीमा भरिराख्नू। त्यो रस हैजाले प्यास लागेको रोगीलाई १-१ तोलाको मात्रा गरी गुलाफ पानीसँग बराबर दिनाले हैजा र प्यास नष्ट हुन्छ।

२२ हैजाले बाउँड़िएमा–हात-गोड़ामा नीमको तेल मालिश गरिदिनू, एक छिनमा आराम हुन्छ।

२३ मन्दाग्निमा–नीमको पाकेको गेड़ा प्रतिदिन ८-१० ओटा खाने अभ्यास गर्नाले मन्दाग्नि नष्ट हुन्छ।

२४ अरुचिमा–३-४ तोला नीमको कमलो पात घ्यूमा तारेर खानाले भयंकर अरुचि पनि तुरुन्त नष्ट हुन्छ।

२५ अलकाईमा–नीमको गेड़ा र सिंदुरे रुखको गेड़ाको धूलो मिलाई ६ मासा खानाले अलकाईको खटिरा बैलाउँछ।

२६ अथवा–प्रतिदिन मुङ्को छाँटा बनाएर त्यसमा नीमको २१ पात हालेर पिंध्नु (अरू केही मसला नमिलाउनू) र घ्यूमा फुरौला पकाएर ५-७ ओटा फुरौला खाने गर्नू, यस्ता प्रकारले २१ दिनसम्म खानाले सब प्रकारका अलकाई नष्ट हुन्छन्। यो औषधी सेवन गर्दा खाली मोही मात्र पिउनू। सकिएन र गाह्रारो भयो भने अलिकति भात खानू। नुन खाने मन भयो भने अलिकति सिंधेनुन खानू। अरु केही पनि नखानू।

२७ शीत-पित्तमा–नीमको तेलमा कपूर मिलाएर मालिश गर्नाले शीतपित्त नष्ट हुन्छ।

पानीमा हाली पकाउनू, १ पाउ बाँकी रहेपछि छान्नू, त्यो छानेको चोटा फेरि २॥ पाउ पानीमा पकाउनू र १ पाउ बाँकी रहेपछि छान्नू अनि पहिलेको काढ़ामा मिलाई शीशीमा बन्द गरी राख्नू। झाड़ा लागेको मानिसलाई ५-५ तोला काढ़ा दिनको ३ पटक पिलाउनू, झाड़ा थामिन्छ।

२१ हैजामा–नीमको पात पिँधेर गोला बनाउनू र त्यसमाथि माटाको १ अङ्गुल मोटो लेप गर्नू र भुङ्ग्रो भित्र हालिदिनू, जब माटो रातो हुन्छ तब निकालेर त्यसको रस निचोर्नू र शीशीमा भरिराख्नू। त्यो रस हैजाले प्यास लागेको रोगीलाई १-१ तोलाको मात्रा गरी गुलाफ पानीसँग बराबर दिनाले हैजा र प्यास नष्ट हुन्छ।

२२ हैजाले बाउँड़िएमा–हात-गोड़ामा नीमको तेल मालिश गरिदिनू, एक छिनमा आराम हुन्छ।

२३ मन्दाग्निमा–नीमको पाकेको गेड़ा प्रतिदिन ८-१० ओटा खाने अभ्यास गर्नाले मन्दाग्नि नष्ट हुन्छ।

२४ अरुचिमा–३-४ तोला नीमको कमलो पात घ्यूमा तारेर खानाले भयंकर अरुचि पनि तुरुन्त नष्ट हुन्छ।

२५ अलकाईमा–नीमको गेड़ा र सिंदुरे रुखको गेड़ाको धूलो मिलाई ६ मासा खानाले अलकाईको खटिरा बैलाउँछ।

२६ अथवा–प्रतिदिन मुङ्को छाँटा बनाएर त्यसमा नीमको २१ पात हालेर पिँध्नु (अरू केही मसला नमिलाउनू) र घ्यूमा फुरौला पकाएर ५-७ ओटा फुरौला खाने गर्नू, यस्ता प्रकारले २१ दिनसम्म खानाले सब प्रकारका अलकाई नष्ट हुन्छन्। यो औषधी सेवन गर्दा खाली मोही मात्र पिउनू। सकिएन र गाहारो भयो भने अलिकति भात खानू। नुन खाने मन भयो भने अलिकति सिंधेनुन खानू। अरु केही पनि नखानू।

२७ शीत-पित्तमा–नीमको तेलमा कपूर मिलाएर मालिश गर्नाले शीतपित्त नष्ट हुन्छ।

बन्द हुन्छ तब आधा पाउ नीमको पातको काढ़ा पकाएर त्यसमा रोगीलाई बसाल्नु, पिसाब हुन्छ र सूज पनि नष्ट हुन्छ।

४० उपदंशमा—१ पाउ नीमको बोक्रा दबाल्क्याएर २ माना भस्सको पाकेको पानीमा हालेर रातभर राखिदिनु, बेहान कपड़ामा छानेर ५ तोला रोगीलाई पिलाउनु र अरु काढ़ाले गर्मीको घाउ धुनु। ३-४ महीनासम्म यो क्रिया गर्नाले उपदंश आराम हुन्छ।

४१ अथवा—नीमको पातको रस या नीमको तेल लगाउनाले र खानाले पनि उपदंश नष्ट हुन्छ।

४२ अथवा—कुनै औषधीले पनि निको नभएको उपदंशलाई नीमको मद[1] १ तोलादेखि ४ तोलासम्मको मात्रा (रोगीको अवस्था हेरी) मा रोगीलाई पिलाउने गर्‍यो भने उपदंश नष्ट हुन्छ।

४३ अथवा—नीमको पात पिंधेर टिकिया बनाई तावामा सेकेर पानीसँग ६ मासा जति खाए लिङ्ग भित्रको खटिरा (उपदंश वा सुजाकबाट भएको भए पनि) नष्ट हुन्छ। रगत पनि शुद्ध हुन्छ।

४४ प्रमेहमा—१ तोला नीमको बोक्राको काढ़ा बेहान केही दिनसम्म दिए सिकता[2]-प्रमेह र इक्षु[3] प्रमेह आराम हुन्छ।

४५ पथरीमा—नीमको पातको खरानी बनाई २ मासाको मात्रामा केही दिन पानीसँग खायो भने पथरी गलेर झर्दछ।

४६ कलेजाको रोगमा—५ तोला नीमको ताजा पात १ माना तातो पानीमा हाल्नु र छोपिदिनु १५ मिनट पछि छानेर ५ तोलाको मात्रा

---

१—पुरानो नीमको वृक्षबाट एक किसिमको मद चुहेर आउन लाग्छ। बर्षौं पछि वर्षौंसम्म पनि आईरहन्छ। यो मद आउँदा रुखबाट एक किसिमको शब्द पनि भई रहन्छ। यही मद जम्मा गरेर राख्नु। धेरै रोगमा औषधी लाग्छ।

२—यो प्रमेहमा पिसाबबाट बालुवाजस्तो पदार्थ निस्कन्छ र धातु पनि जगी रहन्छ।

३—यो प्रमेहमा पिसाबबाट गुलियो पदार्थ निस्कन्छ र त्यसमा कमिला आदि लाग्दछन्।

बन्द हुन्छ तब आधा पाउ नीमको पातको काढ़ा पकाएर त्यसमा रोगीलाई बसाउनु, पिसाब हुन्छ र सुजन पनि नष्ट हुन्छ।

४० उपदंशमा–१ पाउ नीमको बोक्रा दुलाल्याएर २ माना सम्मको पाकेको पानीमा हालेर रातभर राखिदिनु, बिहान कपड़ामा छानेर ५ तोला रोगीलाई पिलाउनु र अरु काढ़ाले रोगीको घाउ धुनु। ३-४ महीनासम्म यो क्रिया गर्नाले उपदंश आराम हुन्छ।

४१ अथवा–नीमको पातको रस वा नीमको तेल लगाउनाले र खानाले पनि उपदंश नष्ट हुन्छ।

४२ अथवा–कुनै औषधीले पनि निको नभएको उपदंशलाई नीमको मद[1] १ तोलादेखि ४ तोलासम्मको मात्रा ( रोगीको अवस्था हेरी ) मा रोगीलाई पिलाउने गर्यो भने उपदंश नष्ट हुन्छ।

४३ अथवा–नीमको पात पिंधेर टिकिया बनाई तावामा सेकेर पानीसँग ६ मासा जती खाए लिङ्ग भित्रको खटिरा ( उपदंश वा सुजाकबाट भएको घाउ पनि ) नष्ट हुन्छ। रगत पनि शुद्ध हुन्छ।

४४ प्रमेहमा–१ तोला नीमको बोक्राको काढ़ा बिहान केही दिनसम्म पिए सिकता[2]-प्रमेह र इक्षु[3] प्रमेह आराम हुन्छ।

४५ पथरीमा–नीमको पातको खरानी बनाई २ मासाको मात्रामा केही दिन पानीसँग खायो भने पथरी गलेर झर्दछ।

४६ कलेजाको रोगमा–५ तोला नीमको ताजा पात १ माना तातो पानीमा हाल्नु र छोपिदिनु १५ मिनट पछि छानेर ५ तोलाको मात्रा

---

१–पुरानो नीमको वृक्षबाट एक किसिमको मद चुहेर बग्न लाग्छ। बगे पछि वर्षौंसम्म पनि आईरहन्छ। यो मद आउँदा रुखबाट एक किसिमको शब्द पनि भई रहन्छ। यही मद जम्मा गरेर राख्नु। धेरै रोगमा औषधी लाग्छ।

२–यो प्रमेहमा पिसाबबाट बालुवाजस्तो पदार्थ निस्कन्छ र धातु पनि बगी रहन्छ।

३–यो प्रमेहमा पिसाबबाट गुलियो पदार्थ निस्कन्छ र त्यसमा कमिला आदि लाग्दछन्।

५४ अथवा–१ तोला नीमको बोक्राको काढा पिउनाले रगत सफा भएर रगतका सब दोष नष्ट हुन्छन ।

५५ दादमा–नीमको पात पिंधेर दही मिलाई लगाए दाद जान्छ ।

५६ बिग्रेको घाउमा–नीमको पातको पुल्टिस बाँधे निको हुन्छ ।

५७ विषाक्त घाउ–आधा पाउ नीमको पातको रस, १ पाउ तोरीको तेल अलिकति पानी मिलाई पकाएर तेलमात्र बाँकी रहेपछि निकाली छान्नू र शीशीमा राख्नू । यसले विषालु घाउ पनि निको हुन्छ ।

५८ बगी रहने घाउमा–नीमको बोक्राको खरानी लगाउनाले बगिरहने घाउ आराम हुन्छ ।

५९ सैन र पीप भएको फोड़ामा–नीमको पातलो पुल्टिस बाँध्नू । सैन र पीप भरिएको फोड़ा पनि नष्ट हुन्छ ।

६० अथवा–नीमको सुकेको पात र भिजाएको चून बराबर लिई नीमको हरियो पातको रसमा घोटेर सैनमा भरिदिए आराम हुन्छ ।

६१ रगत शुद्ध गर्नुपरेमा–वसन्त ऋतुमा ७ मासा नीमको कमलो कोपिला र ७/८ गेडा मरिच पनि पिंधी ७ दिनसम्म खाएर पथ्यमा खाली बेसनको रोटी र घ्यू मात्र खानाले १ वर्षसम्म कुनै किसिमका पनि चर्म-रोग र कुनै किसिमका रक्त-दोष पनि हुँदैनन ।

६२ श्वेत-कुष्ठमा–नीमको फूल, फल र पात बराबर लिएर खूब मसीनोसँग २ मासा पिंध्नू र शर्बत जस्तै गरी पानीमा धारधुर गरी पिउनू ४० दिनसम्म पिउनाले श्वेत कुष्ठ नष्ट हुन्छ (२ मासादेखि सुरू गरी अलि-अलि बढाउँदै ४० दिनसम्ममा ६ मासा पुन्याउनू ) ।

६३ प्लेगमा–२ तोला नीमको अनारदाना ५ तोला पानीमा भिंजेर छानेर बेहान पिउनाले र नीमको पात मसीनोसँग पिंधी गाण्टोमा पुल्टिस बाँध्नाले प्लेग नष्ट हुन्छ ।

६४ अथवा–१ तोला नीमको पञ्चाङ्ग कुटेर पानीमा मिलाई छानेर १०-१० तोलाको मात्रा गरी १५-१५ मिनटमा पिलाउनाले र गाण्टोमा नीमका पातको पुल्टिस बाँधी नीमकै काठको धूवाँ दिई रहनाले

५४ अथवा–१ तोला नीमको बोक्राको काढा पिउनाले रगत सफा भएर रगतका सब दोष नष्ट हुन्छन ।

५५ दादमा–नीमको पात पिँधेर दही मिलाई लगाए दाद जान्छ ।

५६ बिग्रेको घाउमा–नीमको पातको पुल्टिस बाँधे निको हुन्छ ।

५७ विषाक्त घाउ–आधा पाउ नीमको पातको रस, १ पाउ तोरीको तेल अलिकति पानी मिलाई पकाएर तेलमात्र बाँकी रहेपछि निकाली छान्नु र शीशीमा राख्नू। यसले विषालु घाउ पनि निको हुन्छ।

५८ बगी रहने घाउमा–नीमको बोक्राको खरानी लगाउनाले बगिरहने घाउ आराम हुन्छ।

५९ सैन र पीप भएको फोड़ामा–नीमको पातलो पुल्टिस बाँध्नू। सैन र पीप भरिएको फोड़ा पनि नष्ट हुन्छ।

६० अथवा–नीमको सुकेको पात र भिजाएको चून बराबर लिई नीमको हरियो पातको रसमा घोटेर सैनमा भरिदिए आराम हुन्छ।

६१ रगत शुद्ध गर्नुपरेमा–वसन्त ऋतुमा ७ मासा नीमको कमलो कोपिला र ७।८ गेड़ा मरिच पनि पिंधी ७ दिनसम्म खाएर पथ्यमा खाली बेसनको रोटी र घ्यू मात्र खानाले १ वर्षसम्म कुनै किसिमका पनि चर्म-रोग र कुनै किसिमका रक्त-दोष पनि हुँदैनन ।

६२ श्वेत-कुष्ठमा–नीमको फूल, फल र पात बराबर लिएर खूब मसीनोसँग २ मासा पिंध्नू र शर्बत जस्तै गरी पानीमा धारधुर गरी पिउनू ४० दिनसम्म पिउनाले श्वेत कुष्ठ नष्ट हुन्छ (२ मासादेखि सुरू गरी अलि-अलि बढाउँदै ४० दिनसम्ममा ६ मासा पुऱ्याउनू)।

६३ प्लेगमा–२ तोला नीमको असरछाला ५ तोला पानीमा पिंधेर छानेर बेहान पिउनाले र नीमको पात मसीनोसँग पिंधी गाण्टोमा पुल्टिस बाँध्नाले प्लेग नष्ट हुन्छ।

६४ अथवा–१ तोला नीमको पञ्चाङ्ग कुटेर पानीमा मिलाई छानेर १०-१० तोलाको मात्रा गरी १५-१५ मिनटमा पिलाउनाले र गाण्टोमा नीमका पातको पुल्टिस बाँधी नीमकै काठको धूवाँ दिई रहनाले

र ३ हाँड़ीमा ४-४ पाथी पानी हाल्नू र त्यसमा माथिको नीमको अन्तरछाला १-१ सेर मुख बन्द गरेर छोप्नू अनि पकाउनू, जब खूब पाक्छ तब सूतिका रोगले ग्रस्त भएकी स्त्रीलाई बलवान नराखेको डोरीको खाटमा सुताउनू र खाटभन्दा तल हाँडी मन्तिर पर्ने गरी मोटा हाँडी राखी मुख खोलिदिनू, सुत्केरीलाई कम्बल ओढ़ाएर गुँस्याउनू (मतलब यो हो कि त्यसको बाफ सुत्केरीको शिरदेखिको अङ्गमा नपरोस्) यो अलि सेलाएपछि कम्मरतिर सार्नू र अर्को नयाँ हाँड़ी उही ठाउँमा (घाँटी मन्तिर) राखिदिनू, त्यो पनि सेलाएपछि पहिलेको हाँड़ी गोडातिर, दोस्रो हाँड़ी कम्मरतिर र तेस्रो हाँड़ी घाँटीतिर राखी बाफले सेक्नू। खूब पसीना निस्कन्छ, अनि हावा बचाएर हाँड़ी हटाउनू। यस्ता प्रकारले ७ दिनसम्म सेक्नू। जस्तै सूतिका बिग्रे पनि यसले नष्ट हुन्छ। पथ्यमा मात्र दूध, भात, घ्यू तातो पानी ठण्डा भएपछि मात्र दिनू।

७५ रक्तार्बुदमा—नीम-काठ पानीमा घोटेर १ अङ्गुल मोटो लेप गर्नाले रक्तार्बुद नष्ट हुन्छ।

७६ चोट लागेमा—चोट लाग्नाले भित्र दखल परेको र सुनिएको भए नीमको पातको बाफले सेक्नाले आराम हुन्छ।

७७ लू लागेमा—नीमको पञ्चाङ्ग र मिश्री १-१ तोला लिएर पानी-सँग पिंधी छानेर पिए लूका सबै उपद्रव नष्ट हुन्छन्।

७८ बिफरमा—नीमको प्रयोग गर्नाले बिफर हुँदैन, भए पनि त्यस्तो उग्ररूप धारण गर्दैन।

७९ अथवा—नीमको रातो रङका ७ कोपिला र ३ गेड़ा मरिच पिंधेर नियम-पूर्वक १ महीना खाए १ वर्षसम्म बिफर र दादुरा हुँदैन।

८० अथवा—नीमको गेड़ा, बर्रो मिश्रको गुदी र हलेदो बराबर लिएर पिध्नू, १ मासाको मात्रा गरी ठण्डा पानीमा पिंधेर १५ दिनसम्म खायो भने बिफर र दादुराको डर हुँदैन।

८१ अथवा—नीमको ३ मासा कोपिला १५ दिन लगातार खायो भने बिफर र दादुराको डर हुँदैन। बिफर आयो भने पनि ज्यादा

र ३ हाँडीमा ४-४ पाथी पानी हाल्नू र त्यसमा माथिको नीमको अन्तरछाला १-१ सेर मुख बन्द गरेर छोप्नू अनि पकाउनू, जब खूब पाक्छ तब सूतिका रोगले ग्रस्त भएकी स्त्रीलाई बलवान नराखेको डोरीको खाटमा सुताउनू र खाटमनि घाँटी मन्तिर पर्ने गरी थोटा हाँडी राखी मुख खोलिदिनू, सुत्केरीलाई कम्बल ओढाएर गुँस्याउनू (मतलब यो हो कि त्यसको बाफ सुत्केरीको शिरदृष्टिको अङ्गमा नपरोस्) यो अलि सेलाएपछि कम्मरतिर सार्नू र अर्को नयाँ हाँडी उही ठाउँमा (घाँटी मन्तिर) राखिदिनू, त्यो पनि सेलाएपछि पहिलेको हाँडी गोडातिर, दोस्रो हाँडी कम्मरतिर र तेस्रो हाँडी घाँटीतिर राखी बाफले सेक्नू। खूब पसीना निस्कन्छ, अनि हावा बचाएर हाँडी हटाउनू। यस्ता प्रकारले ७ दिनसम्म सेक्नू। जस्तै सूतिका विघ्न पनि यसले नष्ट हुन्छ। पथ्यमा मात्र दूध, भात, घ्यू तातो पानी ठण्डा भएपछि मात्र दिनू।

७५ रक्तार्बुदमा—नीम-काठ पानीमा घोटेर १ अङ्गुल मोटो लेप गर्नाले रक्ताऽर्बुद नष्ट हुन्छ।

७६ चोट लागेमा—चोट लाग्नाले भित्र दखल परेको र सुन्निएको भए नीमको पातको बाफले सेक्नाले आराम हुन्छ।

७७ लू लागेमा—नीमको पञ्चाङ्ग र मिश्री १-१ तोला लिएर पानी-सँग पिंधी छानेर पिए लूका सबै उपद्रव नष्ट हुन्छन्।

७८ विफरमा—नीमको प्रयोग गर्नाले विफर हुँदैन, भए पनि त्यस्तो उग्ररूप धारण गर्दैन।

७९ अथवा—नीमको रातो रङका ७ कोपिला र २ गेडा मरिच पिंधेर नियम-पूर्वक १ महीना खाए १ वर्षसम्म विफर र दादुरा हुँदैन।

८० अथवा—नीमको गेडा, वर्रो मिश्रको मुदी र हलेदो बराबर लिएर पिंध्नू, १ मासाको मात्रा गरी ठण्डा पानीमा पिंधेर १५ दिनसम्म खायो भने विफर र दादुराको डर हुँदैन।

८१ अथवा—नीमको ३ मासा कोपिला १५ दिन लगातार खायो भने विफर र दादुराको डर हुँदैन। विफर आयो भने पनि ज्यादा

(घ) बिफरको घाउमा झिङ्गाहरूलाई बस्न नदिनू, नीमको पंखा बनाएर त्यसको हावा पर्ने गरी रोगीलाई बराबर हाँक्नू।

(ङ) रोगीलाई धेरै दाह भयो भने नीमको पात पिंधी पानीमा घोलेर कपड़ामा छान्नू, मदानीले मथ्नू र अनि जो फीँज आउँछ त्यसले रोगीको शरीरमा लेप गर्नू। यसले दाह नष्ट हुन्छ।

(च) बिफरको दानाले यस्तो गर्मी गर्दछ कि रोगी सहन सक्तैन, असह्य वेदनामा नीमको पात पिंधेर अथवा नीमको गेड़ाको गुदी पानीमा पिंधेर दानामा पातलो लेप गर्नू, दानामा कहिल्यै पनि बाक्लो लेप नलगाउनू।

८९ बारुलो र बिच्छीको विषमा—नीमको पात माड़ेर टोकेको ठाउँमा दल्नाले बिच्छी र बारुलोले टोकेको आराम गर्छ।

९० सर्पको विषमा—सर्पले टोकेको मानिसलाई नीमको पात चपाउन दिनू। तितो लाग्दैन। तितो लागेपछि विष उत्रछ भन्ने जान्नू।

९१ अफीमको विषमा—नीमको पातको खूब तेजिलो अर्क निकालेर पिउनाले अफीमको विष नष्ट हुन्छ।

९२ संखियाको विषमा—नीमको पातको रस पिउनाले विष उत्रन्छ।

९३ सन्तति-निरोध—१ तोला नीमको गूँदको धूलो १ चौथाई पानीमा गलाउनू र कपड़ामा छान्नू। त्यसमा १ हात लामो र १ हात चौड़ा नयाँ मलमलको कपड़ा भिजाउनू र सुकाउनू, सुकेपछि रुपियाँ बराबर गोल टुक्रा काटेर शीशीमा राखिछाड्नू। संभोगभन्दा पहिले १ टुक्रा लिएर स्त्री आफ्नू योनिको जरायु-पिण्डमा टाँसोस्। सह-वासको एक घण्टा पछि त्यो टुक्रा निकालेर फ्याँकोस्। यो प्रयोगले जरायुमा विचित्र स्फूर्ति पैदा हुन्छ र गर्भ रहन सक्दैन।

९४ अथवा—नीमको शुद्ध तेलमा रुईको फाहा बनाएर तर गरेर सहवासभन्दा पहिले जरायु पिण्डमा राख्नाले पनि गर्भ रहँदैन।

(घ) बिफरको घाउमा झिङ्गाहरूलाई बस्न नदिनू, नीमको पंखा बनाएर त्यसको हावा पर्ने गरी रोगीलाई बराबर हाँक्नू।

(ङ) रोगीलाई धेरै दाह भयो भने नीमको पात पिंधी पानीमा घोलेर कपड़ामा छान्नू, मदानीले मथ्नू र अनि जो फींज आउँछ त्यसले रोगीको शरीरमा लेप गर्नू। यसले दाह नष्ट हुन्छ।

(च) बिफरको दानाले यस्तो गर्मी गर्दछ कि रोगी सहन सक्तैन, असह्य वेदनामा नीमको पात पिंधेर अथवा नीमको गेड़ाको गुदी पानीमा पिंधेर दानामा पातलो लेप गर्नू, दानामा कहिल्यै पनि बाक्लो लेप नलगाउनू।

८९ बारुलो र बिच्छीको विषमा—नीमको पात माड़ेर टोकेको ठाउँमा दल्नाले बिच्छी र बारुलोले टोकेको आराम गर्छ।

९० सर्पको विषमा—सर्पले टोकेको मानिसलाई नीमको पात चपाउन दिनू। तितो लाग्दैन। तितो लागेपछि विष उत्रछ भन्ने जान्नू।

९१ अफीमको विषमा—नीमको पातको खूब तेजिलो अर्क निकालेर पिउनाले अफीमको विष नष्ट हुन्छ।

९२ संखियाको विषमा—नीमको पातको रस पिउनाले विष उत्रन्छ।

९३ सन्तति-निरोध—१ तोला नीमको गूदको धूलो १ चौथाई पानीमा गलाउनू र कपड़ामा छान्नू। त्यसमा १ हात लामो र १ हात चौड़ा नयाँ मलमलको कपड़ा भिजाउनू र सुकाउनू, सुकेपछि रुपियाँ बराबर गोल टुक्रा काटेर शीशीमा राखिछाड्नू। संभोगभन्दा पहिले १ टुक्रा लिएर स्त्री आफ्नू योनिको जरायु-पिण्डमा टाँसोस्। सहवासको एक घण्टा पछि त्यो टुक्रा निकालेर फ्याँकोस्। यो प्रयोगले जरायुमा विचित्र स्फूर्ति पैदा हुन्छ र गर्भ रहन सक्दैन।

९४ अथवा—नीमको शुद्ध तेलमा रूईको फाहा बनाएर तर गरेर सहवासभन्दा पहिले जरायु पिण्डमा राख्नाले पनि गर्भ रहँदैन।

७ सर्दीको सूजमा–बकाइनोको रस तातो पारी लगाउनाले सर्दीबाट पैदा भएको शोथ ( सूज ) नष्ट हुन्छ ।

८ वातमा–४ लाल बकाइनोको गेड़ाको चूर्णखानाले र बकाइनोको गेड़ाको धूलो खुर्सानीसँग पिँधेर लेप गर्नाले गठिया बात नष्ट हुन्छ ।

९ गृध्रसी वातमा–१-२ लाल बकाइनोको सत्त्व पानीमा मिलाएर पिलाउनाले र बकाइनोको जराको बोक्राको लेप जस्तो बनाई लेप गर्नाले गृध्रसी बात नष्ट हुन्छ ।

१० जुकामा–१ मासासम्म बकाइनोको पातको रस पिलाउनाले पेटका जुका मर्दछन् । जुकाले जरो आएको भए पनि नष्ट हुन्छ ।

११ अथवा–बकाइनोको सुकेको फल (गेड़ा) कागतीको अमिलोमा पिँधेर १ रत्तीदेखिन ४ रत्ती सम्मको मात्रा गरी दिनाले, बच्चाको पेटमा हुने चुर्ना र जुका पनि नष्ट हुन्छन् । बकाइनोको लासो अत्तरछाला झिकेर कम्मरमा बाँध्नाले पनि जुकाहरु मर्दछन् ।

१२ अलकाईमा–बकाइनोको गेड़ा र मदिसे सौंप बराबर पिँधेर त्यसको बराबर मिश्री मिलाएर २ मासाको मात्रा गरी पानीसँग खानाले अलकाई नष्ट हुन्छ ।

१३ अथवा–१ पाउ बकाइनोको पातमा २ तोला सिंधेनून मिलाई पिँधेर बयर जत्रो गोली बनाउनू । १-१ गोली बेहान-बेलुका पानीसँग दिनाले अलकाई नष्ट हुन्छ ।

१४ पथरीमा–६ मासा बकाइनोको पातको रसमा ३ मासा जवाखार मिलाएर पिलाउनाले शर्कराश्मरी नष्ट हुन्छ ।

१५ प्रमेहमा–१ रत्तीदेखि ४ रत्तीसम्म बकाइनोको गेड़ा पिँधेर चौलानी र घ्यूसँग खानाले पुरानो प्रमेह नष्ट हुन्छ ।

१६ फोड़ा-फुन्सीमा–बकाइनोको फूल पिँधेर लेप गर्नाले फोड़ा-फुन्सी र अरू चर्म रोग पनि नष्ट हुन्छ ।

१७ फियो र कलेजाका रोगमा–३-४ रत्ती बकाइनोको तेल पानी-

७ सर्दीको सूजमा–बकाइनोको रस तातो पारी लगाउनाले सर्दीबाट पैदा भएको शोथ (सूज) नष्ट हुन्छ ।

८ वातमा–४ लाल बकाइनोको गेड़ाको चूर्णखानाले र बकाइनोको गेड़ाको धूलो खुर्सानीसँग पिँधेर लेप गर्नाले गठिया बात नष्ट हुन्छ ।

९ गृध्रसी वातमा–१-२ लाल बकाइनोको सत्त्व पानीमा मिलाएर पिलाउनाले र बकाइनोको जराको बोक्राको लेप जस्तो बनाई लेप गर्नाले गृध्रसी बात नष्ट हुन्छ ।

१० जुकामा–१ मासासम्म बकाइनोको पातको रस पिलाउनाले पेटका जुका मर्दछन् । जुकाले जरो आएको भए पनि नष्ट हुन्छ ।

११ अथवा–बकाइनोको सुकेको फल (गेड़ा) कागतीको अमिलोमा पिँधेर १ रत्तीदेखिन् ४ रत्ती सम्मको मात्रा गरी दिनाले, बच्चाको पेटमा हुने चुर्ना र जुका पनि नष्ट हुन्छन् । बकाइनोको लामो अन्तरछाला झिकेर कम्मरमा बाँध्नाले पनि जुकाहरु मर्दछन् ।

१२ अलकाईमा–बकाइनोको गेड़ा र मदिसे सौंप बराबर पिँधेर त्यसको बराबर मिश्री मिलाएर २ मासाको मात्रा गरी पानीसँग खानाले अलकाई नष्ट हुन्छ ।

१३ अथवा–१ पाउ बकाइनोको पातमा २ तोला सिंधेनून मिलाई पिँधेर बयर जत्रो गोली बनाउनू । १-१ गोली बेहान-बेलुका पानीसँग दिनाले अलकाई नष्ट हुन्छ ।

१४ पथरीमा–६ मासा बकाइनोको पातको रसमा ३ मासा जवाखार मिलाएर पिलाउनाले शर्कराश्मरी नष्ट हुन्छ ।

१५ प्रमेहमा–१ रत्तीदेखि ४ रत्तीसम्म बकाइनोको गेड़ा पिँधेर चौलानी र धूसँग खानाले पुरानो प्रमेह नष्ट हुन्छ ।

१६ फोड़ा-फुन्सीमा–बकाइनोको फूल पिँधेर लेप गर्नाले फोड़ा-फुन्सी र अरू चर्म रोग पनि नष्ट हुन्छ ।

१७ फियो र कलेजाका रोगमा–३-४ रत्ती बकाइनोको तेल पानी-

# आँक



नेपाली—आँक। हिन्दी—मदार। संस्कृत—अर्क।

१ खोकी र दममा–१॥ मासा आँकको फूल, १॥ मासा सिंधेनून, ३ लाल अफीम र ६ मासा ज्वानो सब चीज एकत्र गरी पिंधेर सानो केराउ बराबर गोली बनाउनू। ३-३ घण्टामा १-१ गोली तातो पानीमा दिनाले खोकी र दम नष्ट हुन्छ।

२ अथवा–आँकको फूल र मरिच बराबर लिएर पिंध्नू र १-१ लालको गोली बनाउनू। दिन भरमा ४ पटक १-१ गोली तातो पानी-सँग खान दिनू। दम, खोकी, छोप्ने व्यथा र वायुका रोग नष्ट हुन्छन।

३ अथवा–आँकको फूल, लाहोरी नुन र पिप्ला १-१ तोला लिई पिंधेर मरिच बराबरको गोली बनाउनू। राती सुत्ने बेला बालकलाई १ गोली र जवानलाई २ गोली तातो पानीसँग खुवाउनू। यसले सम्पूर्ण प्रकारका खोकी र दम आराम गर्छ। पेट दुखेमा, हैजा, अजीर्ण र सुतेको बखत मुखबाट राल बग्ने पनि फाइदा गर्छ।

# आँक



नेपाली—आँक। हिन्दी—मदार। संस्कृत—अर्क।

१ खोकी र दममा–१॥ मासा आँकको फूल, १॥ मासा सिंधेनून, ३ लाल अफीम र ६ मासा ज्वानो सब चीज एकत्र गरी पिंधेर सानो केराउ बराबर गोली बनाउनू। ३-३ घण्टामा १-१ गोली तातो पानीमा दिनाले खोकी र दम नष्ट हुन्छ।

२ अथवा–आँकको फूल र मरिच बराबर लिएर पिंध्नू र १-१ लालको गोली बनाउनू। दिन भरमा ४ पटक १-१ गोली तातो पानी-सँग खान दिनु। दम, खोकी, छोप्ने व्यथा र वायुका रोग नष्ट हुन्छन।

३ अथवा–आँकको फूल, लाहोरी नुन र पिप्ला १-१ तोला लिई पिंधेर मरिच बराबरको गोली बनाउनू। राती सुत्ने बेला बालकलाई १ गोली र जवानलाई २ गोली तातो पानीसँग खुवाउनु। यसले सम्पूर्ण प्रकारका खोकी र दम आराम गर्छ। पेट दुखेमा, हैजा, अजीर्ण र सुतेको बखत मुखबाट राल बग्ने पनि फाइदा गर्छ।

अघा रुघा र नजला पनि नष्ट हुन्छन् ।

११ कानको रोगमा–आँकको पहेंलो पात पुछेर त्यसमा घ्यू दल्नु र आगामा सेकाउनु, चैलाएपछि त्यसलाई हातले निचोरेर कानमा चुहाउनु । कान दुखेको नष्ट हुन्छ ।

१२ अथवा–आँकको प्वाल नपरेको पहेंलो पात लिएर आगोमा तताएर त्यसको रस कानमा हाल्नाले बहिरोपन नष्ट हुन्छ ।

१३ अथवा–आँकको फूल र कमलो पात, काञ्जी (अन्न कुहाई अमिलो पारेको रस) मा पिंधेर तिलको तेल र सिंधेनुन मिलाई स्यूँडीको डाँठ खोक्रो पारी त्यसमा माथिका औषधी हाल्नु र त्यो डाँठमा आँकको पातले लपेटेर धागोले बाँध्नु र त्यसमा कपड-मिट्टी गरेर आगामा पोल्नु । जब माथिको माटो रातो हुन्छ, तब त्यसलाई निकालेर त्यसको तातो रस झिकेर कानमा हाल्नु । यसले कान चसचसी घोच्ने, पोल्ने, कान चिलाउने र कानका खटिरा आदि नष्ट भई बहिरोपन पनि हटाई दिन्छ ।

१४ दाँतका रोगमा–आँकको दूधमा रुवो भिजाएर त्यसमा घ्यू लगाई तताएर बङ्गारामा राख्नाले बङ्गाराको पीडा नष्ट हुन्छ ।

१५ अथवा–आँकको जराको बोक्रा पानीमा घोटेर दाँतमा लगाउनाले दाँतका कीराहरू नष्ट हुन्छन् ।

१६ अथवा–आँकको जराको दतिउन लगाउनाले दाँत दुख्ने आदि रोग नष्ट हुन्छन् ।

१७ दर्द र सूजनमा–आँकको पात तताएर बाँध्नाले दुखेको नष्ट हुन्छ र यसले सूजमा पनि आराम गर्छ ।

१८ श्वास नलीको सूजनमा–पहिलो अवस्थाको श्वास-नलीको सूजमा १ रत्ती आँकको जराको धूलो १-१ घण्टामा दिनाले गला नरम हुन्छ, पसीना आउँछ, दिशा खलास गर्छ, कफ गिराउँछ र सूज पनि घटाउँछ । दोस्रो अवस्थामा कफलाई पातलो गराएर चाँड़ै नै कफ गिराउँछ ।

अघा रुघा र नजला पनि नष्ट हुन्छन् ।

११ कानको रोगमा–आँकको पहेंलो पात पुछेर त्यसमा घ्यू दल्नू र आगामा सेकाउनू, त्यसपछि त्यसलाई हातले निचोरेर कानमा चुहाउनू । कान दुखेको नष्ट हुन्छ ।

१२ अथवा–आँकको ध्वाल नपरेको पहेंलो पात लिएर आगोमा तताएर त्यसको रस कानमा हाल्नाले बहिरोपन नष्ट हुन्छ ।

१३ अथवा–आँकको फूल र कमलो पात, काञ्जी (अन्न कुहाई अमिलो पारेको रस) मा पिंधेर तिलको तेल र सिंधेनुन मिलाई स्यूँडीको डाँठ खोक्रो पारी त्यसमा माथिका औषधी हाल्नू र त्यो डाँठमा आँकको पातले लपेटेर धागोले बाँध्नू र त्यसमा कपड़-मिट्टी गरेर आगामा पोल्नू । जब माथिको माटो रातो हुन्छ, तब त्यसलाई निकालेर त्यसको तातो रस झिकेर कानमा हाल्नू । यसले कान चसचसी घोच्ने, पोल्ने, कान चिलाउने र कानका खटिरा आदि नष्ट भई बहिरोपन पनि हटाई दिन्छ ।

१४ दाँतका रोगमा–आँकको दूधमा रूवो भिजाएर त्यसमा घ्यू लगाई तताएर बङ्गारामा राख्नाले बङ्गाराको पीडा नष्ट हुन्छ ।

१५ अथवा–आँकको जराको बोक्रा पानीमा घोटेर दाँतमा लगाउनाले दाँतका कीराहरू नष्ट हुन्छन् ।

१६ अथवा–आँकको जराको दतिउन लगाउनाले दाँत दुख्ने आदि रोग नष्ट हुन्छन् ।

१७ दर्द र सूजनमा–आँकको पात तताएर बाँध्नाले दुखेको नष्ट हुन्छ र यसले सूजमा पनि आराम गर्छ ।

१८ श्वास नलीको सूजनमा–पहिलो अवस्थाको श्वास-नलीको सूजमा १ रत्ती आँकको जराको धूलो १-१ घण्टामा दिनाले गला नरम हुन्छ, पसीना आउँछ, दिशा खलास गर्छ, कफ गिराउँछ र सूज पनि घटाउँछ । दोस्रो अवस्थामा कफलाई पातलो गराएर चाँड़ै नै कफ गिराउँछ ।

हस्त-मैथुनबाट पैदा भएको नपुंसकतामा फाइदा गर्छ।

२६ श्लीपद ( गोड़ा सुनिएमा )–आँकको जरा घोटी लेप जस्तो बनाएर काञ्जीमा मिलाई सुनिएको ठाउँमा लेप गर्नू। श्लीपद नष्ट हुन्छ।

२७ घाउमा–आँकको पात सुकाई कुटेर धूलो पार्नु। त्यो धूलो घाउमा हाल्नाले खराब मासु हटेर नयाँ मासु पैदा गर्दछ र घाउ चाँड़ै नै पुरिन्छ।

२८ रक्तातिसारमा–२।३ लाल आँकको जराको बोक्राको धूलोले रक्तातिसार नाश गर्दछ।

२९ उपदंश आदि रक्त-दोषमा–आँकको जराको बोक्राको चूर्ण ६ लालसम्म खानाले र बाहिर लगाउनाले सबै जातका फोड़ा रक्त-दोष वा उपदंश अथवा अरू कुनै दोषबाट भएका भए पनि नष्ट हुन्छन्।

३० अथवा–उपदंशको दोस्रो अवस्थामा छालामा फोका पैदा भए आँकको जराको बोक्राको चूर्ण उपयोग गरे बड़ो फाइदा हुन्छ।

३१ पेट दुखेमा–आँकको पात तताएर पेटमा बाँधे पेट दुखेको नष्ट हुन्छ।

३२ सर्पको विषमा–आँकको जरा र कपासको जरा पानीमा पिंधेर पिउनू सर्पको विष उत्रन्छ।

३३ बिच्छीको विषमा–पहिले बिच्छीले टोकेको ठाउँमा गोकुल-धूपको धूप दिनू र आँकको पात पिंधेर टोकेको ठाउँमा लेप गर्नू। बिच्छीको विष उत्रन्छ।

३४ अथवा–टोकेको ठाउँमा आँकको दूध मले पनि विष नष्ट हुन्छ। बारुलो, माउरी, बच्छ्यूँ र अरिंगाल आदिको विषमा पनि आराम गर्छ।

३५ आँकको दूध निकाल्ने सरल तरीका–बोट उखेलेर माटो सफा गरी जरा माथिको बोक्रा मूला छोड़ाए जस्तो झिक्नू र बोक्रा सुकाउनू, बोट थोटा ठूलो भाँड़ामा राखिदिनू। भाँड़ामा सारा बोटको दूध आफै जरापट्टिबाट झर्छ यो विधिले एकै पटकमा धेरै दूध निक्लन्छ।

हस्त-मैथुनबाट पैदा भएको नपुंसकतामा फाइदा गर्छ ।

२६ श्लीपद (गोड़ा सुनिएमा)–आँकको जरा घोटी लेप जस्तो बनाएर काञ्जीमा मिलाई सुनिएको ठाउँमा लेप गर्नु । श्लीपद नष्ट हुन्छ।

२७ घाउमा–आँकको पात सुकाई कुटेर धूलो पार्नु । त्यो धूलो घाउमा हाल्नाले खराब मासु हटेर नयाँ मासु पैदा गर्दछ र घाउ चाँड़ै नै पुरिन्छ ।

२८ रक्तातिसारमा–२।३ लाल आँकको जराको बोक्राको धूलोले रक्तातिसार नाश गर्दछ ।

२९ उपदंश आदि रक्त-दोषमा–आँकको जराको बोक्राको चूर्ण ६ लालसम्म खानाले र बाहिर लगाउनाले सबै जातका फोड़ा रक्त-दोष वा उपदंश अथवा अरू कुनै दोषबाट भएका भए पनि नष्ट हुन्छन्।

३० अथवा–उपदंशको दोस्रो अवस्थामा छालामा फोका पैदा भए आँकको जराको बोक्राको चूर्ण उपयोग गरे बड़ो फाइदा हुन्छ ।

३१ पेट दुखेमा–आँकको पात तताएर पेटमा बाँधे पेट दुखेको नष्ट हुन्छ ।

३२ सर्पको विषमा–आँकको जरा र कपासको जरा पानीमा पिंधेर पिउनू सर्पको विष उत्रन्छ ।

३३ बिच्छीको विषमा–पहिले बिच्छीले टोकेको ठाउँमा गोकुल-धूपको धूप दिनू र आँकको पात पिंधेर टोकेको ठाउँमा लेप गर्नू । बिच्छीको विष उत्रन्छ ।

३४ अथवा–टोकेको ठाउँमा आँकको दूध मले पनि विष नष्ट हुन्छ । बारुलो, माउरी, बच्छ्यूँ र अरिंगाल आदिको विषमा पनि आराम गर्छ।

३५ आँकको दूध निकाल्ने सरल तरीका–बोट उखेलेर माटो सफा गरी जरा माथिको बोक्रा मूला छोड़ाए जस्तो झिक्नू र बोक्रा सुकाउनू, बोट यौटा ठूलो भाँड़ामा राखिदिनू । भाँड़ामा सारा बोटको दूध आफै जरापट्टिबाट झर्छ यो विधिले एकै पटकमा धेरै दूध निक्लन्छ ।



धूलो, ६ मासा जीरा र ६ मासा मिश्री मिलाएर चूर्ण गर्नू, ४-४ मासाको मात्रा गरी ३-३ घण्टामा तातो पानीमा दिनाले पुरानो भईसकेको आमातिसार पनि नष्ट हुन्छ ।

७ अथवा–१ वर्षको अमिलीको बोटको जरा र मरिच बराबर लिएर मोहीमा पिंधेर ३ मासाको परिमाण गरी दिनमा ३ पटक तातो पानीसँग दिनाले ६ दिनमा आमातिसार नष्ट हुन्छ ।

८ अथवा–१-२ मासा अमिलीको गेड़ा माथिको रातो बोक्रा मसीनोसँग पिंधी पानीसँग खानाले अतिसार, रक्तातिसार र आउँलाई पनि नष्ट गर्छ ।

९ अथवा–५ रत्ती अमिलीको गेड़ा, ५ रत्ती जीरा र ५ रत्ती मिश्री मिलाए पिंधेर दिनको २-३ पटक दिनाले आमातिसार नष्ट हुन्छ ।

१० अथवा–१ मासा अमिलीको गेड़ा मात्र पिंधी खानाले पनि उही गुण हुन्छ ।

११ दममा–२-३ रत्ती अमिलीको बोक्राको सत्व महसँग चाट्नाले दम नष्ट हुन्छ ।

१२ आँखाको रोगमा–अमिलीको फूल थिचेर आँखामा पुल्टिस जस्तो लगाउनाले आँखाको लाली र पीड़ा नष्ट हुन्छ ।

१३ सुन्नवातमा–अमिलीको बोक्रा थिचेर सुन्नवात (कुनै ठाउँमा छोएको पनि थाहा नपाउने) रोग नष्ट हुन्छ ।

१४ अलकाईमा–अमिलीको फूलको रस अलकाईमा लगाउनाले अलकाईको रगत थामिन्छ ।

१५ फोड़ामा–अमिलीको गेड़ा थिची पकाएर फोड़ामा बाँध्नाले फोड़ा आराम हुन्छ ।

१६ खराब घाउमा–अमिलीको पात पकाएको पानीले घाउ धोएर अमिलीकै पातको धूलो घाउमा लगाए घाउ सुक्छ ।

१७ सूज र मर्कोमा–अमिलीको पात पानीमा पकाएर पुल्टिस बाँध्नाले सूज र मर्कोको आराम हुन्छ। दमको परेकोमा पनि ठीक गर्छ।

धूलो, ६ मासा जीरा र ६ मासा मिश्री मिलाएर चूर्ण गर्नू, ४-४ मासाको मात्रा गरी ३-३ घण्टामा तातो पानीमा दिनाले पुरानो भईसकेको आमातिसार पनि नष्ट हुन्छ ।

७ अथवा–१ वर्षको अमिलीको बोटको जरा र मरिच बराबर लिएर मोहीमा पिंधेर ३ मासाको परिमाण गरी दिनमा ३ पटक तातो पानीसँग दिनाले ६ दिनमा आमातिसार नष्ट हुन्छ ।

८ अथवा–१-२ मासा अमिलीको गेड़ा माथिको रातो बोक्रा मसीनोसँग पिंधी पानीसँग खानाले अतिसार, रक्तातिसार र आउँलाई पनि नष्ट गर्छ ।

९ अथवा–५ रत्ती अमिलीको गेड़ा, ५ रत्ती जीरा र ५ रत्ती मिश्री मिलाए पिंधेर दिनको २-३ पटक दिनाले आमातिसार नष्ट हुन्छ ।

१० अथवा–१ मासा अमिलीको गेड़ा मात्र पिंधी खानाले पनि उही गुण हुन्छ ।

११ दममा–२-३ रत्ती अमिलीको बोक्राको सत्व महसँग चाट्नाले दम नष्ट हुन्छ ।

१२ आँखाको रोगमा–अमिलीको फूल थिचेर आँखामा पुल्टिस जस्तो लगाउनाले आँखाको लाली र पीड़ा नष्ट हुन्छ ।

१३ सुन्नवातमा–अमिलीको बोक्रा थिचेर सुन्नवात (कुनै ठाउँमा छोएको पनि थाहा नपाउने) रोग नष्ट हुन्छ ।

१४ अलकाईमा–अमिलीको फूलको रस अलकाईमा लगाउनाले अलकाईको रगत थामिन्छ ।

१५ फोड़ामा–अमिलीको गेड़ा थिची पकाएर फोड़ामा बाँध्नाले फोड़ा आराम हुन्छ ।

१६ खराब घाउमा–अमिलीको पात पकाएको पानीले घाउ धोएर अमिलीकै पातको धूलो घाउमा लगाए घाउ सुक्तछ ।

१७ सूज र मर्कोमा–अमिलीको पात पानीमा पकाएर पुल्टिस बाँध्नाले सूज र मर्केको आराम हुन्छ । दमको परेकोमा पनि ठीक गर्छ ।

# खयर

खोकीमा १
कफबाट रगत आएमा २
मुखको खटिरामा ३
दाँतको रोगमा ४, ५, ६, ७
कान पाकेमा ८
अतिसारमा ९, १०
फोड़ा-फुन्सीमा ११
घाउ खटिरामा १२
अलकाईमा १३
जुकामा १४
कुष्ठमा १५
कामोत्तेजनामा १६
सैनमा १७

नेपाली—खयर। हिन्दी—कत्था। संस्कृत—खदिर।

१ खोकीमा–२ रत्ती खयर २ रत्ती हलेदोको चूर्ण मिश्री मिलाएर तातो पानीसँग दिनू यसबाट सुक्खा खोकी नष्ट हुन्छ।

२ कफबाट रगत आएमा–३ मासा खयरको फलको धूलो महमा मिलाएर चाट्नाले कफबाट रगत आउने रोग नष्ट हुन्छ।

३ मुखको खटिरामा–सेतो खयर र कलमी शोरा बराबर पिंधि जिब्रोमा छरेर एक छिन कुल्ला गर्नू यसले मुख पाकेको, खटिरा आएको र गिजाका रोग समेत नष्ट हुन्छन्।

४ दाँतको रोगमा–१ तोला खयर, १ तोला दालचिनी र १ तोला जाइफल लिएर खूबसँग पिंध्नू र २-२ लालको गोली बनाएर राख्नू। यो गोली चुस्ने गर्नाले गिजा पाकेर पीप आउने, बाँटी दुख्ने र दाँत दुख्ने रोग पनि आराम हुन्छ। यही औषधी भेसलीन वा गाईको घ्यू मिलाई मलहम जस्तो बनाएर फोड़ामा लगाउनाले फोड़ा पनि आराम हुन्छ।

५ अथवा–खयरको धूलो र अफीम बराबर मिलाएर आधा लालको गोली बनाउनू र मुखमा हाल्नू अथवा धूलो नै मुखमा हालेर

# खयर



नेपाली—खयर । हिन्दी—कत्था । संस्कृत—खदिर ।

१ खोकीमा–२ रत्ती खयर २ रत्ती हलेदोको चूर्ण मिश्री मिलाएर तातो पानीसँग दिनू यसबाट सुक्खा खोकी नष्ट हुन्छ ।

२ कफबाट रगत आएमा–३ मासा खयरको फलको धूलो महमा मिलाएर चाट्नाले कफबाट रगत आउने रोग नष्ट हुन्छ ।

३ मुखको खटिरामा–सेतो खयर र कलमी शोरा बराबर पिंधी जिभ्रोमा छरेर एक छिन कुल्ला गर्नू यसले मुख पाकेको, खटिरा आएको र गिजाका रोग समेत नष्ट हुन्छन् ।

४ दाँतको रोगमा–१ तोला खयर, ९ तोला दालचिनी र १ तोला जाइफल लिएर खूबसँग पिंध्नू र २-२ लालको गोली बनाएर राख्नू । यो गोली चुस्ने गर्नाले गिजा पाकेर पीप आउने, घाँटी दुख्ने र दाँत दुख्ने रोग पनि आराम हुन्छ । यही औषधी भेसलीन वा गाईको घ्यू मिलाई मलहम जस्तो बनाएर फोड़ामा लगाउनाले फोड़ा पनि आराम हुन्छ ।

५ अथवा–खयरको धूलो र अफीम बराबर मिलाएर आधा लालको गोली बनाउनू र मुखमा हाल्नू अथवा धूलो नै मुखमा हालेर

पेटका जुका मर्छन, मामूली दिशा पनि रोकिन्छ। आन्द्राको घाउ र आउँ पनि नष्ट हुन्छ।

१५ कुष्ठमा–खयरको शर्बत बनाई प्रयोग गर्‍यो भने कुष्ठ, सूजाक र फोड़ा-फुन्सी पनि आराम हुन्छ; खयरको र गाईको घ्यूको लेप बनाई घाउमा प्रयोग गर्नू।

१६ कामोत्तेजनामा–१ तोला खयर र १ लाल कपूर मिलाई खानाले मनुष्य एकदम नामर्द हुन्छ। पुरुषत्व नष्ट हुन्छ। यो अलिकति मुखमा राखेर चूस्नाले लिगलिगे सुनिएको नष्ट हुन्छ र त्यसैबाट भएको खोकी पनि नष्ट हुन्छ।

१७ सैनमा–खयर र नीलो तुथाको लेप गर्नाले सैनको घाउ नष्ट हुन्छ।

●

पेटका जुका मर्छन्, मामूली दिशा पनि रोकिन्छ। आन्द्राको घाउ र आउँ पनि नष्ट हुन्छ।

१५ कुष्ठमा–खयरको शर्बत बनाई प्रयोग गऱ्यो भने कुष्ठ, सूजाक र फोड़ा-फुन्सी पनि आराम हुन्छ; खयरको र गाईको घ्यूको लेप बनाई घाउमा प्रयोग गर्नू।

१६ कामोत्तेजनामा–१ तोला खयर र १ लाल कपूर मिलाई खानाले मनुष्य एकदम नामर्द हुन्छ। पुरुषत्व नष्ट हुन्छ। यो अलिकति मुखमा राखेर चूस्नाले लिगलिगे सुनिएको नष्ट हुन्छ र त्यसैबाट भएको खोकी पनि नष्ट हुन्छ।

१७ सैनमा–खयर र नीलो तुथाको लेप गर्नाले सैनको घाउ नष्ट हुन्छ।



५ अथवा–हरियो धनियाँको रस आँखामा हाल्नाले बिफरको खटिरा आँखामा आउँदैन।

६ खल्वाट भएमा–धनियाँको धूलो कागतीको चुकमा मिलाएर लेप गर्‍यो भने खल्वाट नष्ट हुन्छ र रौं उम्रन्छ।

७ कपाल दुखेमा–३-४ मासा धनियाँ र अमला बराबर लिई रातो भिजाउनू र बेहान पिंधेर मिश्री मिलाई पिउनू; यसले गर्मीबाट भएको शिर-दर्द आराम हुन्छ।

८ नाथ्री फुटेमा–धनियाँको पात पिंधेर त्यसको रस नाकमा हाल्नाले र शिरमा लेप गर्नाले नाथ्री फुट्ने रोग नष्ट हुन्छ। रगत बन्द हुन्छ।

९ शूलमा–धनियाँको गेड़ाको धूलो र मिश्री मिलाई ५-६ मासा पानीसँग दियो भने गर्मीबाट भएको शूल नष्ट हुन्छ।

१० अतिसारमा–४-५ मासा धनियाँको भुटेको गेड़ा खानाले तुरुन्त दिशा बन्द हुन्छ।

११ रक्तातिसारमा–२।३ मासा धनियाँको गेड़ा पानीमा भिजाएर पिंधी छानेर खानाले रक्तातिसार नष्ट हुन्छ।

१२ जुकामा–१ मासा धनियाँको गेड़ाको चूर्ण रक्सीसँग खानाले पेटबाट जुका निस्कन्छन् र फेरि पैदा हुँदैनन्।

१३ शीतपित्तमा–हरियो धनियाँको रसमा तिलको तेल मिलाएर मालिश गर्नाले शीतपीत्त नष्ट हुन्छ।

१४ कामोत्तेजनामा–४-५ मासा धनियाँको गेड़ा पानीमा भिजाएर पिउनाले काम-शक्ति नष्ट हुन्छ।

१५ गर्मीको सूजनमा–हरियो धनियाँको रस र कागतीको रस मिलाएर लगाउनाले गर्मीको सूजन नष्ट हुन्छ।

१६ अथवा–धनियाँको ताजा पात पिंधेर त्यसमा जनाको पिठो र तिलको तेल मिलाएर लगाउनाले कठोर सूजन र जहर बातको सूज पनि नष्ट हुन्छ।

५ अथवा–हरियो धनियाँको रस आँखामा हाल्नाले बिफरको खटिरा आँखामा आउँदैन।

६ खल्वाट भएमा–धनियाँको धूलो कागतीको चुकमा मिलाएर लेप गर्‍यो भने खल्वाट नष्ट हुन्छ र रौं उम्रन्छ।

७ कपाल दुखेमा–३-४ मासा धनियाँ र अमला बराबर लिई राती भिजाउनू र बेहान पिंधेर मिश्री मिलाई पिउनू; यसले गर्मीबाट भएको शिर-दर्द आराम हुन्छ।

८ नाथ्री फुटेमा–धनियाँको पात पिंधेर त्यसको रस नाकमा हाल्नाले र शिरमा लेप गर्नाले नाथ्री फुट्ने रोग नष्ट हुन्छ। रगत बन्द हुन्छ।

९ शूलमा–धनियाँको गेड़ाको धूलो र मिश्री मिलाई ५-६ मासा पानीसँग दियो भने गर्मीबाट भएको शूल नष्ट हुन्छ।

१० अतिसारमा–४-५ मासा धनियाँको भुटेको गेड़ा खानाले तुरुन्त दिशा बन्द हुन्छ।

११ रक्तातिसारमा–२।३ मासा धनियाँको गेड़ा पानीमा भिजाएर पिंधी छानेर खानाले रक्तातिसार नष्ट हुन्छ।

१२ जुकामा–१ मासा धनियाँको गेड़ाको चूर्ण रक्सीसँग खानाले पेटबाट जुका निस्कन्छन् र फेरि पैदा हुँदैनन्।

१३ शीतपित्तमा–हरियो धनियाँको रसमा तिलको तेल मिलाएर मालिश गर्नाले शीतपीत्त नष्ट हुन्छ।

१४ कामोत्तेजनामा–४-५ मासा धनियाँको गेड़ा पानीमा भिजाएर पिउनाले काम-शक्ति नष्ट हुन्छ।

१५ गर्मीको सूजनमा–हरियो धनियाँको रस र कागतीको रस मिलाएर लगाउनाले गर्मीको सूजन नष्ट हुन्छ।

१६ अथवा–धनियाँको ताजा पात पिंधेर त्यसमा चनाको पिठो र तिलको तेल मिलाएर लगाउनाले कठोर सूजन र जहर बातको सूज पनि नष्ट हुन्छ।

# कपूर

| | |
|---|---|
| दममा १ | नाडी मन्द भएमा १४ |
| पुरानो खोकीमा २ | उन्मादमा १५ |
| रुघामा ३ | कामोत्तेजना भएमा १६ |
| स्नायु-पीडामा ४ | आम-वातमा १७ |
| वातमा ५, ६ | शीतपित्तमा १८ |
| मूर्च्छा र अनिद्र रोगमा ७ | नाथ्रो फुटेमा १९ |
| जरो र शीताङ्गमा ८ | चिलाउनेमा २० |
| पुरानो वातमा ९ | आँखाको फुलोमा २१ |
| प्रमेहमा १० | चिकरमा २२ |
| सुजाकमा ११ | संखियाको विषमा २३ |
| दाँतको पीडामा १२ | बिच्छीको विषमा २४ |
| हैजामा १३ | |

नेपाली—कपूर । हिन्दी—कपूर । संस्कृत—कर्पूर ।

१ दममा–१ तोला कपूर र १ तोला असल फुराएको हीङ मिलाएर ४-४ लालको गोली बनाउनू । दमले आक्रमण गरेको बखत २-२ घण्टा वा ३-३ घण्टामा रोगीलाई १-१ गोली मनतातो पानीमा दिनू र छातीमा तारपीनको तेल पनि मालिश गर्नू । यसबाट जस्तै पुरानो दम पनि आराम हुन्छ ।

२ पुरानो खोकीमा–१ मासा सुठो, १ मासा पिप्ला, १ मासा मरिच, ३ मासा मिश्री र १ मासा कपूर खूब राम्रोसँग खल गरी मिलाई पानीमा ३ लालको गोली बनाउनू, दिनको ३ पटक १-१ गोली मुखमा राखेर चुस्नू । पुरानो खोकी नष्ट हुन्छ ।

३ अथवा–कागतमा कपूर पोको पारेर पोल्नू र त्यसको धुवाँ रोगीको नाकमा पार्नू । रुघा नष्ट हुन्छ ।

# कपूर



नेपाली—कपूर । हिन्दी—कपूर । संस्कृत—कर्पूर ।

१ दममा–१ तोला कपूर र १ तोला असल फुराएको हीङ मिलाएर ४-४ लालको गोली बनाउनू । दमले आक्रमण गरेको बखत २-२ घण्टा वा ३-३ घण्टामा रोगीलाई १-१ गोली मनतातो पानीमा दिनू र छातीमा तारपीनको तेल पनि मालिश गर्नू । यसबाट जस्तै पुरानो दम पनि आराम हुन्छ ।

२ पुरानो खोकीमा–१ मासा सुठो, १ मासा पिप्ला, १ मासा मरिच, ३ मासा मिश्री र १ मासा कपूर खूब राम्रोसँग खल गरी सिलाई पानीमा २ लालको गोली बनाउनू, दिनको ३ पटक १-१ गोली मुखमा राखेर चुस्नू । पुरानो खोकी नष्ट हुन्छ ।

३ अथवा–कागतमा कपूर पोको पारेर पोल्नू र त्यसको धुवाँ रोगीको नाकमा पार्नू । रुघा नष्ट हुन्छ ।

१३ हैजामा–हैजामा हात-खुट्टा चिसो भए शुद्ध रक्सी ( रेक्टी-फाइड-स्पिरिट ) मा कपूर गालेर ८-१० थोपा पानीमा मिलाई बराबर पिलाउनू। हातगोडा तातेर आउँछ।

१४ नाडी मन्द भएमा–१ तोला शुद्ध कपूर, १ तोला फुराएको असल हींग र आधा तोला असल कस्तूरी अदुवाको रसमा मिलाएर २॥ लालको गोली बनाउनू। रोगीको नाडी क्षीण भएमा १ गोली दिनाले नाडी एकदम तेज भएर आउँछ। रोगी बेहोश भए यही औषधी उसको जिभ्रोमा लगाई दिनू। ४-४ घण्टामा यो औषधी दिनाले रोगी होशमा आउँछ र एकदम ठीक हुन्छ।

१५ उन्माद भएमा–२ रत्ती कपूर दिनको ३ पटक दिनाले प्रसुति कालमा भएको उन्माद, भूतोन्माद र अरू उन्मादमा पनि आराम हुन्छ।

१६ कामोत्तेजना भएमा–२ रत्ती कपूर दिनको २ पटक दिनाले सूजाकको अवस्थामा स्त्रीको योनि चिलाउने व्यथामा र कामोत्तेजना भएकोमा पनि फाइदा हुन्छ।

१७ आम-वातमा–२ रत्ती कपूर र आधा रत्ती अफीम सूठोको काढ़ासँग दिनाले जीर्ण आम-वात रोग नष्ट हुन्छ, पसीना आउँछ, पीडा हटाई दिन्छ र निद्रा पर्दछ।

१८ शीत-पित्तमा–नरिवलको तेलमा कपूर मिलाएर मालिश गर्नाले शीत-पित्त नष्ट हुन्छ।

१९ नाथ्रो फुटेमा–कपूर, गुलाफ पानीमा पिँधेर नाकमा हाल्नू र तालु र कञ्चटमा लेप गर्नू, नाथ्रो फुट्ने व्यथा नष्ट हुन्छ।

२० चिलाउनेमा–१ तोला कपूर, १ तोला सेतो खयर र आधा तोला सिन्दूर मिलाएर काँसको भाँडामा हाल्नू, त्यसमा १० तोला घ्यू हालेर हातले मल्नू र १२१ पटक पानीले धुनू। मलहम तैयार भए पाछ राख्नू। यो मलहमले घाउ चिलाउनेमा र कुहेको घाउमा पनि फाइदा गर्छ।

१३ हैजामा–हैजामा हात-खुट्टा चिसो भए शुद्ध रक्सी ( रेक्टीफाइड-स्पिरिट ) मा कपूर गालेर ८-१० थोपा पानीमा मिलाई बराबर पिलाउनू । हातगोडा तातेर आउँछ ।

१४ नाडी मन्द भएमा–१ तोला शुद्ध कपूर, १ तोला फुराएको असल हींग र आधा तोला असल कस्तूरी अदुवाको रसमा मिलाएर २॥ लालको गोली बनाउनू । रोगीको नाडी क्षीण भएमा १ गोली दिनाले नाडी एकदम तेज भएर आउँछ । रोगी बेहोश भए यही औषधी उसको जिब्रोमा लगाई दिनू । ४-४ घण्टामा यो औषधी दिनाले रोगी होशमा आउँछ र एकदम ठीक हुन्छ ।

१५ उन्माद भएमा–२ रत्ती कपूर दिनको ३ पटक दिनाले प्रसुति कालमा भएको उन्माद, भूतोन्माद र अरू उन्मादमा पनि आराम हुन्छ ।

१६ कामोत्तेजना भएमा–२ रत्ती कपूर दिनको २ पटक दिनाले सूजाकको अवस्थामा स्त्रीको योनि चिलाउने व्यथामा र कामोत्तेजना भएकोमा पनि फाइदा हुन्छ ।

१७ आम-वातमा–२ रत्ती कपूर र आधा रत्ती अफीम सूठोको काढ़ासँग दिनाले जीर्ण आम-वात रोग नष्ट हुन्छ, पसीना आउँछ, पीडा हटाई दिन्छ र निद्रा पर्दछ ।

१८ शीत-पित्तमा–नरिवलको तेलमा कपूर मिलाएर मालिश गर्नाले शीत-पित्त नष्ट हुन्छ ।

१९ नाथ्रो फुटेमा–कपूर, गुलाफ पानीमा पिंधेर नाकमा हाल्नू र तालु र कञ्चटमा लेप गर्नू, नाथ्रो फुट्ने व्यथा नष्ट हुन्छ ।

२० चिलाउनेमा–१ तोला कपूर, १ तोला सेतो खयर र आधा तोला सिन्दूर मिलाएर काँसको भाँडामा हाल्नू, त्यसमा १० तोला घ्यू हालेर हातले मल्नू र १२१ पटक पानीले धुनू । मलहम तैयार भए पछि राख्नू । यो मलहमले घाउ चिलाउनेमा र कुहेको घाउमा पनि फाइदा गर्छ ।

# कोइरालो



नेपाली—कोइरालो । हिन्दी—कचनार । संस्कृत—कोविदारः ।

१ मुखको खटिरामा–१ तोला कोइरालाको अन्तरछाला (बोक्रा) २ माना पानीमा पकाउनू । आधा माना पानी बाँकी रहेपछि त्यो पानीले कुल्ला गर्नू । मुखको खटिरा र घाउ कुनै औषधीले पनि फाइदा भएको छैन भने यसले फाइदा गर्छ । सुत्केरीको मुखको खटिरा पर्नी ठीक हुन्छ ।

२ अथवा–कोइरालाको बोक्रा र अनारको फूलको काढ़ा बनाएर कुल्ला गर्‍यो भने मुखको खटिरा र घाउ आदि नष्ट हुन्छन् ।

३ दाँतको रोगमा–कोइरालाको बोक्रा सुकाएर धूलो पारेर फटकिरी मिलाएर दाँत माभनाले दाँतका तमाम रोगहरू नष्ट हुन्छन् ।

४ अथवा–कोइरालाको काठको कोइला बनाएर त्यसमा फटकिरी र सिंधेनुन मिलाई मञ्जन गर्नाले पनि दाँतका सम्पूर्ण रोग नष्ट हुन्छन् ।

५ गाँड़ र कण्ठमाला–कोइरालाको बोक्राको धूलो चौलानी र अदुवाको रससँग बेहानबेलुका लगाउनाले कण्ठमाला र गाँड़ नष्ट हुन्छ ।

# कोइरालो

| | |
|---|---|
| मुखको खटिरामा १, २ | आउँमासीमा १६, १७ |
| दाँतका रोगमा ३, ४ | कुष्ठमा १८ |
| गाँड़ र गण्डमालामा ५, ६, ७, ८ | जुकामा १९, २० |
| प्रमेहमा ९ | कलेजाको रोगमा २१ |
| पेटको रोगमा १० | घाउ खटिरामा २२ |
| पेटको कमजोरीमा ११ | फोड़ामा २३ |
| अलकाईमा १२, १३, १४, १५ | सर्पको विषमा २४ |

नेपाली—कोइरालो। हिन्दी—कचनार। संस्कृत—कोविदारः।

१ मुखको खटिरामा–५ तोला कोइरालाको अत्तरछाला (बोक्रा) २ माना पानीमा पकाउनू। आधा माना पानी बाँकी रहेपछि त्यो पानीले कुल्ला गर्नू। मुखको खटिरा र घाउ कुनै औषधीले पनि फाइदा भएको छैन भने यसले फाइदा गर्छ। सुल्केरीको मुखको खटिरा पनि ठीक हुन्छ।

२ अथवा–कोइरालाको बोक्रा र अनारको फूलको काढ़ा बनाएर कुल्ला गऱ्यो भने मुखको खटिरा र घाउ आदि नष्ट हुन्छन्।

३ दाँतको रोगमा–कोइरालाको बोक्रा सुकाएर धूलो पारेर फटकिरी मिलाएर दाँत माझ्नाले दाँतका तमाम रोगहरू नष्ट हुन्छन्।

४ अथवा–कोइरालाको काठको कोइला बनाएर त्यसमा फटकिरी र सिंधेनुन मिलाई मञ्जन गर्नाले पनि दाँतका सम्पूर्ण रोग नष्ट हुन्छन्।

५ गाँड़ र कण्ठमाला–कोइरालाको बोक्राको धूलो चौलानी र दुवाको रससँग बेहानबेलुका लगाउनाले कण्ठमाला र गाँड़ नष्ट हुन्छ।

खाएर पानीले निल्यो भने आउँ रोकिन्छ ।

१७ अथवा–२ तोला कोइरालो बोक्रा र सुठो मिलाई काढ़ा पकाउनू र त्यो काढ़ामा मदिसे सौंफको १ मासा धूलो मिलाई खानू। यसबाट आउँ-रगतको व्यथा आराम हुन्छ ।

१८ कुष्ठमा–१ तोला कोइरालाको बोक्राको काढ़ामा २० थोपा बक्चीको तेल मिलाई पिउनाले कुष्ठ रोग आराम हुन्छ।

१९ जुकामा–१ तोला पहेंलो कोइरालाको बोक्राको काढ़ा पिउनाले आन्द्राको कीरा (जुका) मर्दछन् ।

२० अथवा–१ तोला कोइरालाको कोपिलाको काढ़ा पिए पनि जुका मर्दछन् ।

२१ कलेजाको रोगमा–१ तोला कोइरालाको जराको बोक्राको काढ़ा पकाएर पिउनाले कलेजा सुनिएको नष्ट हुन्छ ।

२२ घाउ र खटिरामा–कोइरालाको बोक्राको काढ़ाले घाउ धुनाले घाउ शुद्ध हुन्छ र चाँड़ै भरिन्छ ।

२३ फोड़ामा–कोइरालाको जरा छायामा सुकाएर धूलो पार्नू, त्यसमा चौलानी हाल्नू र तताएर पुल्टिस बाँध्नाले कचमचिएको र नपाकेको फोड़ा यसले चाँड़ै पकाइदिन्छ ।

२४ सर्पको विषमा–कोइरालाको ताजा बिउको लेदो बनाएर त्यसमा कागतीको अमिलो हालेर सर्पले टोकेको ठाउँमा लगाइदिनू, यसले सर्पको विष उत्रन्छ र बिच्छीको विष पनि नष्ट हुन्छ ।

खाएर पानीले निल्यो भने आउँ रोकिन्छ ।

१७ अथवा–२ तोला कोइरालो बोक्रा र सुठो मिलाई काढ़ा पकाउनू र त्यो काढ़ामा मद्रिसे सौंफको १ मासा धूलो मिलाई खानू। यसबाट आउँ-रगतको व्यथा आराम हुन्छ ।

१८ कुष्ठमा–१ तोला कोइरालाको बोक्राको काढ़ामा २० थोपा बकुचीको तेल मिलाई पिउनाले कुष्ठ रोग आराम हुन्छ ।

१९ जुकामा–१ तोला पहेंलो कोइरालाको बोक्राको काढ़ा पिउनाले आन्द्राको कीरा ( जुका ) मर्दछन् ।

२० अथवा–१ तोला कोइरालाको कोपिलाको काढ़ा पिए पनि जुका मर्दछन् ।

२१ कलेजाको रोगमा–१ तोला कोइरालाको जराको बोक्राको काढ़ा पकाएर पिउनाले कलेजा सुनिएको नष्ट हुन्छ ।

२२ घाउ र खटिरामा–कोइरालाको बोक्राको काढ़ाले घाउ धुनाले घाउ शुद्ध हुन्छ र चाँड़ै भरिन्छ ।

२३ फोड़ामा–कोइरालाको जरा छायामा सुकाएर धूलो पार्नु, त्यसमा चौलानी हाल्नू र तताएर पुल्टिस बाँधनाले कचमचिएको र नपाकेको फोड़ा यसले चाँड़ै पकाइदिन्छ ।

२४ सर्पको विषमा–कोइरालाको ताजा बिउको लेदो बनाएर त्यसमा कागतीको अमिलो हालेर सर्पले टोकेको ठाउँमा लगाइदिनू, यसले सर्पको विष उत्रन्छ र बिच्छीको विष पनि नष्ट हुन्छ ।

५ कलेजाको दाहमा–पाकेको फर्सी उसिनेको रस र मिश्री मिलाई खानाले कलेजाको घुसेको गर्मी र पित्ताबाट पैदा भएको बेचैनी पनि नष्ट हुन्छ।

६ पिसाब खोल्नु परेमा–उसिनेको पाकेको फर्सीको रसमा जवाखार ३।४ मासा मिलाई पिउनाले रोकिएको पिसाब खुल्दछ र मिगौंला पनि शुद्ध हुन्छ।

७ दिशा खलास गर्नमा–पाकेको फर्सीको तकारीमा सुठो हाली खानाले दिशा खलास हुन्छ।

८ पित्तको रोगमा–पाकेको फर्सीको तर्कारीमा अमिलो दारिम र काँचो दाख मिलाई खानाले पित्त-सम्बन्धी रोग नष्ट हुन्छ।

९ कपाल दुखेमा–फर्सी, अमिलो र मिश्री पकाएर मलेर छानी पिउनाले दिमागको गर्मी, कपाल दुख्ने र पागलपन नष्ट हुन्छ। (यसको वात-कफ-सम्बन्धी रोगमा धेरै प्रयोग नगर्नू।)

१० अलकाईमा–फर्सीको सुकेको बोक्रा पिंधेर त्यसमा मिश्री मिलाई ३-४ मासा पानीमा खानाले आन्द्रा र अलकाईबाट रगत आउन बन्द हुन्छ।

११ आमाशयको दाहमा–पाकेको फर्सी पोलेर रस निकालेर २-३ तोला पिउनाले कलेजा, मेदा, हृदय, फोक्सो र आमाशयको दाह पनि नष्ट हुन्छ।

१२ जुकामा–८-१० दाना फर्सीको बिउ पिंध्नू, त्यसमा पानी मिलाई खाली पेटमा खुवाउनाले जुका नष्ट हुन्छन् (यो औषधी खाएको ४-५ घण्टा पछि हर्राको धूलो खाएर दिशा लगाउनु पर्छ।)

१३ छाती पोलेमा–फर्सीको बिउ १०-१२ गेड़ा पानीमा पिंधी मिश्री मिलाई पिउनाले छाती पोल्ने मुखबाट रगत आउने र पिसाब पोल्ने आदि रोग नष्ट भई गर्मीबाट पैदा भएका रोग र मूर्छाको रोग पनि नष्ट हुन्छन्। यसले छाती र दिमागलाई पनि तागत दिन्छ।

१४ थुनिलोमा–पाकेको फर्सीको भेट्नू पानीमा घोटी तताएर

५ कलेजाको दाहमा–पाकेको फर्सी उसिनेको रस र मिश्री मिलाई खानाले कलेजाको घुसेको गर्मी र पित्ताबाट पैदा भएको बेचैनी पनि नष्ट हुन्छ ।

६ पिसाब खोल्नु परेमा–उसिनेको पाकेको फर्सीको रसमा जवा-खार ३।४ मासा मिलाई पिउनाले रोकिएको पिसाब खुल्दछ र मिर्गौला पनि शुद्ध हुन्छ ।

७ दिशा खलास गर्नमा–पाकेको फर्सीको तर्कारीमा सुठो हाली खानाले दिशा खलास हुन्छ ।

८ पित्तको रोगमा–पाकेको फर्सीको तर्कारीमा अमिलो दारिम र काँचो दाख मिलाई खानाले पित्त-सम्बन्धी रोग नष्ट हुन्छ ।

९ कपाल दुखेमा–फर्सी, अमिली र मिश्री पकाएर मलेर छानी पिउनाले दिमागको गर्मी, कपाल दुख्ने र पागलपन नष्ट हुन्छ । (यसको वात-कफ-सम्बन्धी रोगमा धेरै प्रयोग नगर्नू ।)

१० अलकाईमा–फर्सीको सुकेको बोक्रा पिंधेर त्यसमा मिश्री मिलाई ३-४ मासा पानीमा खानाले आन्द्रा र अलकाईबाट रगत आउन बन्द हुन्छ ।

११ आमाशयको दाहमा–पाकेको फर्सी पोलेर रस निकालेर २-३ तोला पिउनाले कलेजा, मेदा, हृदय, फोक्सो र आमाशयको दाह पनि नष्ट हुन्छ ।

१२ जुकामा–८-१० दाना फर्सीको बिउ पिंध्नू, त्यसमा पानी मिलाई खाली पेटमा खुवाउनाले जुका नष्ट हुन्छन् (यो औषधी खाएको ४-५ घण्टा पछि हर्रोको धूलो खाएर दिशा लगाउनू पर्छ ।)

१३ छाती पोलेमा–फर्सीको बिउ १०-१२ गेड़ा पानीमा पिंधी मिश्री मिलाई पिउनाले छाती पोल्ने मुखबाट रगत आउने र पिसाब पोल्ने आदि रोग नष्ट भई गर्मीबाट पैदा भएका रोग र मूर्च्छाको रोग पनि नष्ट हुन्छन् । यसले छाती र दिमागलाई पनि तागत दिन्छ ।

१४ थुनिलोमा–पाकेको फर्सीको भेट्नू पानीमा घोटी तताएर

# कुभिण्डो

क्षय रोगमा १, २, ३
रक्त-पित्तमा ४, ५
खोकी र दममा ६
उन्मादमा ७, ८
छारे रोगमा ९, १०
पिसाब पोल्नेमा ११
मधु-मेहमा १२
जलेजाको गर्मीमा १३
अलकाईमा १४
हैजामा १५
जुकामा १६
शूलमा १७
रक्त-प्रदरमा १८

नेपाली—कुभिण्डो। हिन्दी—पेठा। संस्कृत—कूष्माण्ड।

१ क्षय रोगमा–कुभिण्डोको रसमा २ लाल काँचो लाहा मिलाई १ तोला पिउनाले क्षय रोग नष्ट हुन्छ।

२ अथवा–क्षय-रोगीले कुभिण्डोको तर्कारी नियमित रूपले व्यवहार गर्ने गऱ्यो भने क्षय-रोग नष्ट हुन्छ।

३ अथवा–कुभिण्डोको तर्कारी, कुभिण्डोको रसमा पकाएको दूधको र हर प्रकारको खानामा कुभिण्डोको नै प्रयोग गर्ने गऱ्यो भने क्षय रोग अवश्यमेव नष्ट हुन्छ।

४ रक्त-पित्तमा–कुभिण्डोको १ तोला रस पिउनाले हर प्रकारको रक्त-स्राव आराम हुन्छ।

५ अथवा–उँभो र उँधो दुवै किसिमका रक्त-पित्तमा कुभिण्डोको धेरै प्रकारसँग सेवन गर्नू अर्थात् तर्कारी र अरू किसिमसँग पनि प्रयोग गऱ्यो भने रक्त-पित्त नष्ट हुन्छ।

६ खोकी र दममा–कुभिण्डोको जराको चूर्ण गरी ३ मासाको मात्रामा तातो पानीसँग खानाले दम र खोकी नष्ट हुन्छ।

७ उन्मादमा–उन्मादमा जब रोगीका आँखा राता हुन्छन्,

# कुभिण्डो

| | |
|---|---|
| क्षय रोगमा १, २, ३ | जलेजाको गर्मीमा १३ |
| रक्त-पित्तमा ४, ५ | अलकाईमा १४ |
| खोकी र दममा ६ | हैजामा १५ |
| उन्मादमा ७, ८ | जुकामा १६ |
| छारे रोगमा ९, १० | शूलमा १७ |
| पिसाब पोल्नेमा ११ | रक्त-प्रदरमा १८ |
| मधु-मेहमा १२ | |

नेपाली—कुभिण्डो। हिन्दी—पेठा। संस्कृत—कूष्माण्ड।

१ क्षय रोगमा–कुभिण्डोको रसमा २ लाल काँचो लाहा मिलाई १ तोला पिउनाले क्षय रोग नष्ट हुन्छ।

२ अथवा–क्षय-रोगीले कुभिण्डोको तर्कारी नियमित रूपले व्यवहार गर्ने गर्‍यो भने क्षय-रोग नष्ट हुन्छ।

३ अथवा–कुभिण्डोको तर्कारी, कुभिण्डोको रसमा पकाएको दूधको र हर प्रकारको खानामा कुभिण्डोको नै प्रयोग गर्ने गर्‍यो भने क्षय रोग अवश्यमेव नष्ट हुन्छ।

४ रक्त-पित्तमा–कुभिण्डोको १ तोला रस पिउनाले हर प्रकारको रक्त-स्राव आराम हुन्छ।

५ अथवा–उँभो र उँधो दुवै किसिमका रक्त-पित्तमा कुभिण्डोको धेरै प्रकारसँग सेवन गर्नू अर्थात् तर्कारी र अरू किसिमसँग पनि प्रयोग गर्‍यो भने रक्त-पित्त नष्ट हुन्छ।

६ खोकी र दममा–कुभिण्डोको जराको चूर्ण गरी ३ मासाको मात्रामा तातो पानीसँग खानाले दम र खोकी नष्ट हुन्छ।

७ उन्मादमा–उन्मादमा जब रोगीका आँखा राता हुन्छन्,

पानीसँग दिनाले आन्द्रा र अलकाईबाट आउने रगत बन्द हुन्छ।

१५ अथवा–६ मासा कुभिण्डोको फूल पिंधेर दिनाले अलकाई र हैजा पनि आराम हुन्छ।

१६ हैजामा–कुभिण्डोको बिउको तेल १। तोला पिलाएर ३ घंटा पछि हलुका जुलाब दियो भने बस्ति र मूत्रेन्द्रियको शूल पथरी र मूत्र-कृच्छ्र पनि आराम हुन्छ।

१७ शूलमा–कुभिण्डो टुक्रा पारेर घाममा सुकाउनू र यौटा हाँडीमा हालेर मुख बन्द गरिदिनू र कपड़मिट्टी गर्नू। सुकेपछि चुलोमा बसाल्नू र आँच दिनू (यसरी आँच दिनू कि खरानी सेतो नहोस्, कालै रहोस्) र खरानी पार्नू; अनि सेलाएपछि निकाल्नू र त्यो कोइला पिंध्नू र त्यसको बराबर सुठोको धूलो हाल्नू, अनि कपड़छान गरेर राख्नू। खाना खाएपछि ३ मासाको मात्रामा तातो पानीसँग खानाले जस्तै पुरानो भएको शूल-रोग पनि आराम हुन्छ।

१८ रक्त-प्रदरमा–[1]कुभिण्डोको ३ तोला रसमा १ तोला मिश्री मिलाई दिनाले रक्तप्रदर आराम हुन्छ। शरीरको जुन अङ्गबाट आएको रक्त भए पनि यो औषध लाउने र खाने गर्नाले आराम हुन्छ।



१–गर्भावस्थामा कुभिण्डोको प्रयोग नगर्नू, यसले गर्भ गिराउँछ।

पानीसँग दिनाले आन्द्रा र अलकाईबाट आउने रगत बन्द हुन्छ ।

१५ अथवा–६ मासा कुभिण्डोको फूल पिंधेर दिनाले अलकाई र हैजा पनि आराम हुन्छ ।

१६ हैजामा–कुभिण्डोको बिउको तेल १। तोला पिलाएर ३ घंटा पछि हलुका जुलाब दियो भने वस्ति र मूत्रेन्द्रियको शूल पथरी र मूत्र-कृच्छ्र पनि आराम हुन्छ ।

१७ शूलमा–कुभिण्डो टुक्रा पारेर घाममा सुकाउनू र यौटा हाँड़ीमा हालेर मुख बन्द गरिदिनू र कपड़मिट्टी गर्नू । सुकेपछि चुलोमा बसाल्नू र आँच दिनू ( यसरी आँच दिनू कि खरानी सेतो नहोस्, कालै रहोस् ) र खरानी पार्नु; अनि सेलाएपछि निकाल्नू र त्यो कोइला पिंध्नू र त्यसको बराबर सुठोको धूलो हाल्नू, अनि कपड़छान गरेर राख्नू । खाना खाएपछि ३ मासाको मात्रामा तातो पानीसँग खानाले जस्तै पुरानो भएको शूल-रोग पनि आराम हुन्छ ।

१८ रक्त-प्रदरमा–[1]कुभिण्डोको ३ तोला रसमा १ तोला मिश्री मिलाई दिनाले रक्तप्रदर आराम हुन्छ । शरीरको जुन अङ्गबाट आएको रक्त भए पनि यो औषध लाउने र खाने गर्नाले आराम हुन्छ ।



१–गर्भावस्थामा कुभिण्डोको प्रयोग नगर्नू, यसले गर्भ गिराउँछ ।

फाइदा गर्छ ।

५ अलकाईमा–२-३ मासा कमलको केशर, मिश्री र नौनी मिलाएर दियो भने रगत आउने-अलकाई आराम हुन्छ ।

६ छाती र घाँटीको पीडामा–१ तोलासम्म कमलको जरा पिंधेर पानीसँग खानाले छाती र घाँटी दुख्ने व्यथा नष्ट हुन्छ ।

७ कलेजाको व्यथामा–६ मासादेखि १ तोलासम्म कमलको फूल पिंधेर मिश्री मिलाई खानाले कलेजाको गर्मी, रक्तातिसार, हैजा र जरो पनि नष्ट हुन्छ । यसले छाती पनि बलियो गराउँछ ।

८ प्रमेहमा–६ मासा कमलगट्टाको गुदी पिंधी १ तोला त्रिफलाको काढासँग दिए, यसबाट पुरानो प्रमेह र धातु सम्बन्धी सम्पूर्ण रोग नष्ट हुन्छन् ।

९ अनैच्छिक वीर्य-पातमा–१ तोला कमलको जरा पिंधेर दूधसँग पियो भने वीर्य गाढ़ा हुन्छ र अनैच्छिक वीर्य-पात नष्ट हुन्छ, स्वप्न दोष आदि धातु सम्बन्धी दोष पनि नष्ट हुन्छन् ।

१० गर्भ-पुष्टिमा–१-२ मासा कमलगट्टाको गुदी दूधसँग दिनाले गर्भ पुष्ट हुन्छ, पिसाबको व्यथा र रगतका विकार पनि नष्ट भई शरीर पुष्ट गराउँछ ।

११ गर्भ-स्रावमा–कमलको डाँठ ५ मासा र नागकेशर (नागेश्वरीको फूल) ३ लाल पिंधेर दूधसँग पिलाउनाले दोस्रो महीनामा गर्भ-स्राव हुने व्यथा नष्ट हुन्छ, गर्भ पनि पुष्ट हुन्छ र स्त्रीको धेरै रोगहरू नष्ट हुन्छन् ।

१२ रक्त-प्रदरमा–२-३ मासा कमलको केशर र मिश्री धूलो पारी पानीसँग पिउनाले रक्त-प्रदर र अलकाई नष्ट हुन्छ ।

१३ अथवा–कमलको डाँठको धागो र मिश्री पिंधी १ तोलाको मात्रामा पानीसँग खानाले रगतको अलकाई र रक्त-प्रदर नष्ट हुन्छन् ।

१४ अथवा–यही औषधी मह र ताजा नौनीसँग खाए पनि हुन्छ ।

१५ स्तन गिरेकोमा–आधा तोलासम्म कमल गट्टा पिंधेर मिश्री

फाइदा गर्छ।

५ अलकाईमा–२-३ मासा कमलको केशर, मिश्री र नौनी मिलाएर दियो भने रगत आउने-अलकाई आराम हुन्छ।

६ छाती र घाँटीको पीडामा–१ तोलासम्म कमलको जरा पिंधेर पानीसँग खानाले छाती र घाँटी दुख्ने व्यथा नष्ट हुन्छ।

७ कलेजाको व्यथामा–६ मासादेखि १ तोलासम्म कमलको फूल पिंधेर मिश्री मिलाई खानाले कलेजाको गर्मी, रक्तातिसार, हैजा र जरो पनि नष्ट हुन्छ। यसले छाती पनि बलियो गराउँछ।

८ प्रमेहमा–६ मासा कमलगट्टाको गुदी पिंधी १ तोला त्रिफलाको काढासँग दिनु, यसबाट पुरानो प्रमेह र धातु सम्बन्धी सम्पूर्ण रोग नष्ट हुन्छन्।

९ अनैच्छिक वीर्य-पातमा–१ तोला कमलको जरा पिंधेर दूधसँग पियो भने वीर्य गाढा हुन्छ र अनैच्छिक वीर्य-पात नष्ट हुन्छ, स्वप्न दोष आदि धातु सम्बन्धी दोष पनि नष्ट हुन्छन्।

१० गर्भ-पुष्टिमा–१-२ मासा कमलगट्टाको गुदी दूधसँग दिनाले गर्भ पुष्ट हुन्छ, पिसाबको व्यथा र रगतका विकार पनि नष्ट भई शरीर पुष्ट गराउँछ।

११ गर्भ-स्रावमा–कमलको डाँठ ५ मासा र नागकेशर (नागेश्वरीको फूल) ३ लाल पिंधेर दूधसँग पिलाउनाले दोस्रो महीनामा गर्भ-स्राव हुने व्यथा नष्ट हुन्छ, गर्भ पनि पुष्ट हुन्छ र स्त्रीको धेरै रोगहरू नष्ट हुन्छन्।

१२ रक्त-प्रदरमा–२।३ मासा कमलको केशर र मिश्री धूलो पारी पानीसँग पिउनाले रक्त-प्रदर र अलकाई नष्ट हुन्छ।

१३ अथवा–कमलको डाँठको धागो र मिश्री पिंधी १ तोलाको मात्रामा पानीसँग खानाले रगतको अलकाई र रक्त-प्रदर नष्ट हुन्छन्।

१४ अथवा–यही औषधी मह र ताजा नौनीसँग खाए पनि हुन्छ।

१५ स्तन गिरेकोमा–आधा तोलासम्म कमल गट्टा पिंधेर मिश्री

अरू चमरोग पनि नष्ट हुन्छन् ।

२५ दादमा–कमलको जरा घोटी त्यसमा सुठोको धूलो र न्याग मिलाई लेप गर्नाले जस्तै पुरानो दाद भए पनि नष्ट हुन्छ ।

२६ कमल-पित्तमा–६ मासा कमलको फूल र ३ मासा द्रोणपुष्पी ( गाएटे झार ) पिंधी, मिश्री मिलाई पिलाउनाले कमल-पित्त, पित्त-ज्वर र औलोको जरो समेत नष्ट हुन्छ । कमल-पित्तमा द्रोणपुष्पीको रस आँखामा पनि हाल्नू ।

२७ सर्पको विषमा–३-४ तोला सेतो कमलको जरा पिंधेर ३ तोला मिश्री मिलाई खानाले र जरा पिंधी टोकेको ठाउँमा लगाउनाले गोमन सर्पले टोकेको बिष उत्रन्छ । रोगी बेहोश भएको भए पनि होश खुल्दछ र रोगी बाँच्दछ ।

२८ अथवा–१ तोला कमलको केशर र १ तोला मरिच पिंधेर पिलाउनू र औषधी लगाउनाले पनि सर्प-विष नष्ट हुन्छ ।

२९ बिच्छीको विषमा–२ तोला कमलको फूल पिंधी मिश्री मिलाई खानाले र टोकेको ठाउँमा लगाउनाले पनि बिच्छी र सर्पको विष उत्रन्छ ।



अरू चमरोग पनि नष्ट हुन्छन् ।

२५ दादमा–कमलको जरा घोटी त्यसमा सुठोको धूलो र म्वाग मिलाई लेप गर्नाले जस्तै पुरानो दाद भए पनि नष्ट हुन्छ ।

२६ कमल-पित्तमा–६ मासा कमलको फूल र ३ मासा द्रोणपुष्पी (गाएटे झार) पिंधी, मिश्री मिलाई पिलाउनाले कमल-पित्त, पित्त-ज्वर र औलोको जरो समेत नष्ट हुन्छ । कमल-पित्तमा द्रोणपुष्पीको रस आँखामा पनि हाल्नू ।

२७ सर्पको विषमा–३-४ तोला सेतो कमलको जरा पिंधेर ३ तोला मिश्री मिलाई खानाले र जरा पिंधी टोकेको ठाउँमा लगाउनाले गोमन सर्पले टोकेको विष उत्रन्छ । रोगी बेहोश भएको भए पनि होश खुल्दछ र रोगी बाँच्दछ ।

२८ अथवा–१ तोला कमलको केशर र १ तोला मरिच पिंधेर पिलाउनू र औषधी लगाउनाले पनि सर्प-विष नष्ट हुन्छ ।

२९ बिच्छीको विषमा–२ तोला कमलको फूल पिंधी मिश्री मिलाई खानाले र टोकेको ठाउँमा लगाउनाले पनि बिच्छी र सर्पको विष उत्रन्छ ।

६ अथवा–१-२ तोला करेलाको पातको रस पिलाउनाले आन्द्राका जुकाहरू मर्दछन् ।

७ विफरमा–१ तोला करेलाको पातको ताजा रसमा १ मासा हलेदो मिलाई पिलाउनाले विफर र विफरका उपद्रव र दादुराहरू नष्ट हुन्छन् । विफरहरू फैलिएको बखतमा यो औषधि खाने गर्नाले विफर आदिको डर हुँदैन, कदाचित् आयो भने पनि ज्यादा जोड़ गर्न सक्तैन ।

८ अलकाईमा–१ तोला करेलाको रस र ४-५ मासा हर्रोको धूलो मिलाई बराबर सेवन गर्नाले अलकाईले दुःख दिन सक्तैन र आराम हुन्छ ।

९ पथरीमा–३ दिनसम्म ३ तोला करेलाको हरियो पातको रस, १॥ तोला दहीसँग मिलाएर ५-६ तोला मोही बनाएर पिलाउनू, अनि ३ दिनसम्म औषधि बन्द गर्नू र ४ दिनसम्म फेरि यही क्रमले औषधी खानू, अनि ४ दिन बन्द गर्नू । फेरि ५ दिनसम्म खानू, अनि फेरि ५ दिन बन्द गर्नु । यही क्रमले ७ दिसम्म पुऱ्याउनू । जस्तै पुरानो पथरी रोग भए पनि नष्ट हुन्छ । पथ्यमा खाली चामलको जाउलो मात्र दिनू ।

१० सूजाकमा–१ तोला करेलाको पातको रस मिश्री मिलाई केही दिन नित्य सेवन गर्नाले सूजाक नष्ट हुन्छ ।

११ गठिया बातमा–करेलाको काँचो फलको रस तताएर लेप गर्नाले गठिया-बात नष्ट हुन्छ ।

१२ अथवा–करेलाको फल चक्कूले ताछेर भित्रको भाग यौटा हाँड़ीमा राखी बफाउनू र अलीकति मिश्री मिलाएर तात्तातै रोगीलाई खुवाउनू, यस्तो क्रमले १ दिनमा १ पाउ अन्दाजी करेला खायो भने वातको रोग ( जोर्नि बात र स्नायु-वात ) आराम हुन्छ । कमसे कम १० दिनसम्म यसको लगातार सेवन गर्नु पर्दछ ।

१३ फोड़ामा–करेलाको पातको रस पकाएर बाक्लो पारी फोड़ामा

६ अथवा–१-२ तोला करेलाको पातको रस पिलाउनाले आन्द्राका जुकाहरू मर्दछन्।

७ विफरमा–१ तोला करेलाको पातको ताजा रसमा १ मासा हलेदो मिलाई पिलाउनाले विफर र विफरका उपद्रव र दादुराहरू नष्ट हुन्छन्। विफरहरू फैलिएको बखतमा यो औषधि खाने गर्नाले बिफर आदिको डर हुँदैन, कदाचित् आयो भने पनि ज्यादा जोड़ गर्न सक्तैन।

८ अलकाईमा–१ तोला करेलाको रस र ४-५ मासा हर्रोको धूलो मिलाई बराबर सेवन गर्नाले अलकाईले दुःख दिन सक्तैन र आराम हुन्छ।

९ पथरीमा–३ दिनसम्म ३ तोला करेलाको हरियो पातको रस, १॥ तोला दहीसँग मिलाएर ५-६ तोला मोही बनाएर पिलाउनू, अनि ३ दिनसम्म औषधि बन्द गर्नू र ४ दिनसम्म फेरि यही क्रमले औषधी खानू, अनि ४ दिन बन्द गर्नू। फेरि ५ दिनसम्म खानू, अनि फेरि ५ दिन बन्द गर्नु। यही क्रमले ७ दिसम्म पुऱ्याउनू। जस्तै पुरानो पथरी रोग भए पनि नष्ट हुन्छ। पथ्यमा खाली चामलको जाउलो मात्र दिनू।

१० सूजाकमा–१ तोला करेलाको पातको रस मिश्री मिलाई केही दिन नित्य सेवन गर्नाले सूजाक नष्ट हुन्छ।

११ गठिया बातमा–करेलाको काँचो फलको रस तताएर लेप गर्नाले गठिया-बात नष्ट हुन्छ।

१२ अथवा–करेलाको फल चक्कूले ताछेर भित्रको भाग यौटा हाँड़ीमा राखी बफाउनू र अलीकति मिश्री मिलाएर तात्तातै रोगीलाई खुवाउनू, यस्तो क्रमले १ दिनमा १ पाउ अन्दाजी करेला खायो भने वातको रोग (जीर्ण बात र स्नायु-वात) आराम हुन्छ। कमसे कम १० दिनसम्म यसको लगातार सेवन गर्नु पर्दछ।

१३ फोड़ामा–करेलाको पातको रस पकाएर बाक्लो पारी फोड़ासा

२१ बिच्छीको विषमा–करेलाको जरा नुन-पानीमा घोटेर लाउनाले बिच्छीको विष नष्ट हुन्छ। माकुरो, अरिङ्गाल, बच्छ्यूँ आदिको विष पनि नष्ट हुन्छ।

२२ फियो बढ़ेमा–१ तोला करेलाको रसमा अलीकति रायो र नुन मिलाई पिलाउनाले फियो बढ़ेको नष्ट हुन्छ र कलेजालाई पनि फाइदा गर्छ।

२३ अथवा–१ तोला करेलाको रस मात्र केही दिन पियो भने पनि फियोको रोग र कलेजाको रोग पनि नष्ट हुन्छन्।

२४ जलोदरमा–२ तोला करेलाको रसमा मह मिलाएर पिलाउनाले जलोदरमा विरेचन भई पानी झरी आराम हुन्छ।

२५ हैजामा–करेलाको रस र तिलको तेल मिलाई १ तोला खानाले हैजा आराम हुन्छ।

२६ राती आँखा नदेखेमा–करेलाको पातको रस र मरिच खूबसँग पिंधेर सुर्मा जस्तो गरी आँखामा लगायो भने राती आँखा नदेख्ने रोग नष्ट हुन्छ।

२१ बिच्छीको विषमा–करेलाको जरा नुन-पानीमा घोटेर लाउनाले बिच्छीको विष नष्ट हुन्छ। माकुरो, अरिङ्गाल, वच्छ्यूँ आदिको विष पनि नष्ट हुन्छ।

२२ फियो बढ़ेमा–१ तोला करेलाको रसमा अलीकति रायो र नुन मिलाई पिलाउनाले फियो बढ़ेको नष्ट हुन्छ र कलेजालाई पनि फाइदा गर्छ।

२३ अथवा–१ तोला करेलाको रस मात्र केही दिन पियो भने पनि फियोको रोग र कलेजाको रोग पनि नष्ट हुन्छन्।

२४ जलोदरमा–२ तोला करेलाको रसमा मह मिलाएर पिलाउनाले जलोदरमा बिरेचन भई पानी झरी आराम हुन्छ।

२५ हैजामा–करेलाको रस र तिलको तेल मिलाई १ तोला खानाले हैजा आराम हुन्छ।

२६ राती आँखा नदेखेमा–करेलाको पातको रस र मरिच खूबसँग पिंधेर सुर्मा जस्तो गरी आँखामा लगायो भने राती आँखा नदेख्ने रोग नष्ट हुन्छ।



चखतमा ३-४ थोपा यो तेल हाल्नू। कान दुख्ने, कानबाट पीप आउने र बहिरोपन पनि यसले नष्ट गर्छ।

६ पेट दुखेमा–कुनै कारणले पेट दुख्ने रोग भयो र कुनै औषधीले पनि फाइदा भएन भने काफलको बोक्रा ४ मासा मिश्री मिलाइ काढ़ा पकाएर ३-४ दिन पिलाए पेट दुख्ने व्यथा नष्ट हुन्छ।

७ सुनिएकोमा–काफलको फूलबाट निकालेको तेलले सूजको रोग आराम हुन्छ। यो तेल नाकमा हाल्नाले आधा रोग, कपाल दुख्ने र नजरा नष्ट हुन्छन्। यो तेल मालिश गर्नाले पक्ष-वात पनि नष्ट हुन्छ र कामेन्द्रियमा मले नपुंसकता पनि नष्ट हुन्छ ( सुपारी बचाएर मल्नू )।

८ दममा–६ मासा काफलको बोक्राको काढ़ा मिश्री मिलाएर पिलाउनाले दम खोकी, हृदय रोग, अग्निमान्द्य, अरुचि, अपच र अपचबाट पैदा भएका उपद्रवहरू समेत आराम गर्छ।

९ अलकाईमा–२-३ मासा काफलको बोक्राको धूलो महसँग खानाले र यसको तेल लगाउनाले अलकाई नष्ट हुन्छ।

१० अथवा–काफलको बोक्रा मसीनो गरी पिंधेर त्यसमा शतधौत घृत मिलाएर अलकाईको खटिरामा लेप गऱ्यो भने अलकाई र अलकाईबाट पैदा भएका उपद्रवहरू सबै नष्ट हुन्छन्।

११ हात-गोडा चीसो भएमा–हैजा या अरु बीमारीले हात-गोडा चीसो भए १ तोला काफलको बोक्राको धूलो र १ तोला सुठोको धूलो मिलाएर हात-गोड़ामा मल्नू, तुरुन्त तातेर आउँछ।

१२ अतिसारमा–३ मासा काफलको बोक्रा र ३ मासा बेलको चानाको काढ़ा पकाउनू र १।२ तोला पिउनू ; अतिसार नष्ट हुन्छ।

१३ अपस्मारमा–काफलको बोक्राको धूलो, छिउँकेझार, कण्टकारीको सुकेको फल ६-६ मासा र सुर्ती ४ तोला पिंधेर कपड़छान गर्नू। यो नस नित्य नाकमा हाल्नाले अपस्मार (छोप्ने व्यथा) नष्ट हुन्छ।

१४ घाँटी दुखेमा–१-२ लाल काफलको बोक्रा पानमा हालेर खानाले

बखतमा ३-४ थोपा यो तेल हाल्नू । कान दुख्ने, कानबाट पीप आउने र बहिरोपन पनि यसले नष्ट गर्छ ।

६ पेट दुखेमा–कुनै कारणले पेट दुख्ने रोग भयो र कुनै औषधीले पनि फाइदा भएन भने काफलको बोक्रा ४ मासा मिश्री मिलाइ काढ़ा पकाएर ३-४ दिन पिलाए पेट दुख्ने व्यथा नष्ट हुन्छ ।

७ सुनिएकोमा–काफलको फूलबाट निकालेको तेलले सूजको रोग आराम हुन्छ । यो तेल नाकमा हाल्नाले आधा रोग, कपाल दुख्ने र नजरा नष्ट हुन्छन् । यो तेल मालिश गर्नाले पक्ष-घात पनि नष्ट हुन्छ र कामेन्द्रियमा मले नपुंसकता पनि नष्ट हुन्छ ( सुपारी बचाएर मल्नू ) ।

८ दममा–६ मासा काफलको बोक्राको काढ़ा मिश्री मिलाएर पिलाउनाले दम खोकी, हृदय रोग, अग्निमान्द्य, अरुचि, अपच र अपचबाट पैदा भएका उपद्रवहरू समेत आराम गर्छ ।

९ अलकाईमा–२-३ मासा काफलको बोक्राको धूलो महसँग खानाले र यसको तेल लगाउनाले अलकाई नष्ट हुन्छ ।

१० अथवा–काफलको बोक्रा मसीनो गरी पिंधेर त्यसमा शतधौत घृत मिलाएर अलकाईको खटिरामा लेप गर्‍यो भने अलकाई र अलकाईबाट पैदा भएका उपद्रवहरू सबै नष्ट हुन्छन् ।

११ हात-गोडा चीसो भएमा–हैजा या अरु बीमारीले हात-गोडा चीसो भए १ तोला काफलको बोक्राको धूलो र १ तोला सुठोको धूलो मिलाएर हात-गोड़ामा मल्नू, तुरुन्त तातेर आउँछ ।

१२ अतिसारमा–३ मासा काफलको बोक्रा र ३ मासा बेलको चानाको काढ़ा पकाउनू र १।२ तोला पिउनू ; अतिसार नष्ट हुन्छ ।

१३ अपस्मारमा–काफलको बोक्राको धूलो, छिउँकेझार, कण्ट-कारीको सुकेको फल ६-६ मासा र सुर्ती ४ तोला पिंधेर कपड़छान गर्नू । यो नस नित्य नाकमा हाल्नाले अपस्मार (छोप्ने व्यथा) नष्ट हुन्छ ।

१४ घाँटी दुखेमा–१-२ लाल काफलको बोक्रा पानमा हालेर खानाले

२२ मासिक धर्मको कष्टमा–काफलको बोक्रा, केशर, कालो तिल र पुरानो शखर मिलाई १-२ मासाको मात्रा तिलको काढ़ासँग दिनाले मासिक-धर्मको कष्ट र गर्भाशयको दोष आदि नष्ट हुन्छ। यो औषधी खाएका केही बेरपछि खाना खान दिनु, नत्र शरीर बेचैन हुन्छ।

२३ अथवा–काफलको बोक्रा बत्ती जस्तो बनाई योनि-मार्गमा राख्नाले गर्भाशयको संकोच-विकास क्रिया बढ्छ र मासिक-धर्म ठीक हुन्छ।

२४ वन्ध्यत्वमा–काफलको बोक्राको धूलो र मिश्री बराबर मिलाएर ७॥ मासा चूर्ण स्त्रीको मासिक-धर्म चोखिएपछि ३ दिनसम्म लगातार दिनाले स्त्री गर्भ-धारण गर्न योग्य हुन्छन्। (यो औषधीले शरीर बेचैन रहन्छ, कमजोर प्रकृतिका स्त्रीहरूलाई दिन योग्य छैन)।

२२ मासिक धर्मको कष्टमा–काफलको बोक्रा, केशर, कालो तिल र पुरानो शखर मिलाई १-२ मासाको मात्रा तिलको काढ़ासँग दिनाले मासिक-धर्मको कष्ट र गर्भाशयको दोष आदि नष्ट हुन्छ। यो औषधी खाएका केही बेरपछि खाना खान दिनू, नत्र शरीर बेचैन हुन्छ।

२३ अथवा–काफलको बोक्रा बत्ती जस्तो बनाई योनि-मार्गमा राख्नाले गर्भाशयको संकोच-विकास क्रिया बढ्छ र मासिक-धर्म टीक हुन्छ।

२४ वन्ध्यत्वमा–काफलको बोक्राको धूलो र मिश्री बराबर मिलाएर ७॥ मासा चूर्ण स्त्रीको मासिक-धर्म चोखिएपछि ३ दिनसम्म लगातार दिनाले स्त्री गर्भ-धारण गर्न योग्य हुन्छन्। (यो औषधीले शरीर बेचेन रहन्छ, कमजोर प्रकृतिका स्त्रीहरूलाई दिनु योग्य छैन)।



निको हुन्छ ।

८ अथवा–ज्वानो चिलिममा हालेर धूम्र-पान गरे पनि दम निको हुन्छ ।

९ फोक्सोको व्यथामा–ज्वानोको चूर्णको सेवन गर्नाले फोक्सोका रोगहरू नष्ट हुन्छन्, कफ बन्न पाउँदैन ।

१० पेटको व्यथामा–६ मासा ज्वानो र १।। मासा बिरेनुन फाँकी मारेर तातो पानी पिए पेट फुल्ने रोग नष्ट हुन्छ । बेहान, दिउसो र बेलुका तीन समय खाए वायुगोला पनि नष्ट हुन्छ ।

११ अथवा–३ मासा ज्वानो, मरिच र सिंधेनुन पिंधेर बेहान तातो पानीसँग पिउनाले पेटको शूल र मन्दाग्नि नष्ट हुन्छ ।

१२ अथवा–ज्वानो, सिंधेनुन संचरनुन, यवक्षार र हर्रो बराबर लिएर चूर्ण गर्नू र कपड्छान गर्नू, ५ रत्तिदेखि १० रत्तीसम्मको मात्रामा तातो पानीसित खानाले आन्द्रा दुख्ने र पेट दुख्ने पनि नष्ट हुन्छ ।

१३ गठियाको पीडामा–ज्वानोको तेल मर्दन गर्नाले सन्धिस्थानको दर्द नष्ट हुन्छ ।

१४ पक्षाघात र कम्पन वायुमा–ज्वानोको शर्बत बनाई पिउनाले पक्षाघात र कम्प वायु नष्ट हुन्छ ।

१५ जुकामा–४ मासा ज्वानोको धूलो मोहीसित पिए पेटका जुका मर्छन् ( २ घण्टापछि हर्रोको धूलो ५-६ मासा खाएर तातो पानी पिउनू )।

१६ हैजामा–४ मासा ज्वानो, १ मासा बाबरी र १ रत्ती हींग मिलाई दिनाले शुरुको हैजामा फाइदा गर्छ ।

१७ छालाको रोगमा–ज्वानो पानीमा बाक्लो गरी पिंधेर दिनमा २ पटक लगाउनाले दाद खाज, कृमि भएको घाउ आदि नष्ट हुन्छन् ।

१८ स्त्रीको रजोदोषमा–२ मासा ज्वानोको चूर्ण दिनको २ पटक तातो दूधसँग दिनाले स्त्रीको रोकिएको रज खुलेर आउँछ ।

१९ सूतिका रोगमा–२-३ मासा ज्वानोको चूर्ण तातो पानीसित

निको हुन्छ ।

८ अथवा–ज्वानो चिलिममा हालेर धुम्र-पान गरे पनि दम निको हुन्छ ।

९ फोक्सोको व्यथामा–ज्वानोको चूर्णको सेवन गर्नाले फोक्सोका रोगहरू नष्ट हुन्छन् , कफ बन्न पाउँदैन ।

१० पेटको व्यथामा–६ मासा ज्वानो र १॥ मासा बिरेनुन फाँकी मारेर तातो पानी पिए पेट फुल्ने रोग नष्ट हुन्छ । बेहान, दिउसो र बेलुका तीन समय खाए वायुगोला पनि नष्ट हुन्छ ।

११ अथवा–३ मासा ज्वानो, मरिच र सिंधेनुन पिंधेर बेहान तातो पानीसँग पिउनाले पेटको शूल र मन्दाग्नि नष्ट हुन्छ ।

१२ अथवा–ज्वानो, सिंधेनुन संचरनुन, यवक्षार र हर्रो बराबर लिएर चूर्ण गर्नू र कपड़छान गर्नू, ५ रत्तिदेखि १० रत्तीसम्मको मात्रामा तातो पानीसित खानाले आन्द्रा दुख्ने र पेट दुख्ने पनि नष्ट हुन्छ ।

१३ गठियाको पीडामा–ज्वानोको तेल मर्दन गर्नाले सन्धिस्थानको दर्द नष्ट हुन्छ ।

१४ पक्षाघात र कम्पन वायुमा–ज्वानोको शर्वत बनाई पिउनाले पक्षाघात र कम्प वायु नष्ट हुन्छ ।

१५ जुकामा–४ मासा ज्वानोको धूलो मोहीसित पिए पेटका जुका मर्छन् ( २ घण्टापछि हर्रोको धूलो ५-६ मासा खाएर तातो पानी पिउनू ) ।

१६ हैजामा–४ मासा ज्वानो, १ मासा बाबरी र १ रत्ती हींग मिलाई दिनाले शुरुको हैजामा फाइदा गर्छ ।

१७ छालाको रोगमा–ज्वानो पानीमा बाक्लो गरी पिंधेर दिनमा २ पटक लगाउनाले दाद खाज, कृमि भएको घाउ आदि नष्ट हुन्छन् ।

१८ स्त्रीको रजोदोषमा–२ मासा ज्वानोको चूर्ण दिनको २ पटक तातो दूधसँग दिनाले स्त्रीको रोकिएको रज खुलेर आउँछ ।

१९ सूतिका रोगमा–२-३ मासा ज्वानोको चूर्ण तातो पानीसित

# असुरो

दम र खोकीमा १ देखि १० सम्म
जरोमा ११, १२, १३, १४
वात आदिमा १५, १६
मिर्गौलाको बीमारीमा १७
आउँ र रगतमा १८
पाण्डुरोग र जलोदरमा १९

नेपाली—असुरो। हिन्दी—अडूसा। संस्कृत—वासक।

१ दम र खोकीमा–असुरोको पात सुकाएर चिलिममा राखेर तमाखु जस्तो गरेर धुवाँ पियो भने दम नष्ट हुन्छ।

२ अथवा–आ मासा असुरोको पातको ताजा रस लिएर मह वा अदुवाको रस सित चटायो भने पुरानो खोकी, दम र क्षय रोग पनि नष्ट गर्छ।

३ अथवा–१ तोला असुरोको पातको काढ़ा २-२ लाल मरिच र पिप्लाको धूलो मिलाएर पिलायो भने पुरानो खोकी आदि रोग नष्ट गरी कफ पातलो गरेर निकाल्दछ।

४ अथवा–६४ तोला असुरोको रस, ३२ तोला मिश्री र ८ तोला घ्यू मिलाई मन्द-मन्द आँचमा पकाउनू, बाक्लो भएपछि निकालेर ८ तोला पिप्लाको धूलो मिलाउनू र ठण्डा भएपछि ३२ तोला मह मिलाएर राख्नू। यो औषधी आधा तोला देखिन १ तोलासम्म खानाले खोकी, दम, हृदयरोग र रक्त-पित्त नष्ट गर्छ।

५ अथवा–असुरोको पञ्चाङ्गबाट क्षार[1] बनाएर ४-४ रत्तीको मात्रामा दिनाले खोकी र दममा अद्भुत गुण देखिन्छ।

६ अथवा–२ सेर असुरोको पात, २ सेर असुरोको जराको बोक्रा र २ सेर असुरोको फूल यी ३ तीन चीज लिएर अलि-अलि दगल्च्याएर कुटी २० सेर पानीमा पकाउनू, आधा बाँकी रहेपछि फेरि तीनै

१-क्षार बनाउने विधि मूलाको प्रकरणमा दिएको छ।

# असुरो

| | |
|---|---|
| दम र खोकीमा १ देखि १० सम्म | मिर्गौलाको बीमारीमा १७ |
| जरोमा ११, १२, १३, १४ | आउँ र रगतमा १८ |
| वात आदिमा १५, १६ | पाण्डुरोग र जलोदरमा १९ |

नेपाली—असुरो । हिन्दी—अडूसा । संस्कृत—वासक ।

१ दम र खोकीमा–असुरोको पात सुकाएर चिलिममा राखेर तमाखु जस्तो गरेर धुवाँ पियो भने दम नष्ट हुन्छ ।

२ अथवा–आ। मासा असुरोको पातको ताजा रस लिएर मह वा अदुवाको रस सित चटायो भने पुरानो खोकी, दम र क्षय रोग पनि नष्ट गर्छ ।

३ अथवा–१ तोला असुरोको पातको काढ़ा २-२ लाल मरिच र पिप्लाको धूलो मिलाएर पिलायो भने पुरानो खोकी आदि रोग नष्ट गरी कफ पातलो गरेर निकाल्दछ ।

४ अथवा–६४ तोला असुरोको रस, ३२ तोला मिश्री र ८ तोला घ्यू मिलाई मन्द-मन्द आँचमा पकाउनू, बाक्लो भएपछि निकालेर ८ तोला पिप्लाको धूलो मिलाउनू र ठण्डा भएपछि ३२ तोला मह मिलाएर राख्नू। यो औषधी आधा तोला देखिन १ तोलासम्म खानाले खोकी, दम, हृदयरोग र रक्त-पित्त नष्ट गर्छ ।

५ अथवा–असुरोको पञ्चाङ्गबाट क्षार[1] बनाएर ४-४ रत्तीको मात्रामा दिनाले खोकी र दममा अद्भुत गुण देखिन्छ ।

६ अथवा–२ सेर असुरोको पात, २ सेर असुरोको जराको बोक्रा र २ सेर असुरोको फूल यी ३ तीन चीज लिएर अलि-अलि दगल्च्याएर कुटी २० सेर पानीमा पकाउनू, आधा बाँकी रहेपछि फेरि तीनै

१–क्षार बनाउने विधि मूलाको प्रकरणमा दिएको छ।

६ मासा चिराइतो, ६ मासा कुटकी र ६ मासा गुर्जो मिलाई कुट्नू र कपड़छान गरी ६ मात्रा वा ९ मात्रा बनाउनू र महमा १ मात्रा चटाउनाले पुरानो बिग्रेको जरो, औलो, क्षयको जीर्ण ज्वर, दम, खोकी र रक्तपित्त आदि रोग नष्ट भई आँखा तीव्र हुन्छन् ।

१५ वात आदिमा–असुरोको पाकेको पातले सेक्यो भने सन्धिवात, पक्षवात आदि नष्ट हुन्छ, पीडा युक्त सुनिएको रोग पनि नष्ट हुन्छ ।

१६ अथवा–६ मासा असुरोको पातको धूलो, मिश्री मिलेको सुठोको काढ़ासित खायो भने वात विकार नष्ट हुन्छ ।

१७ मिर्गौलाको बीमारीमा–आधा तोला असुरोको पातको रसमा आधा तोला मह मिलाएर पिउनू र असुरो र नीमको पात बफाएर तल्लो पेटमा सेकनाले मिर्गौलाको भयंकर दर्द नष्ट हुन्छ ।

१८ आउँ र रगतमा–६ मासा असुरोको पातको रस मिश्री मिलाई पिउनाले आउँ र रगत नष्ट हुन्छ ।

१९ पाण्डुरोग र जलोदरमा–६ मासा असुरोको पातको रस ६ मासा अदुवाको रस र ३ मासा यवक्षार मिलाई दिनाले जलोदर र पाण्डु रोग आदि नष्ट हुन्छन् ।

६ मासा चिराइतो, ६ मासा कुटकी र ६ मासा गुर्जो मिलाई कुट्नू र कपड़छान गरी ६ मात्रा वा ९ मात्रा बनाउनू र महमा १ मात्रा चटाउनाले पुरानो बिग्रेको जरो, औलो, क्षयको जीर्ण ज्वर, दम, खोकी र रक्तपित्त आदि रोग नष्ट भई आँखा तीव्र हुन्छन् ।

१५ वात आदिमा–असुरोको पाकेको पातले सेक्यो भने सन्धिवात, पक्षवात आदि नष्ट हुन्छ, पीडा युक्त सुनिएको रोग पनि नष्ट हुन्छ ।

१६ अथवा–६ मासा असुरोको पातको धूलो, मिश्री मिलेको सुठोको काढ़ासित खायो भने वात विकार नष्ट हुन्छ ।

१७ मिर्गौलाको बीमारीमा–आधा तोला असुरोको पातको रसमा आधा तोला मह मिलाएर पिउनू र असुरो र नीमको पात बफाएर तल्लो पेटमा सेक्नाले मिर्गौलाको भयंकर दर्द नष्ट हुन्छ ।

१८ आउँ र रगतमा–६ मासा असुरोको पातको रस मिश्री मिलाई पिउनाले आउँ र रगत नष्ट हुन्छ ।

१९ पाण्डुरोग र जलोदरमा–६ मासा असुरोको पातको रस ६ मासा अदुवाको रस र ३ मासा यवक्षार मिलाई दिनाले जलोदर र पाण्डु रोग आदि नष्ट हुन्छन् ।

८ सुनिएमा–१-२ तोला अदुवाको रसमा पुरानो शखर १ तोला मिलाएर चटाउनाले सारा शरीरको सूजन नष्ट हुन्छ (यो औषधी खाँदा बाख्रीको दूध मात्र पथ्य लिनु पर्दछ)।

९ कमल-पित्तमा–अदुवा, त्रिफला (हर्रो, बर्रो र अमला) र शखर बराबर मिलाएर राख्नू। यो औषधी ५-६ मासाको मात्रामा पानीसँग पिउनाले कमल-पित्त रोग नष्ट हुन्छ।

१० मन्दाग्निमा–१ तोला अदुवाको रसमा १ तोला कागतीको रस मिलाएर पिउनाले मन्दाग्नि नष्ट हुन्छ।

११ अथवा–१ तोला अदुवाको रस र सिंधेनुन भोजनको आदिमा चाटेर भोजन गर्नाले मन्दाग्नि नष्ट हुन्छ।

१२ वातमा–२ माना अदुवाको रसमा १ माना तिलको तेल मिलाएर पकाउनू। जब तेल मात्र बाँकी रहन्छ तब निकाल्नू र छानेर बोतलमा राख्नू। यो तेल मालिश गर्नाले जोर्निको वात रोग नष्ट हुन्छ।

१३ जलोदरमा–५ तोला ताजा अदुवा कुटेर रस निकाल्नू र बराबर मिश्री मिलाएर बेहान जलोदरमा-रोगीलाई पिलाउनू। आर्को दिन ७॥ तोला अदुवाको रस दिनू, एवं रीत्या २॥ तोलाको दरले २५ तोलासम्म पुऱ्याउनू, अनि २॥ तोलाको दरले घटाउँदै जानू, जब ५ तोला बाँकी रहन्छ, तब औषधी बन्द गरिदिनू। तैपनि राम्रो आराम भएको छैन भने फेरि प्रयोग गर्नू, अवश्य आराम हुन्छ। पथ्य–केवल दूध मात्र दिनू।

१४ फोड़ा आदिमा–अदुवा कुटेर फोड़ा आएको ठाउँमा बाँधी दिनू। फोड़ा आराम हुन्छ।

१५ जुकामा–३ मासा अदुवाको साना-साना टुक्रा गर्नू र रोगीलाई निल्न लगाउनू। ३-४ दिनपछि जुका नष्ट हुन्छन्।

८ सुनिएमा–१-२ तोला अदुवाको रसमा पुरानो शखर १ तोला मिलाएर चटाउनाले सारा शरीरको सूजन नष्ट हुन्छ (यो औषधी खाँदा बाख्रीको दूध मात्र पथ्य लिनु पर्दछ)।

९ कमल-पित्तमा–अदुवा, त्रिफला (हर्रो, बर्रो र अमला) र शखर बराबर मिलाएर राख्नू। यो औषधी ५-६ मासाको मात्रामा पानीसँग पिउनाले कमल-पित्त रोग नष्ट हुन्छ।

१० मन्दाग्निमा–१ तोला अदुवाको रसमा १ तोला कागतीको रस मिलाएर पिउनाले मन्दाग्नि नष्ट हुन्छ।

११ अथवा–१ तोला अदुवाको रस र सिंधेनुन भोजनको आदिमा चाटेर भोजन गर्नाले मन्दाग्नि नष्ट हुन्छ।

१२ वातमा–२ माना अदुवाको रसमा १ माना तिलको तेल मिलाएर पकाउनू। जब तेल मात्र बाँकी रहन्छ तब निकाल्नू र छानेर बोतलमा राख्नू। यो तेल मालिश गर्नाले जोर्नीको वात रोग नष्ट हुन्छ।

१३ जलोदरमा–५ तोला ताजा अदुवा कुटेर रस निकाल्नू र बराबर मिश्री मिलाएर बेहान जलोदरमा-रोगीलाई पिलाउनू। आर्को दिन ७॥ तोला अदुवाको रस दिनू, एवं रीत्या २॥ तोलाको दरले २५ तोलासम्म पुऱ्याउनू, अनि २॥ तोलाको दरले घटाउँदै जानू, जब ५ तोला बाँकी रहन्छ, तब औषधी बन्द गरिदिनू। तैपनि राम्रो आराम भएको छैन भने फेरि प्रयोग गर्नू, अवश्य आराम हुन्छ। पथ्य–केवल दूध मात्र दिनू।

१४ फोड़ा आदिमा–अदुवा कुटेर फोड़ा आएको ठाउँमा बाँधी दिनू। फोड़ा आराम हुन्छ।

१५ जुकामा–३ मासा अदुवाको साना-साना टुक्रा गर्नू र रोगीलाई निल्न लगाउनू। ३-४ दिनपछि जुका नष्ट हुन्छन्।

खाएपछि पानीले निल्नु र सुत्नु। ३ दिनमा आँखाको रोग आराम हुन्छ।

५ दन्त-शूल–अपामार्गको ताजा जराले दाँत माझ्नाले दाँत मोती जस्तै चम्कन्छ। यसको दतिउनले दन्तशूल, दाँत हल्लने गिजाको कमजोरी र मुखको दुर्गन्ध पनि हटाउँछ। (यसको पातको रस मल्नाले पनि माथिकै गुण हुन्छ)।

६ कण्ठमाला–५ देखि १५ लालसम्म अपामार्गको जराको खरानी पानी मिसाई खानाले र गण्डमालाको गाण्टोमा लगाउनाले पनि गण्डमाला नष्ट हुन्छ।

७ सुनिएमा–१ तोला अपामार्गको काढ़ा पिउनाले सारा शरीर सुनिएको आराम गर्दछ।

८ अतिसारमा–३ मासा अपामार्गको ताजा पातको काढ़ा चिसो भएपछि मह मिलाई पिलाउनाले अतिसार र आउँ नष्ट हुन्छन्।

९ जलोदरमा–१ तोला अपामार्गको काढ़ा अदुवाको रस मिलाई पिलाउनाले मिर्गौलाबाट पैदा भएको जलोदर नष्ट हुन्छ।

१० शूलमा–६ मासा अपामार्गको पातको रस पिउनाले शूल र आन्द्राको विकार समेत नष्ट हुन्छन्।

११ उपदंशमा–अपामार्गको ताजा रस घाममा बाक्लो गरी अलिकति अफीम मिलाएर लेप गरे उपदंशको प्रारम्भिक घाउमा फाइदा गर्छ।

१२ पथरीमा–६ मासा अपामार्गको ताजा जरा पानीमा पिंधेर पिलाउनाले पिसाबबाट पथरी टुका-टुका गरेर निकाल्दछ र वृक्कशूल (मिर्गौलाको शूल) पनि एकदम आराम गर्छ।

१३ अथवा–१ तोला अपामार्गको बोटको काढ़ा पकाएर पिउनाले पथरी गल्दछ। पित्ताऽश्मरी र अलकाई पनि नष्ट हुन्छ।

१४ कानको रोगमा–अपामार्गको जरा पिंधी रस निकाल्नू; रस-भन्दा आधा तिलको तेल मिलाएर पकाउनू, तेलमात्र बाँकी रहेपछि छानेर शीशीमा राख्नू। त्यो २-३ थोपा तताएर कानमा हाले

खाएपछि पानीले निल्नु र सुत्नु। ३ दिनमा आँखाको रोग आराम हुन्छ।

५ दन्त-शूल–अपामार्गको ताजा जराले दाँत माझ्नाले दाँत मोती जस्तै चम्कन्छ। यसको दतिउनले दन्तशूल, दाँत हल्लने गिजाको कमजोरी र मुखको दुर्गन्ध पनि हटाउँछ। (यसको पातको रस मल्नाले पनि माथिकै गुण हुन्छ)।

६ कण्ठमाला–५ देखि १५ लालसम्म अपामार्गको जराको खरानी पानी मिसाई खानाले र गण्डमालाको गाण्टोमा लगाउनाले पनि गण्डमाला नष्ट हुन्छ।

७ सुनिएमा–१ तोला अपामार्गको काढ़ा पिउनाले सारा शरीर सुनिएको आराम गर्दछ।

८ अतिसारमा–३ मासा अपामार्गको ताजा पातको काढ़ा चिसो भएपछि मह मिलाई पिलाउनाले अतिसार र आउँ नष्ट हुन्छन्।

९ जलोदरमा–१ तोला अपामार्गको काढ़ा अदुवाको रस मिलाई पिलाउनाले मिर्गौलाबाट पैदा भएको जलोदर नष्ट हुन्छ।

१० शूलमा–६ मासा अपामार्गको पातको रस पिउनाले शूल र आन्द्राको बिकार समेत नष्ट हुन्छन्।

११ उपदंशमा–अपामार्गको ताजा रस घाममा बाक्लो गरी अलिकति अफीम मिलाएर लेप गरे उपदंशको प्रारम्भिक घाउमा फाइदा गर्छ।

१२ पथरीमा–६ मासा अपामार्गको ताजा जरा पानीमा पिंधेर पिलाउनाले पिसाबबाट पथरी टुका-टुका गरेर निकाल्दछ र वृक्कशूल (मिर्गौलाको शूल) पनि एकदम आराम गर्छ।

१३ अथवा–१ तोला अपामार्गको बोटको काढ़ा पकाएर पिउनाले पथरी गल्दछ। पित्ताऽश्मरी र अलकाई पनि नष्ट हुन्छ।

१४ कानको रोगमा–अपामार्गको जरा पिंधी रस निकाल्नू; रस-भन्दा आधा तिलको तेल मिलाएर पकाउनू, तेलमात्र बाँकी रहेपछि छानेर शीशीमा राख्नू। त्यो २-३ थोपा तताएर कानमा हाले

धूलोमा २ रत्ती वंग-भस्म मिलाई खानाले प्रबल कामोद्दीपन हुन्छ ।

२४ रक्त-प्रदरमा–२ तोला सेतो अपामार्गको पञ्चांग (जरा, हाँगा, पात, फल र फूल) १ तोला भेड़ाको रौंको भस्म र २ तोला सुनौला गेरू पिंधेर चूर्ण गर्नू, यो ६ मासा चूर्ण गाईको काँचो दूधमा पिउनाले रक्त-प्रदर आराम हुन्छ ।

२५ प्रसव-विलम्बमा–रविवार पुष्य नक्षत्रमा काठको हतियारले खनेको अपामार्गको जरा व्यथा लागेको बखत कम्मरमा बाँधिदिनू, तुरुन्त बच्चा निस्कन्छ (बच्चा हुनेबित्तिकै खोलीहाल्नुपर्दछ, नत्र भयङ्कर परिणाम हुन्छ)।

२६ अथवा–माथिकै औषधि पिंधेर तल्लो पेटमा लेप गरिदिए पनि चाँड़ै बच्चा हुन्छ ।

२७ भूतोन्मादमा–३ देखि ६ मासासम्म अपामार्गको रस पिउनाले भूतोन्माद तुरुन्त नष्ट हुन्छ, मुटु हल्लने पनि बन्द हुन्छ ।

२८ विषमा–६ मासा अपामार्गको जराको धूलो चपाउनाले र अपामार्गको पात पिंधेर टोकेको ठाउँमा लगाउनाले बौलाहा कुकुरले टोकेको, बिच्छीको र विषैला मूसाको विषमा पनि आराम गर्छ ।

२९ भोक नष्ट गर्नु परेमा–१ तोला अपामार्गको बिउमा १ माना दूध हाली खीर पकाउनू र खानू, ३-४ दिनसम्म भोक लाग्दैन । मस्तकको रोग पनि नष्ट गर्छ ।

३० सर्पको विषमा–अपामार्गको फूलको डाँठ र बिउको चूर्ण सर्प र अरू विषैला जानवरले टोकेको ठाउँमा लगाउनाले विष नष्ट हुन्छ ।

३१ दमाको रोगमा–आधा तोला अपामार्गको जराको चूर्णमा सात दाना मरिचको धूलो मिलाई बेहान-बेलुका चीसो पानीसँग दिनाले २ वर्षको पुरानो दम नष्ट हुन्छ । ७ दिनसम्म पथ्यपूर्वक औषधी खानुपर्दछ । पथ्य––गहुँको रोटी र भात मात्र खानू । छाती र घाँटीमा घ्यूको मालिश गर्नू । (कसैलाई वमन हुन्छ नडराउनू)।

धूलोमा २ रत्ती वंग-भस्म मिलाई खानाले प्रबल कामोद्दीपन हुन्छ ।

२४ रक्त-प्रदरमा–२ तोला सेतो अपामार्गको पञ्चांग (जरा, हाँगा, पात, फल र फूल) १ तोला भेड़ाको रौंको भस्म र २ तोला सुनौला गेरू पिंधेर चूर्ण गर्नू, यो ६ मासा चूर्ण गाईको काँचो दूधमा पिउनाले रक्त-प्रदर आराम हुन्छ ।

२५ प्रसव-बिलम्बमा–रविवार पुष्य नक्षत्रमा काठको हतियारले खनेको अपामार्गको जरा व्यथा लागेको बखत कम्मरमा बाँधिदिनू, तुरुन्त बच्चा निस्कन्छ (बच्चा हुनेबित्तिकै खोलीहाल्नुपर्दछ, नत्र भयङ्कर परिणाम हुन्छ)।

२६ अथवा–माथिकै औषधि पिंधेर तल्लो पेटमा लेप गरिदिए पनि चाँड़ै बच्चा हुन्छ ।

२७ भूतोन्मादमा–३ देखि ६ मासासम्म अपामार्गको रस पिउनाले भूतोन्माद तुरुन्त नष्ट हुन्छ, मुट्ठु हल्लने पनि बन्द हुन्छ ।

२८ विषमा–६ मासा अपामार्गको जराको धूलो चपाउनाले र अपामार्गको पात पिंधेर टोकेको ठाउँमा लगाउनाले बौलाहा कुकुरले टोकेको, बिच्छीको र विषैला मूसाको विषमा पनि आराम गर्छ ।

२९ भोक नष्ट गर्नु परेमा–१ तोला अपामार्गको बिउमा १ माना दूध हाली खीर पकाउनू र खानू, ३-४ दिनसम्म भोक लाग्दैन । मस्तकको रोग पनि नष्ट गर्छ ।

३० सर्पको विषमा–अपामार्गको फूलको डाँठ र बिउको चूर्ण सर्प र अरू विषैला जानवरले टोकेको ठाउँमा लगाउनाले विष नष्ट हुन्छ ।

३१ दमाको रोगमा–आधा तोला अपामार्गको जराको चूर्णमा सात दाना मरिचको धूलो मिलाई बेहान-बेलुका चीसो पानीसँग दिनाले २ वर्षको पुरानो दम नष्ट हुन्छ । ७ दिनसम्म पथ्यपूर्वक औषधी खानुपर्दछ । पथ्य—गहुँको रोटी र भात मात्र खानू । छाती र घाँटीमा घ्यूको मालिश गर्नू । (कसैलाई वमन हुन्छ नडराउनू) ।



महमा मिलाएर चाट्नाले पित्तको जरो नष्ट हुन्छ ।

४ अथवा–१ तोला गुर्जोको काढ़ा वा १ तोला गुर्जो रसमा २ लाल पिप्ला र मह मिलाई चाटे पुरानो जरो र खोकी जान्छ ।

५ अथवा–१-२ तोला गुर्जोको रस मात्र पिए जरो जान्छ ।

६ अथवा–१ मासा त्रिफलाको धूलोमा ४ मासा गुर्जोको रस र मह मिलाई चाट्नाले पुरानो जरो, क्षयको जरो, वेलुका आउने मन्द जरो र अरू किसिमका जरोलाई पनि आराम गर्छ ।

७ अथवा–आधा तोला गुर्जोको रस, आधा तोला असुरोको रस र ५ लाल पिप्लाको धूलोमा मह मिलाएर खानाले पुरानो कफ-ज्वर, पित्त-ज्वर र क्षय-ज्वर आदि नष्ट हुन्छ ।

८ अथवा–आधा तोला गुर्जो, अथवा आधा तोला चिराइतो र १ मासा मरिच मिलाई काढ़ा पकाएर दिनाले अनेक किसिमका ज्वर र औलोको ज्वरलाई पनि फाइदा गर्छ ।

९ अथवा–१ तोला गुर्जोको जराको काढ़ा पकाएर पिउनू । यसले १ वा २ अथवा ३ दिन बिराएर आउने जरो पनि नष्ट हुन्छन् ।

१० अथवा–आधा तोला गुर्जो आधा तोला चिराइतो र आधा तोला सुठो १ माना पानी हाली पकाउनू र १ चौथाई बाँकी रहेपछि छान्नू र शीशीमा राख्नू । यो औषधी दिनको ३ पटक ३ मात्रा गरी पिउनू, जरो निको भएपछिको नातागतमा फाइदा गर्छ । यसले आँतको जरो सफा गरी रुचि पनि बढाउँछ ।

११ क्षयमा–३ लाल सुकुमेल, ४ लाल वंशलोचन र ३ मासा गुर्जोको चिनी महसँग चटाउनाले क्षय नष्ट हुन्छ ।

१२ गोड़ा पोल्नेमा–गुर्जो र अरिणको बिउ दहीमा पिँधेर लगाउनाले हात-गोड़ा पोल्ने व्यथा नष्ट हुन्छ ।

१३ मुदु हल्लने र उन्मादमा–६ मासा गुर्जो र ६ मासा घोड़ताप्रेको काढ़ा बनाएर पिउनाले मुटु हल्लने र पागल-पन रोग जान्छ ।

१४ कान दुखेमा–गुर्जो पानीमा घोटेर मनतातो पारी कानमा

महमा मिलाएर चाट्नाले पित्तको जरो नष्ट हुन्छ ।

४ अथवा–१ तोला गुर्जोको काढ़ा वा १ तोला गुर्जो रसमा २ लाल पिप्ला र मह मिलाई चाटे पुरानो जरो र खोकी जान्छ ।

५ अथवा–१-२ तोला गुर्जोको रस मात्र पिए जरो जान्छ ।

६ अथवा–१ मासा त्रिफलाको धूलोमा ४ मासा गुर्जोको रस र मह मिलाई चाट्नाले पुरानो जरो, क्षयको जरो, वेलुका आउने मन्द जरो र अरू किसिमका जरोलाई पनि आराम गर्छ ।

७ अथवा–आधा तोला गुर्जोको रस, आधा तोला असुरोको रस र ५ लाल पिप्लाको धूलोमा मह मिलाएर खानाले पुरानो कफ-ज्वर, पित्त-ज्वर र क्षय-ज्वर आदि नष्ट हुन्छ ।

८ अथवा–आधा तोला गुर्जो, अथवा आधा तोला चिराइतो र १ मासा मरिच मिलाई काढ़ा पकाएर दिनाले अनेक किसिमका ज्वर र औलोको ज्वरलाई पनि फाइदा गर्छ ।

९ अथवा–१ तोला गुर्जोको जराको काढ़ा पकाएर पिउनू । यसले १ वा २ अथवा ३ दिन बिराएर आउने जरो पनि नष्ट हुन्छन् ।

१० अथवा–आधा तोला गुर्जो आधा तोला चिराइतो र आधा तोला सुठो १ माना पानी हाली पकाउनू र १ चौथाई बाँकी रहेपछि छान्नू र शीशीमा राख्नू । यो औषधी दिनको ३ पटक ३ मात्रा गरी पिउनू, जरो निको भएपछिको नातागतमा फाइदा गर्छ । यसले आँतको जरो सफा गरी रुचि पनि बढ़ाउँछ ।

११ क्षयमा–३ लाल सुकुमेल, ४ लाल वंशलोचन र ३ मासा गुर्जोको चिनी महसँग चटाउनाले क्षय नष्ट हुन्छ ।

१२ गोड़ा पोल्नेमा–गुर्जो र अरिणको बिउ दहीमा पिँधेर लगाउनाले हात-गोड़ा पोल्ने व्यथा नष्ट हुन्छ ।

१३ मुट्ठ हल्लने र उन्मादमा–६ मासा गुर्जो र ६ मासा घोड़ताप्रेको काढ़ा बनाएर पिउनाले मुट्ठ हल्लने र पागल-पन रोग जान्छ ।

१४ कान दुखेमा–गुर्जो पानीमा घोटेर मनतातो पारी कानमा

पिउने गर्नाले पुरानो वात र गठिया आदि नष्ट हुन्छन्। यसले पिसाबका रोग पनि नष्ट हुन्छन्।

२६ कफका रोगमा–३ मासा गुर्जोको धूलो मह मिलाएर चाट्नाले कफका विकारहरू शान्त हुन्छन्।

२७ आम-वातमा–आधा तोला गुर्जोको धूलो र २ मासा सुठो महमा मिलाई चाट्नाले आम-वात नष्ट हुन्छ।

२८ श्लीपदमा–आधा तोला गुर्जोको धूलो गो-मूत्रसित खानाले श्लीपद रोग नष्ट हुन्छ।

२९ तागत बढ़ाउनामा–२ तोला गुर्जोको रसमा १-२ मासा पिप्लाको धूलो मिलाई बेहान रोज सेवन गरे तागत खूब बढ्छ र क्षय नष्ट हुन्छ। पाचन-शक्ति उत्पन्न हुन्छ, भोक जाग्छ र पेट पनि बलियो हुन्छ।

३० वमनमा–६ मासा गुर्जोको रसमा वा १ तोला गुर्जोको काढ़ामा मह मिलाई पिउनू। यसले पित्तज-वमन नष्ट हुन्छ।

३१ श्वेत-प्रदरमा–३ मासा गुर्जोको काढ़ा पिउने गर्नाले श्वेत-प्रदर र त्यसबाट भएका उपद्रवहरू नष्ट हुन्छन्।

३२ अथवा–आधा तोला गुर्जो र आधा तोला कुरिलोको जरोको काढ़ा पकाएर पिउनाले श्वेत-प्रदर नष्ट हुन्छ।

३३ मधुमेहमा–६ मासा गुर्जोको चूर्ण र ६ मासा मिश्री मिलाई सेवन गर्नाले मधुमेह (पिसाबबाट चिल्लो जाने रोग) नष्ट हुन्छ। (खाली पेटमा सेवन गर्नू)।

३४ सर्प-विषमा–गुर्जोको जराको काढ़ा पिउनाले सर्पको विष नष्ट हुन्छ।

३५ अथवा–गुर्जोको गानो १।२ मासा पानी पिंधेर पिउनाले वमन भएर सर्प-विष निस्कन्छ।

पिउने गर्नाले पुरानो वात र गठिया आदि नष्ट हुन्छन्। यसले पिसाबका रोग पनि नष्ट हुन्छन्।

२६ कफका रोगमा–३ मासा गुर्जोको धूलो मह मिलाएर चाट्नाले कफका विकारहरू शान्त हुन्छन्।

२७ आम-वातमा–आधा तोला गुर्जोको धूलो र २ मासा सुठो महमा मिलाई चाट्नाले आम-वात नष्ट हुन्छ।

२८ श्लीपदमा–आधा तोला गुर्जोको धूलो गो-मूत्रसित खानाले श्लीपद रोग नष्ट हुन्छ।

२९ तागत बढ़ाउनामा–२ तोला गुर्जोको रसमा १-२ मासा पिप्लाको धूलो मिलाई बेहान रोज सेवन गरे तागत खूब बढ्छ र क्षय नष्ट हुन्छ। पाचन-शक्ति उत्पन्न हुन्छ, भोक जाग्छ र पेट पनि बलियो हुन्छ।

३० वमनमा–६ मासा गुर्जोको रसमा वा १ तोला गुर्जोको काढ़ामा मह मिलाई पिउनू। यसले पित्तज-वमन नष्ट हुन्छ।

३१ श्वेत-प्रदरमा–३ मासा गुर्जोको काढ़ा पिउने गर्नाले श्वेत-प्रदर र त्यसबाट भएका उपद्रवहरू नष्ट हुन्छन्।

३२ अथवा–आधा तोला गुर्जो र आधा तोला कुरिलोको जरोको काढ़ा पकाएर पिउनाले श्वेत-प्रदर नष्ट हुन्छ।

३३ मधुमेहमा–६ मासा गुर्जोको चूर्ण र ६ मासा मिश्री मिलाई सेवन गर्नाले मधुमेह (पिसाबबाट चिनी जाने रोग) नष्ट हुन्छ। (खाली पेटमा सेवन गर्नू)।

३४ सर्प-विषमा–गुर्जोको जराको काढ़ा पिउनाले सर्पको विष नष्ट हुन्छ।

३५ अथवा–गुर्जोको गानो १।२ मासा पानी पिँधेर पिउनाले वमन भएर सर्प-विष निक्लन्छ।

●

गठियामा बाँध्नाले गाँठको सूज नष्ट हुन्छ ।

८ वायुको दर्दमा–रातीगेड़ीको पातको रस निकालेर तेलमा मिलाई मालिस गर्नाले वायुको दर्द आराम हुन्छ ।

९ स्नायु-जालको कमजोरीमा–आधा रत्तीदेखि १ रत्तीसम्म रातिगेड़ीको चूर्ण दूधमा पकाएर सुकुमेलको धूलो ३ लाल छरेर पिउनाले स्नायु-जालको शक्ति बढ्दछ । (मात्रा अलीकति मात्र बढ्ता भयो भने पनि वमन र दिशा हुन्छ, विचार गरेर मात्र दिनू) ।

१० अलकाईमा–२।२ मासा रातीगेड़ीको जरा नरिवलको पानीसित दिनाले अलकाई नष्ट हुन्छ ।

११ उपदंशमा–३ मासा सेतो रातीगेड़ीको जरा र ३ मासा सेतो जपापुष्पको जरा पानीमा पिंधेर पिउनाले र उपदंशको घाउमा पनि लगाउनाले यसले उपदंश (भिरङ्गी) नष्ट हुन्छ ।

१२ प्रमेहमा–३।४ मासा रातीगेड़ीको पातमा रस दूधसित पिउनाले प्रमेह नष्ट हुन्छ ।

१३ श्वेत-प्रदरमा–३ मासा रातीगेड़ीको जरा रातभर पानीमा भिजाएर बेहान-बेलुका छानेर पिउनाले श्वेत-प्रदर नष्ट हुन्छ ।

१४ श्वेत-कुष्ठमा–रातीगेड़ी र चितूको जरा पानीमा पिंधी लगाउनाले श्वेत-कुष्ठ नष्ट हुन्छ ।

१५ जोनि दुखेमा–रातीगेड़ीको पात तोरीको तेलमा पकाई छानेर राख्नू । जोनिमा मालिश गर्नाले दर्द आराम हुन्छ ।

१६ सर्पको विषमा–[1]रातीगेड़ीको जरा सर्पले टोकेको ठाउँमा घोटेर लगाउनाले र यसको पातले वमन गराउनाले सर्पको विष उत्रन्छ ।



१–यो विषैला वस्तु हो मात्रा धेरै पऱ्यो भने झाडा र वान्त हुन्छ, कमजोरी र बेचैनी पैदा गर्छ; यसको विष हटाउन घ्यू, दूध र बेलको गुदो दिनुपर्दछ । साधारण मात्रा १ रत्तीदेखि २ रत्तीसम्म हो ।

गठियामा बाँध्नाले गाँठको सूज नष्ट हुन्छ।

८ वायुको दर्दमा—रातीगेड़ीको पातको रस निकालेर तेलमा मिलाई मालिस गर्नाले वायुको दर्द आराम हुन्छ।

९ स्नायु-जालको कमजोरीमा—आधा रत्तीदेखि १ रत्तीसम्म रातिगेड़ीको चूर्ण दूधमा पकाएर सुकुमेलको धूलो ३ लाल छरेर पिउनाले स्नायु-जालको शक्ति बढ्दछ। (मात्रा अलीकति मात्र बढ्ता भयो भने पनि वमन र दिशा हुन्छ, विचार गरेर मात्र दिनू)।

१० अलकाईमा—१।२ मासा रातीगेड़ीको जरा नरिवलको पानीसित दिनाले अलकाई नष्ट हुन्छ।

११ उपदंशमा—३ मासा सेतो रातीगेड़ीको जरा र ३ मासा सेतो जपापुष्पको जरा पानीमा पिंधेर पिउनाले र उपदंशको घाउमा पनि लगाउनाले यसले उपदंश (भिरङ्गी) नष्ट हुन्छ।

१२ प्रमेहमा—३।४ मासा रातीगेड़ीको पातमा रस दूधसित पिउनाले प्रमेह नष्ट हुन्छ।

१३ श्वेत-प्रदरमा—३ मासा रातीगेड़ीको जरा रातभर पानीमा भिजाएर बेहान-बेलुका छानेर पिउनाले श्वेत-प्रदर नष्ट हुन्छ।

१४ श्वेत-कुष्ठमा—रातीगेड़ी र चितूको जरा पानीमा पिंधी लगाउनाले श्वेत-कुष्ठ नष्ट हुन्छ।

१५ जोर्नि दुखेमा—रातीगेड़ीको पात तोरीको तेलमा पकाई छानेर राख्नू। जोर्निमा मालिश गर्नाले दर्द आराम हुन्छ।

१६ सर्पको विषमा—[1]रातीगेड़ीको जरा सर्पले टोकेको ठाउँमा घोटेर लगाउनाले र यसको पातले वमन गराउनाले सर्पको विष उत्रन्छ।



[1]—यो विषैला वस्तु हो मात्रा धेरै पर्‍यो भने झाडा र वान्त हुन्छ, कमजोरी र बेचैनी पैदा गर्छ; यसको विष हटाउन घ्यू, दूध र बेलको गुदो दिनुपर्दछ। साधारण मात्रा १ रत्तीदेखि २ रत्तीसम्म हो।

७ आम-वातमा–३-३ मासा गोरखमुण्डी र सुठोको चूर्ण बनाएर तातो पानीसित खानाले आमवात नष्ट हुन्छ ।

८ अलकाईमा–६ मासा गोरखमुण्डीको चूर्ण गाईको दूधसित पियो भने अलकाई नष्ट हुन्छ ।

९ अथवा–६ मासा गोरखमुण्डीको धूलो र २ लाल कपूर मिलाई दूधसित पिउनाले अलकाई नष्ट हुन्छ ।

१० अथवा–३ मासादेखि ६ मासासम्म गोरखमुण्डीको जराको बोक्राको धूलो मोहीसित पिउनाले अलकाई नष्ट हुन्छ ।

११ अथवा–गोरखमुण्डीको जराको बोक्रा पिंधी लेदो बनाएर अलकाईको खटिरामा बाँध्नाले पनि अलकाई आराम हुन्छ ।

१२ अथवा–गोरखमुण्डीको पञ्चाङ्ग उखेलेर उसको धुवाँ अलकाईको खटिरामा दियो भने अलकाईको खटिरा सुकेर खस्दछ ।

१३ कण्ठमालामा–गोरखमुण्डीको जराको बोक्रा पिंधी चटनी बनाएर गण्डमालाको गाँठोमा बाँध्नाले गण्डमाला नष्ट हुन्छ ।

१४ अथवा–३॥ तोला गोरखमुण्डी राती भिजाउनू र बेहान मलेर छानेर पिउनू, गण्डमाला एकदम नष्ट हुन्छ ( बच्चालाई मात्रा घटाउनू)।

१५ अथवा–गोरखमुण्डीको जरा गोरखमुण्डीको रससँग पिंधेर लेप गर्नाले र ६ मासा गोरखमुण्डीको रस पिउनाले गण्डमाला नष्ट हुन्छ ।

१६ पथरीमा–१ तोला गोरखमुण्डीको काढ़ा पिए पथरी नष्ट हुन्छ।

१७ अथवा–१ तोला गोरखमुण्डी र गोखुरको काढ़ा पिए पथरी जान्छ ।

१८ जुकामा–६ मासा गोरखमुण्डीको जराको चूर्णमा वायुबिडङ्ग मिलाई सेवन गर्नाले जुका नष्ट हुन्छन् ।

१९ अथवा–२ मासा गोरखमुण्डीको बिउको चूर्ण फाँको मारी पानी पिउनाले जुका नष्ट हुन्छ ।

२० गुल्ममा–१ तोला गोरखमुण्डीको जराको धूलो मोहिमा मिलाएर छानेर पिउनाले गुल्म रोग नष्ट हुन्छ ।

७ आम-वातमा–३-३ मासा गोरखमुण्डी र सुठोको चूर्ण बनाएर तातो पानीसित खानाले आमवात नष्ट हुन्छ।

८ अलकाईमा–६ मासा गोरखमुण्डीको चूर्ण गाईको दूधसित पियो भने अलकाई नष्ट हुन्छ।

९ अथवा–६ मासा गोरखमुण्डीको धूलो र २ लाल कपूर मिलाई दूधसित पिउनाले अलकाई नष्ट हुन्छ।

१० अथवा–३ मासादेखि ६ मासासम्म गोरखमुण्डीको जराको बोक्राको धूलो मोहीसित पिउनाले अलकाई नष्ट हुन्छ।

११ अथवा–गोरखमुण्डीको जराको बोक्रा पिंधी लेदो बनाएर अलकाईको खटिरामा बाँध्नाले पनि अलकाई आराम हुन्छ।

१२ अथवा–गोरखमुण्डीको पञ्चाङ्ग उखेलेर उसको धुवाँ अलकाईको खटिरामा दियो भने अलकाईको खटिरा सुकेर खस्दछ।

१३ कण्ठमालामा–गोरखमुण्डीको जराको बोक्रा पिंधी चटनी बनाएर गण्डमालाको गाँठोमा बाँध्नाले गण्डमाला नष्ट हुन्छ।

१४ अथवा–३॥ तोला गोरखमुण्डी राती भिजाउनू र बेहान मलेर छानेर पिउनू, गण्डमाला एकदम नष्ट हुन्छ (बचालाई मात्रा घटाउनू)।

१५ अथवा–गोरखमुण्डीको जरा गोरखमुण्डीको रससँग पिंधेर लेप गर्नाले र ६ मासा गोरखमुण्डीको रस पिउनाले गण्डमाला नष्ट हुन्छ।

१६ पथरीमा–१ तोला गोरखमुण्डीको काढ़ा पिए पथरी नष्ट हुन्छ।

१७ अथवा–१ तोला गोरखमुण्डी र गोखुरको काढ़ा पिए पथरी जान्छ।

१८ जुकामा–६ मासा गोरखमुण्डीको जराको चूर्णमा बायुबिडङ्ग मिलाई सेवन गर्नाले जुका नष्ट हुन्छन्।

१९ अथवा–२ मासा गोरखमुण्डीको बिउको चूर्ण फाँको मारी पानी पिउनाले जुका नष्ट हुन्छ।

२० गुल्ममा–१ तोला गोरखमुण्डीको जराको धूलो मोहिमा मिलाएर छानेर पिउनाले गुल्म रोग नष्ट हुन्छ।

रहन्छ । कपाल कहिल्यै पनि फुल्दैन ।

### ३० अनेक प्रयोगहरू :-

यसको चूर्ण नीमको रससँग लियो भने नपुंसकता नष्ट हुन्छ ।
,, ,, मिश्री सित ,, ,, वीर्यको कमजोरी जान्छ ।
,, ,, बासी पानी सित ,, ,, भगन्दर, रक्त-पित्त, दम र तिजरो दूर हुन्छ ।
,, ,, बाखीको दही सित ,, ,, मृतवत्सा-रोग नष्ट हुन्छ ।
,, ,, शखरसँग ,, ,, जलोदर दूर हुन्छ ।
,, ,, मरिचसँग ,, ,, जरो जान्छ ।
,, ,, जीरासँग ,, ,, दाह दूर हुन्छ ।
,, ,, गो-दुग्धसँग ,, ,, चित्त-भ्रम र प्रमेह हट्छ ।
,, ,, धनियाँ सँग ,, ,, आँखाको रोग आराम हुन्छ ।
,, ,, कपूर सँग ,, ,, अलकाई नष्ट हुन्छ ।
,, ,, कागतीको रससँग ,, मृगी दूर हुन्छ ।
,, ,, जाइफलको चूर्ण मिलाई बाखीको दूधसित दिगाले स्त्रीहरू गर्भ धारण गर्न समर्थ हुन्छन् ।

३१ स्त्रीको स्तन-शैथिल्यमा—गोरखमुण्डीको पञ्चाङ्ग र पिप्ला बराबर लिई पानीमा पिधेर यो लेद्रोको चौगुना तिलको तेलमा तेलको चौगुना पानी मिलाउनू र पकाउनू तेल मात्र बाँकी रहेपछि भिकेर छानी राख्नू। यो तेलमा रुवो भिजाएर स्तनमा बाँध्ने गर्नाले र यही तेल नाकमा हाल्नाले पनि लत्रेको स्त्रीको स्तन साह्रो भएर आउँछ ।

३२ लिंग-शक्ति बढाउनामा—गोरखमुण्डीको पञ्चाङ्गमा पानी हाली पिंध्नू र लेद्रोको चारगुना तिलको तेल हाली पकाउनू र माथिको जस्तै गरी पकाएर छान्नू यो तेल ७ मासा रोज ४० दिनसम्म खानाले कामेन्द्रिय अत्यन्त तेजिलो हुन्छ ।

रहन्छ । कपाल कहिल्यै पनि फुल्दैन ।

३० अनेक प्रयोगहरू :-

यसको चूर्ण नीमको रससँग लियो भने नपुंसकता नष्ट हुन्छ ।

| | | | | | |
|---|---|---|---|---|---|
| ,, | ,, मिश्री सित | ,, | ,, | वीर्यको कमजोरी जान्छ । |
| ,, | ,, बासी पानी सित | ,, | ,, | भगन्दर, रक्त-पित्त, दम र तिजरो दूर हुन्छ । |
| ,, | ,, बाख्रीको दही सित | ,, | ,, | मृतवत्सा-रोग नष्ट हुन्छ । |
| ,, | ,, शखरसँग | ,, | ,, | जलोदर दूर हुन्छ । |
| ,, | ,, मरिचसँग | ,, | ,, | जरो जान्छ । |
| ,, | ,, जीरासँग | ,, | ,, | दाह दूर हुन्छ । |
| ,, | ,, गो-दुग्धसँग | ,, | ,, | चित्त-भ्रम र प्रमेह हट्छ । |
| ,, | ,, धनियाँ सँग | ,, | ,, | आँखाको रोग आराम हुन्छ । |
| ,, | ,, कपूर सँग | ,, | ,, | अलकाई नष्ट हुन्छ । |
| ,, | ,, कागतीको रससँग | ,, | | मृगी दूर हुन्छ । |
| ,, | ,, जाइफलको चूर्ण मिलाई बाख्रीको दूधसित दिनाले | | | स्त्रीहरू गर्भ धारण गर्न समर्थ हुन्छन् । |

३१ स्त्रीको स्तन-शैथिल्यमा—गोरखमुण्डीको पञ्चाङ्ग र पिल्ला बराबर लिई पानीमा पिधेर यो लेदोको चौगुना तिलको तेलमा तेलको चौगुना पानी मिलाउनू र पकाउनू तेल मात्र बाँकी रहेपछि झिकेर छानी राख्नू । यो तेलमा रूवो भिजाएर स्तनमा बाँध्ने गर्नाले र यही तेल नाकमा हाल्नाले पनि लत्रेको स्त्रीको स्तन साह्रो भएर आउँछ ।

३२ लिंग-शक्ति बढ़ाउनामा—गोरखमुण्डीको पञ्चाङ्गमा पानी हाली पिध्नू र लेदोको चारगुना तिलको तेल हाली पकाउनू र माथिको जस्तै गरी पकाएर छान्नू यो तेल ७ मासा रोज ४० दिनसम्म खानाले कामेन्द्रिय अत्यन्त तेजिलो हुन्छ ।

३ क्षयमा–बेहान दूधमा दालचीनीको तेल ५ थोपासम्म मिलाई क्षय-रोगीलाई पिलाउने गऱ्यो भने क्षयका उपद्रव, कफबाट रगत आउने खोकी जरो इत्यादि नष्ट भई बिस्तारै-बिस्तारै आराम हुन्छ। यो औषधि खानेबित्तिकै क्षयको शक्ति हट्तै जान्छ।

४ कपाल दुखेमा–दालचीनीको तेल निधारमा र कञ्चटमा मल्नाले सर्दीबाट पैदा भएको शिरदर्द आराम हुन्छ।

५ दाँतको रोगमा–दालचीनीको तेल कपासको फाहामा राखेर खोक्रो दाँत भित्र हाली च्याप्यो भने दाँतका कीरा र दन्त-शूल समेत नष्ट हुन्छ। दाँतको बाहिर (गालामा) पनि लगाउनू।

६ कानका रोग–दालचीनीको तेल २-३ थोपा कानमा हाल्नाले कानका अरु रोग र बहिरोपन समेत नष्ट हुन्छ। (कान पोल्यो भने तिलको तेलमा मिसाई हाल्नू)।

७ अतिसारमा–४ मासा दालचीनी र १ तोला खयर मिलाएर पिंध्नू। २५ तोला तातो पानीमा यो औषधि हाली छोपिदिनू। २ घण्टापछि छानेर २ मात्रा बनाई पिउनू। यसले अतिसार नष्ट हुन्छ।

८ अथवा–६ रत्ती दालचीनीको चूर्ण र ६ रत्ती खयरको चूर्ण मिलाएर तातो पानीसित पिए पनि अतिसार आराम हुन्छ।

९ मन्दाग्नि र कब्जियतमा–५ रत्ती सुठो, ५ रत्ती दालचीनी र ५ रत्ती अलैंची पिंधी भात खाने बेला खाई भात खानाले खाएको हजम हुन्छ, भोक लाग्दछ र दिशा खलास पनि हुन्छ।

१० वायुको दर्दमा–दालचीनीको तेल मलिदिए वायुको दर्द जान्छ।

११ पेट दुखेमा–३ मासा दालचिनी र ३ मासा सुठोको धूलो मिलाएर तातो पानीसँग खानाले पेट दुखेको आराम हुन्छ। पेट फुल्ने, वायु गुड़गुड़ गर्ने दिशा खलास नहुने र आन्द्राको दोष समेत नष्ट भई शरीर फुर्तिलो हुन्छ। आउँको दोष पनि नष्ट हुन्छ।

१२ पिसाबको रोगमा–३ मासा दालचीनी, ३ मासा गोखुर र २ मासा मिश्रीको काढ़ा पिउनाले पिसाब सफा हुन्छ र स्त्रीको मासिक-

३ क्षयमा–बेहान दूधमा दालचीनीको तेल ५ थोपासम्म मिलाई क्षय-रोगीलाई पिलाउने गर्‍यो भने क्षयका उपद्रव, कफबाट रगत आउने खोकी जरो इत्यादि नष्ट भई बिस्तारै-बिस्तारै आराम हुन्छ। यो औषधि खानेबित्तिकै क्षयको शक्ति हट्दै जान्छ।

४ कपाल दुखेमा–दालचीनीको तेल निधारमा र कञ्चटमा मल्नाले सर्दीबाट पैदा भएको शिरदर्द आराम हुन्छ।

५ दाँतको रोगमा–दालचीनीको तेल कपासको फाहामा राखेर खोक्रो दाँत भित्र हाली च्याप्यो भने दाँतका कीरा र दन्त-शूल समेत नष्ट हुन्छ। दाँतको बाहिर (गालामा) पनि लगाउनू।

६ कानका रोग–दालचीनीको तेल २-३ थोपा कानमा हाल्नाले कानका अरु रोग र बहिरोपन समेत नष्ट हुन्छ। (कान पोल्यो भने तिलको तेलमा मिसाई हाल्नू)।

७ अतिसारमा–४ मासा दालचीनी र १ तोला खयर मिलाएर पिंध्नू। २५ तोला तातो पानीमा यो औषधि हाली छोपिदिनू। २ घण्टापछि छानेर २ मात्रा बनाई पिउनू। यसले अतिसार नष्ट हुन्छ।

८ अथवा–६ रत्ती दालचीनीको चूर्ण र ६ रत्ती खयरको चूर्ण मिलाएर तातो पानीसित पिए पनि अतिसार आराम हुन्छ।

९ मन्दाग्नि र कब्जियतमा–५ रत्ती सुठो, ५ रत्ती दालचीनी र ५ रत्ती अलैंची पिंधी भात खाने बेला खाई भात खानाले खाएको हजम हुन्छ, भोक लाग्दछ र दिशा खलास पनि हुन्छ।

१० वायुको दर्दमा–दालचीनीको तेल मलिदिए वायुको दर्द जान्छ।

११ पेट दुखेमा–३ मासा दालचिनी र ३ मासा सुठोको धूलो मिलाएर तातो पानीसँग खानाले पेट दुखेको आराम हुन्छ। पेट फुल्ने, वायु गुड्गुड् गर्ने दिशा खलास नहुने र आन्द्राको दोष समेत नष्ट भई शरीर फुर्तिलो हुन्छ। आउँको दोष पनि नष्ट हुन्छ।

१२ पिसाबको रोगमा–३ मासा दालचीनी, ३ मासा गोखुर र २ मासा मिश्रीको काढ़ा पिउनाले पिसाब सफा हुन्छ र स्त्रीको मासिक-

## घ्यूकुमारी

| | |
|---|---|
| आँखाको रोगमा १, २, ३ | पेटको रोगमा १२ |
| कानको रोगमा ४ | मासिक-धर्मको रोगमा १३ |
| मस्तिष्कको रोगमा ५ | वायुको व्यथामा १४ |
| जरोमा ६, ७ | मधुमेहमा १५ |
| फियो बढ़ेमा ८ | शूलमा १६ |
| कमल-पित्तमा ९ | यौवन स्थिर गर्नामा १७ |
| फोड़ामा १० | विषमा १८ |
| वायु-गोलामा ११ | |

नेपाली—घ्यूकुमारी। हिन्दी—ग्वारपाठा। संस्कृत—कुमारी।

१ आँखाको रोगमा–घ्यूकुमारीको गुदी हलेदो मिलाई तताएर आँखामा बाँध्नाले आँखा दुखेको आराम हुन्छ।

२ अथवा–१ मासा घ्यूकुमारीको गुदी र ३ रत्ती अफीम मिलाएर सानो पोको बनाउनू र पानीमा डुबाई आँखा पुछ्नाले र त्यसको १।२ थोपा रस आँखामा हाल्नाले पनि आँखा दुखेको आराम हुन्छ।

३ अथवा–घ्यूकुमारीको गुदी र हलेदोको चूर्ण मिलाएर तताई पैतालामा बाँध्नाले आँखा दुखेकोमा आराम हुन्छ।

४ कानको रोगमा–घ्यूकुमारीको रस तातो पारेर दाहिने कान दुखेको भए देब्रे कानमा र देब्रे कान दुखेको भए दाहिने कानमा हाल्नाले कानको पीडा नष्ट हुन्छ।

५ मस्तिष्कको रोगमा–१ तोला घ्यूकुमारीको रस खाने गर्नाले र कपालमा यसको रस हाल्नाले मस्तिष्कका रोग नष्ट हुन्छन्, मगजको गर्मी शान्त हुन्छ। मस्तिष्क-विभ्रम आदि रोग पनि नष्ट हुन्छन्।

६ जरोमा–१ तोला घ्यूकुमारीको जरा तातो पानीसँग पिउनाले

# घ्यूकुमारी

आँखाको रोगमा १, २, ३
कानको रोगमा ४
मस्तिष्कको रोगमा ५
जरोमा ६, ७
फियो बढ़ेमा ८
कमल-पित्तमा ९
फोड़ामा १०
वायु-गोलामा ११
पेटको रोगमा १२
मासिक-धर्मको रोगमा १३
वायुको व्यथामा १४
मधुमेहमा १५
शूलमा १६
यौवन स्थिर गर्नामा १७
विषमा १८

नेपाली—घ्यूकुमारी। हिन्दी—ग्वारपाठा। संस्कृत—कुमारी।

१ आँखाको रोगमा–घ्यूकुमारीको गुदी हलेदो मिलाई तताएर आँखामा बाँध्नाले आँखा दुखेको आराम हुन्छ।

२ अथवा–१ मासा घ्यूकुमारीको गुदी र ३ रत्ती अफीम मिलाएर सानो पोको बनाउनू र पानीमा डुबाई आँखा पुछ्नाले र त्यसको १।२ थोपा रस आँखामा हाल्नाले पनि आँखा दुखेको आराम हुन्छ।

३ अथवा–घ्यूकुमारीको गुदी र हलेदोको चूर्ण मिलाएर तताई पैतालामा बाँध्नाले आँखा दुखेकोमा आराम हुन्छ।

४ कानको रोगमा–घ्यूकुमारीको रस तातो पारेर दाहिने कान दुखेको भए देब्रे कानमा र देब्रे कान दुखेको भए दाहिने कानमा हाल्नाले कानको पीडा नष्ट हुन्छ।

५ मस्तिष्कको रोगमा–१ तोला घ्यूकुमारीको रस खाने गर्नाले र कपालमा यसको रस हाल्नाले मस्तिष्कका रोग नष्ट हुन्छन्, मगजको गर्मी शान्त हुन्छ। मस्तिष्क-विभ्रम आदि रोग पनि नष्ट हुन्छन्।

६ जरोमा–१ तोला घ्यूकुमारीको जरा तातो पानीसँग पिउनाले

चीनीसँग खानाले मधुमेह नष्ट हुन्छ ।

१६ शूलमा–६ मासा घ्यूकुमारीको जराको धूलो खानाले शूल नष्ट हुन्छ ।

१७ यौवनस्थिर गर्नामा–प्रतिदिन ३।४ तोला घ्यूकुमारीको गुदी खाने गर्नाले त्यसलाई कुनै रोगले पनि छुँदैन, दाँत बलिया हुन्छन्, स्वर कोइलीको जस्तो हुन्छ, कपाल कालो रहन्छ, मुखमा चाउरी पर्दैन र शरीरमा तागत खूब बनिरहन्छ ।

१८ विषमा–घ्यूकुमारीको रसको सेवनले तमाम विषहरू नष्ट पार्दछन् । लगाउनू पनि पर्दछ ।



चीनीसँग खानाले मधुमेह नष्ट हुन्छ ।

१६ शूलमा–६ मासा घ्यूकुमारीको जराको धूलो खानाले शूल नष्ट हुन्छ ।

१७ यौवनस्थिर गर्नामा–प्रतिदिन ३।४ तोला घ्यूकुमारीको गुदी खाने गर्नाले त्यसलाई कुनै रोगले पनि छुँदैन, दाँत बलिया हुन्छन्, स्वर कोइलीको जस्तो हुन्छ, कपाल कालो रहन्छ, मुखमा चाउरी पर्दैन र शरीरमा तागत खूब बनिरहन्छ ।

१८ विषमा–घ्यूकुमारीको रसको सेवनले तमाम विषहरू नष्ट पार्दछन् । लगाउनू पनि पर्दछ ।



७ मस्तिष्कको व्यथामा–६ मासा चम्सूरको गेड़ा चूर्ण गरी मिश्री मिलाई दूधसँग दिनाले मस्तिष्क बलियो हुन्छ, सन्धिवात, स्नायु-जालको पीडा नष्ट हुन्छ र मगज (बुद्धि) पनि बढ्दछ।

८ सूतिका रोगमा–६ मासा चम्सूरको गेड़ाको काढ़ा पकाई पिउनाले सूतिका-रोग नष्ट हुन्छ र सुत्केरी मोटाउँछन्।

९ कम्मर दुखेमा–चम्सूरको गेड़ा पिंधी तताएर लेप गर्नाले कम्मर दुख्ने, सन्धि-पीडा र सुनिएकोमा पनि लाभ हुन्छ।

१० सुनिएकोमा–चम्सूरको गेड़ा पिंधेर कागतीको रस मिलाई सूजमा लेप गर्‍यो भने सुनिएकोमा आराम हुन्छ।

११ दाह र खुजलीमा–६ मासा चम्सूरको गेड़ाको लेदो बनाई पिउनाले दाद र खुजली नष्ट हुन्छ।

१२ उपदंशमा–एक तोला चम्सूरको गेड़ा पकाएर काढ़ा पिउनाले उपदंशको विष नष्ट हुन्छ।

१३ दुग्ध-वृद्धिमा–एक तोला चम्सूरको गेड़ा दूधमा पकाएर दूध पिउनाले स्त्रीको दुग्ध-वृद्धि हुन्छ।

१४ रगत बिग्रेमा–६ मासा चम्सूरको गेड़ा पानीमा पिंधेर पिउनाले र घाउ आदिमा लगाउनाले पनि रगत बिग्रेको नष्ट हुन्छ।

१५ चोटमा–चोट लागेको ठाउँमा चम्सूरको ताजा गेड़ा पिंधेर पानी मिलाई तताई तात्तातै चोट लागेको ठाउँमा बाँधिदिनू। यसले चर्म-रोग, वातरोग, नेत्ररोग र चोटमा समेत फाइदा गर्छ।

७ मस्तिष्कको व्यथामा–६ मासा चम्सूरको गेड़ा चूर्ण गरी मिश्री मिलाई दूधसँग दिनाले मस्तिष्क बलियो हुन्छ, सन्धिवात, स्नायु-जालको पीडा नष्ट हुन्छ र मगज (बुद्धि) पनि बढ्दछ।

८ सूतिका रोगमा–६ मासा चम्सूरको गेड़ाको काढ़ा पकाई पिउनाले सूतिका-रोग नष्ट हुन्छ र सुत्केरी मोटाउँछन्।

९ कम्मर दुखेमा–चम्सूरको गेड़ा पिंधी तताएर लेप गर्नाले कम्मर दुख्ने, सन्धि-पीडा र सुनिएकोमा पनि लाभ हुन्छ।

१० सुनिएकोमा–चम्सूरको गेड़ा पिंधेर कागतीको रस मिलाई सूजमा लेप गर्‍यो भने सुनिएकोमा आराम हुन्छ।

११ दाह र खुजलीमा–६ मासा चम्सूरको गेड़ाको लेदो बनाई पिउनाले दाद र खुजली नष्ट हुन्छ।

१२ उपदंशमा–एक तोला चम्सूरको गेड़ा पकाएर काढ़ा पिउनाले उपदंशको विष नष्ट हुन्छ।

१३ दुग्ध-वृद्धिमा–एक तोला चम्सूरको गेड़ा दूधमा पकाएर दूध पिउनाले स्त्रीको दुग्ध-वृद्धि हुन्छ।

१४ रगत बिग्रेमा–६ मासा चम्सूरको गेड़ा पानीमा पिंधेर पिउ-नाले र घाउ आदिमा लगाउनाले पनि रगत बिग्रेको नष्ट हुन्छ।

१५ चोटमा–चोट लागेको ठाउँमा चम्सूरको ताजा गेड़ा पिंधेर पानी मिलाई तताई तात्तातै चोट लागेको ठाउँमा बाँधिदिनू। यसले चर्म-रोग, वातरोग, नेत्ररोग र चोटमा समेत फाइदा गर्छ।

अलकाई नष्ट हुन्छ । यो एक तोला खानाले संग्रहणी, कोढ़ र रगतको विकार पनि नष्ट हुन्छ ।

८ सर्पको विषमा–२ तोला चरिअमिली पिंधेर पानी मिलाई खिलाउनू र यही औषधी टिकिया गरी टोकेको घाउमा लगाएर बाँधिदिनाले सर्पको विष नष्ट हुन्छ ।

९ मुख नभएको फोड़ामा–चरिअमिलीको पात पिंधेर लगाए फोड़ा जान्छ ।

१० धतूराको नशामा–२।३ तोला चरिअमिलीको ताजा पातको रस पिलाउनाले धतूराको नशा नष्ट हुन्छ ।

११ आउँमा–१ तोला चरिअमिली चटनी जस्तो पिंधी मोहीसँग दिनको २।३ पटक तताएर पिलाए पुरानो आउँ नष्ट हुन्छ ।

१२ कपाल दुखेमा–चरिअमिलीको रसमा प्याजको रस मिलाएर शिरमा लेप गर्नाले पित्तबाट कपाल दुखेको आराम हुन्छ ।

१३ अन्तर्दाहमा–१।२ तोला चरिअमिलीको पात पिंधेर मिश्री मिलाई पिलाउनाले अन्तर्दाह (भित्रको दाह) नष्ट हुन्छ ।

१४ बेर्नु निस्केमा–चरिअमिलीको पातको रसमा घ्यू पकाएर गुदामा लगाउनाले बेर्नु निस्कन बन्द हुन्छ ।

१५ सुनिएमा–चरिअमिली पानीमा पिंधेर पुल्टिस जस्तो बनाई तात्तातै सूजमा बाँधे दाह र पीडा शान्त हुन्छ र सूज आराम हुन्छ ।

अलकाई नष्ट हुन्छ। यो एक तोला खानाले संग्रहणी, कोढ़ र रगतको विकार पनि नष्ट हुन्छ।

८ सर्पको विषमा–२ तोला चरिअमिली पिंधेर पानी मिलाई खिलाउनू र यही औषधी टिकिया गरी टोकेको घाउमा लगाएर बाँधिदिनाले सर्पको विष नष्ट हुन्छ।

९ मुख नभएको फोड़ामा–चरिअमिलीको पात पिंधेर लगाए फोड़ा जान्छ।

१० धतूराको नशामा–२।३ तोला चरिअमिलीको ताजा पातको रस पिलाउनाले धतूराको नशा नष्ट हुन्छ।

११ आउँमा–१ तोला चरिअमिली चटनी जस्तो पिंधी मोहीसँग दिनको २।३ पटक तताएर पिलाए पुरानो आउँ नष्ट हुन्छ।

१२ कपाल दुखेमा–चरिअमिलीको रसमा प्याजको रस मिलाएर शिरमा लेप गर्नाले पित्तबाट कपाल दुखेको आराम हुन्छ।

१३ अन्तर्दाहमा–१।२ तोला चरिअमिलीको पात पिंधेर मिश्री मिलाई पिलाउनाले अन्तर्दाह ( भित्रको दाह ) नष्ट हुन्छ।

१४ बेर्नु निस्केमा–चरिअमिलीको पातको रसमा घ्यू पकाएर गुदामा लगाउनाले बेर्नु निस्कन बन्द हुन्छ।

१५ सुनिएमा–चरिअमिली पानीमा पिंधेर पुल्टिस जस्तो बनाई तात्तातै सूजमा बाँधे दाह र पीडा शान्त हुन्छ र सूज आराम हुन्छ।

कपड़मिट्टी गरेर पोल्नू र भस्म बनाउनू। १ तोला यो भस्ममा ४ तोला गाईको गहुँत मिलाएर पियो भने फियो बढ़ेको नष्ट हुन्छ।

७ कमल-पित्तमा–१ मासा अरिणको जराको चूर्णमा मह मिलाएर चाट्नाले कमल-पित्त नष्ट हुन्छ।

८ अलकाईमा–अरिणको हरियो पात पिंधेर गुदामा बाँध्नाले र यसको ५।६ ओटा गेड़ा रोज खानाले अलकाई नष्ट हुन्छ।

९ अथवा–अरिणको गेड़ाको गुदी र नौनी बराबर मिलाई पिंध्नू र अलकाईको खटिरामा दल्नू, १२।१५ दिनमा खटिरा वैलाउँछ।

१० आन्द्रा[1] बढ़ेमा–आन्द्रा बढ्ने रोग शुरू हुनेबित्तिकै अरिणको तेल खाने गर्‍यो भने यो रोग त्यसै आराम हुन्छ, चिर्नु पर्दैन।

११ आउँमा–आउँ बढ्ने रोग शुरू हुनेबित्तिकै अरिणको तेल खान शुरू गर्‍यो भने रोग बढ्न सक्तैन र आराम हुन्छ।

१२ मिर्गौलाको दर्दमा–अरिणको गेड़ाको गुदी पिंधी तातो पारेर लेप लगाउनाले मिर्गौलाको पीडा शमन हुन्छ।

१३ लिंगको कमजोरीमा–अरिणको गेड़ा र तिलको तेल बराबर पिंधेर मूत्रेन्द्रियमा मालिश गर्नाले मूत्रेन्द्रियको कमजोरी नष्ट हुन्छ।

१४ छालाको रोगमा–१ तोला अरिणको जराको काढ़ा बनाएर पिउनाले चर्म-रोग नष्ट हुन्छ।

१५ घाउ फोड़ामा–अरिणको जराको काढ़ाले घाउ धुनू र अरिणको पात पिंधेर लगाउनू, घाउको बिग्रेको मासु सफा भई नयाँ मासु पलाउँछ। फोड़ा पनि वैलाउँछ।

१६ दिशा लगाउनामा–अरिणको तेल १ तोलादेखि २॥ तोला-सम्मको मात्रामा पिउनाले खूब राम्रोसँग दिशा हुन्छ, केही डर हुँदैन; कसैलाई कमजोरी छ भने पनि यसले केही बिगार गर्दैन। (यसको गन्धले पिउन नसक्नेलाई कागतीको रस मिलाएर पिलाउनू)।

१७ स्तनको शिथिलतामा–अरिणको पात कागतीको चूकमा पिंधेर

---

१–यसलाई डाक्टरीमा Appedicitis भन्दछन्।

कपड़मिट्टी गरेर पोल्नू र भस्म बनाउनू। १ तोला यो भस्ममा ४ तोला गाईको गहुँत मिलाएर पियो भने फियो बढ़ेको नष्ट हुन्छ।

७ कमल-पित्तमा–१ मासा अरिणको जराको चूर्णमा मह मिलाएर चाट्नाले कमल-पित्त नष्ट हुन्छ।

८ अलकाईमा–अरिणको हरियो पात पिंधेर गुदामा बाँध्नाले र यसको ५।६ ओटा गेड़ा रोज खानाले अलकाई नष्ट हुन्छ।

९ अथवा–अरिणको गेड़ाको गुदी र नौनी बराबर मिलाई पिंध्नू र अलकाईको खटिरामा दल्नू, १२।१५ दिनमा खटिरा वैलाउँछ।

१० आन्द्रा[1] बढ़ेमा–आन्द्रा बढ्ने रोग शुरू हुनेबित्तिकै अरिणको तेल खाने गर्‍यो भने यो रोग त्यसै आराम हुन्छ, चिर्नु पर्दैन।

११ आउँमा–आउँ बढ्ने रोग शुरू हुनेबित्तिकै अरिणको तेल खान शुरू गर्‍यो भने रोग बढ्न सक्तैन र आराम हुन्छ।

१२ मिर्गौलाको दर्दमा–अरिणको गेड़ाको गुदी पिंधी तातो पारेर लेप लगाउनाले मिर्गौलाको पीडा शमन हुन्छ।

१३ लिंगको कमजोरीमा–अरिणको गेड़ा र तिलको तेल बराबर पिंधेर मूत्रेन्द्रियमा मालिश गर्नाले मूत्रेन्द्रियको कमजोरी नष्ट हुन्छ।

१४ छालाको रोगमा–१ तोला अरिणको जराको काढ़ा बनाएर पिउनाले चर्म-रोग नष्ट हुन्छ।

१५ घाउ फोड़ामा–अरिणको जराको काढ़ाले घाउ धुनू र अरिणको पात पिंधेर लगाउनू, घाउको बिग्रेको मासु सफा भई नयाँ मासु पलाउँछ। फोड़ा पनि वैलाउँछ।

१६ दिशा लगाउनामा–अरिणको तेल १ तोलादेखि २॥ तोला-सम्मको मात्रामा पिउनाले खूब राम्रोसँग दिशा हुन्छ, केही डर हुँदैन; कसैलाई कमजोरी छ भने पनि यसले केही बिगार गर्दैन। (यसको गन्धले पिउन नसक्नेलाई कागतीको रस मिलाएर पिलाउनू)।

१७ स्तनको शिथिलतामा–अरिणको पात कागतीको चूकमा पिंधेर

---

१–यसलाई डाक्टरीमा Appedicitis भन्दछन्।

# मेवा

मन्दाग्निमा १
अतिसारमा २
फियो बढ़ेमा ३, ४
जुकामा ५
उपदंशको खटिरामा ६
गाण्टो भएमा ७
दुग्ध-वृद्धिमा ८
पेटका सम्पूर्ण रोगमा ९
दाद र खुजलीमा १०
अलकाईमा ११
जरोमा १२
भोक बढ़ाउने र अरू रोगमा १३
बिच्छीको विषमा १४

नेपाली—मेवा। हिन्दी—पपीता। संस्कृत—वातकुम्भ।

१ मन्दाग्निमा–ज्वानो १५ तोला, सिंधेनुन, संचरनुन र साबरीनुन १-१ तोला यौटा शीशीमा हाल्नू र त्यसमा कागती र अदुवाको रसले भरिदिनू, अनि बन्द गर्नू, फेरि एक महीनासम्म त्यसै राखी छाड्नु। यो औषधी ३ मासा लिनू र त्यसमा १ रत्ती मेवाको सत्त्व[1] हाली खानू। यसले भयंकर मन्दाग्नि पनि नष्ट गरिदिन्छ।

२ अतिसारमा–मेवाको काँचो फल काटेर सुकाउनू त्यसको ६ मासा चूर्ण तातो पानीसित खायो भने पुरानो अतिसार पनि नष्ट हुन्छ।

---

१–काँचो मेवाको रूखको फलमा यौटा चक्कूले चार ठाउँमा विस्तारै कोर्नू फलमन्तिर एउटा काठको कटौरा बाँधिदिनू र भोलिपल्ट बेहान काठको कटौरामा परेको मेवाको दूध झिक्नू र एउटा हाँडीमा बालुवा राखेर चुलोमा बसाल्नू र आँच दिनू। त्यो तातो बालुवामाथि दूधको कटौरा राखी सेकाउनू जब दूध तातेर खुवा जस्तो हुन्छ; तब गोली बनाएर राख्नू, एकछिन पछी त्यो सुक्तछ। यसलाई "मेवाको सत्त्व" भन्दछन्। यस्तै मेवाको सत्त्व डाक्टरी दुकानमा "पेपीन" नामले चल्ती भएको हुन्छ, तर ज्यादै महगो हुन्छ।

# मेवा

मन्दाग्निमा १
अतिसारमा २
फियो बढ़ेमा ३, ४
जुकामा ५
उपदंशको खटिरामा ६
गाण्टो भएमा ७
दुग्ध-वृद्धिमा ८
पेटका सम्पूर्ण रोगमा ९
दाद र खुजलीमा १०
अलकाईमा ११
जरोमा १२
भोक बढ़ाउने र अरू रोगमा १३
बिच्छीको विषमा १४

नेपाली—मेवा। हिन्दी—पपीता। संस्कृत—वातकुम्भ।

१ मन्दाग्निमा–ज्वानो १५ तोला, सिंधेनुन, संचरनुन र साम्बरीनुन १-१ तोला यौटा शीशीमा हाल्नू र त्यसमा कागती र अदुवाको रसले भरिदिनू, अनि बन्द गर्नु, फेरि एक महीनासम्म त्यसै राखी छाड़नु। यो औषधी ३ मासा लिनू र त्यसमा १ रत्ती मेवाको सत्त्व[१] हाली खानू। यसले भयंकर मन्दाग्नि पनि नष्ट गरिदिन्छ।

२ अतिसारमा–मेवाको काँचो फल काटेर सुकाउनू त्यसको ६ मासा चूर्ण तातो पानीसित खायो भने पुरानो अतिसार पनि नष्ट हुन्छ।

---

१–काँचो मेवाको रूखको फलमा यौटा चक्कूले चार ठाउँमा विस्तारै कोर्नू फलमन्तिर एउटा काठको कटौरा बाँधिदिनू र भोलिपल्ट बेहान काठको कटौरामा परेको मेवाको दूध झिक्नू र एउटा हाँडीमा बालुवा राखेर चुलोमा बसाल्नू र आँच दिनू। त्यो तातो बालुवामाथि दूधको कटौरा राखी सेकाउनू जब दूध तातेर खुवा जस्तो हुन्छ; तब गोली बनाएर राख्नू, एकछिन पछी त्यो सुक्तछ। यसलाई "मेवाको सत्त्व" भन्दछन्। यस्तै मेवाको सत्त्व डाक्टरी दुकानमा "पेपीन" नामले चल्ती भएको हुन्छ, तर ज्यादै महगो हुन्छ।

१३ भोक बढ़ाउनामा र अरु रोगमा–मेवाको पाकेको फल खानाले अग्नि प्रदीप हुन्छ, भोक बढाउँछ, खाएको पचाउँछ, पेट फुलेको नष्ट गर्छ र मूत्र सफा गर्छ। यसले पेट पोल्ने व्यथा, फियोको व्यथा र पथरी पनि नष्ट गर्छ। यसले शरीरको मोटोपन हटाउँछ, शुकमा आउने रगत हटाउँछ, रक्तार्श र पिसाबको नलीको घाउ पनि नष्ट गर्छ। यो अमृतमय छ।

१४ बिच्छीको विषमा–मेवाको काँचो फलको दूध बिच्छीले टोकेको ठाउँमा लगाउनाले विष नष्ट हुन्छ। यसको बिउ पिँधेर लगाए पनि हुन्छ।

१३ भोक बढ़ाउनामा र अरु रोगमा–मेवाको पाकेको फल खानाले अग्नि प्रदीप हुन्छ, भोक बढाउँछ, खाएको पचाउँछ, पेट फुलेको नष्ट गर्छ र मूत्र सफा गर्छ। यसले पेट पोल्ने व्यथा, फियोको व्यथा र पथरी पनि नष्ट गर्छ। यसले शरीरको मोटोपन हटाउँछ, थुकमा आउने रगत हटाउँछ, रक्तार्श र पिसाबको नलीको घाउ पनि नष्ट गर्छ। यो अमृतमय छ।

१४ बिच्छीको विषमा–मेवाको काँचो फलको दूध बिच्छीले टोकेको ठाउँमा लगाउनाले विष नष्ट हुन्छ। यसको बिउ पिँधेर लगाए पनि हुन्छ।

●

# अमला



नेपाली—अमला। हिन्दी—आँवला। संस्कृत—आमलकी।

१ मुखको रोगमा–अमलाको पात पानीमा पकाएर कुल्ला गर्नाले मुख-पाक र दाँतका रोग पनि नष्ट हुन्छन्।

२ नेत्र-रोगमा–१ मासा अमला थिचेर २ घण्टासम्म पानीमा पकाउनू र छानेर दिनमा ३ पटक आँखामा हाल्नाले नेत्रका रोग नष्ट हुन्छन्।

३ अथवा–७ मासा अमला थिचेर पानीमा भिजाउनू। २।३ घण्टा भएपछि निचोरेर चौटा फ्याँकी दिनू र त्यही पानीमा फेरि ७ मासा अमला भिजाउनू। यस्तो क्रमले ४।५ पटक गरेपछि अनि त्यो झोल आँखामा हाल्ने गर्नाले केही दिनमा आँखाको फुलो काटिन्छ। आँखामा कुनै रोग पनि लाग्दैनन् र आँखा तेजिलो हुन्छ।

४ अथवा–हरियो अमलाको रस आँखामा लाउनाले आँखाको लाली नष्ट हुन्छ।

५ अथवा–हरियो अमला थिचेर मनतातो गरी आँखामा पट्टी बाँध्नू।

# अमला

| | |
|---|---|
| मुखको रोगमा १ | मूत्रकृच्छ्रमा १४ |
| नेत्र-रोगमा २, ३, ४, ५, ६ | सूजाकमा १५ |
| अजीर्णमा ७ | गठिया वातमा १६ |
| नाथ्रो फुटेमा ८ | आउँ-रगतमा १७ |
| अतिसारमा ९ | मूत्र-रोगमा १८ |
| अलकाईमा १० | श्वेत-प्रदरमा १९ |
| हिक्कामा ११ | सोम रोगमा २० |
| रक्त-पित्तमा १२ | धेरै रोगहरूमा २१ |
| पित्त-ज्वरमा १३ | |

नेपाली—अमला । हिन्दी—आँवला । संस्कृत—आमलकी ।

१ मुखको रोगमा–अमलाको पात पानीमा पकाएर कुल्ला गर्नाले मुख-पाक र दाँतका रोग पनि नष्ट हुन्छन् ।

२ नेत्र-रोगमा–१ मासा अमला थिचेर २ घण्टासम्म पानीमा पकाउनू र छानेर दिनमा ३ पटक आँखामा हाल्नाले नेत्रका रोग नष्ट हुन्छन् ।

३ अथवा–७ मासा अमला थिचेर पानीमा भिजाउनू । २।३ घण्टा भएपछि निचोरेर चौटा फ्याँकी दिनू र त्यही पानीमा फेरि ७ मासा अमला भिजाउनू । यस्तो क्रमले ४।५ पटक गरेपछि अनि त्यो झोल आँखामा हाल्ने गर्नाले केही दिनमा आँखाको फुलो काटिन्छ । आँखामा कुनै रोग पनि लाग्दैनन् र आँखा तेजिलो हुन्छ ।

४ अथवा–हरियो अमलाको रस आँखामा लाउनाले आँखाको लाली नष्ट हुन्छ ।

५ अथवा–हरियो अमला थिचेर मनतातो गरी आँखामा पट्टी बाँध्नू ।

बिस्तारै-बिस्तारै पीप आउन बन्द हुन्छ र घाउ पनि पुरिंदै जान्छ ।

१६ गठिया वातमा–२ तोला सुकेको अमला र २ तोला पुरानो शखर १॥ पाउ पानीमा पकाएर १ चौथाई पानी बाँकी रहेपछि मलेर छानी पिलाउनाले गठिया वात (जोर्नि दुख्ने) आराम हुन्छ। (यो औषधी खाँदा नुन छाड्नुपर्दछ)।

१७ आउँ-रगतमा–१ तोला सुकेको अमला पानीमा पिंधी खानाले रक्तातिसार, आउँ, अलकाई र पित्त-आदि नष्ट हुन्छन् ।

१८ मूत्र-रोगमा–अमला पिंधी छानेर मिश्री मिलाई पिउनाले पिसाबबाट रगत आउन बन्द हुन्छ, रक्त-पित्त र रक्तार्श पनि नष्ट हुन्छ ।

१९ श्वेत-प्रदरमा–१ मासा अमला भित्रको गेड़ा पिंधेर पानीमा मलेर छानेर त्यसमा मिश्री र मह मिलाएर खानाले श्वेत-प्रदर नष्ट हुन्छ।

२० सोम-रोगमा–६ मासा अमलाको रस, १ कोशा पाकेको केरामा मह र मिश्री मिलाएर खानाले सोम-रोग नष्ट हुन्छ ।

२१ धेरै रोगहरूमा–१ पाउ गाईको नौनी आगोमा तताउनू, त्यसमा २ तोला अमलाको चूर्ण हाल्नू र चलाउनू, अनि २ तोला बरको कमलो पात पिंधेर लेदो बनाई हाल्नू, हल्लाउनू र पकाउनू। जब सबै औषधी मिलीसक्छ, तब झिकेर राख्नू। यो औषधी ९ मासादेखि २ तोलासम्मको मात्रामा खानू, पथ्य खाली दूध-भात मात्र खानाले अलकाई र अरू तमाम रोगहरू नष्ट हुन्छन्। रोगी र अवस्था हेरी प्रयोग गर्नू, अत्यन्त गुणकारक छ; यसले धेरै रोगहरूमा फाइदा गर्छ।

बिस्तारै-बिस्तारै पीप आउन बन्द हुन्छ र घाउ पनि पुरिँदै जान्छ।

१६ गठिया वातमा–२ तोला सुकेको अमला र २ तोला पुरानो शखर १॥ पाउ पानीमा पकाएर १ चौथाई पानी बाँकी रहेपछि मलेर छानी पिलाउनाले गठिया वात (जोर्नि दुख्ने) आराम हुन्छ। (यो औषधी खाँदा नुन छाड्नुपर्दछ)।

१७ आउँ-रगतमा–१ तोला सुकेको अमला पानीमा पिंधी खानाले रक्तातिसार, आउँ, अलकाई र पित्त-आदि नष्ट हुन्छन्।

१८ मूत्र-रोगमा–अमला पिंधी छानेर मिश्री मिलाई पिउनाले पिसाबबाट रगत आउन बन्द हुन्छ, रक्त-पित्त र रक्तार्श पनि नष्ट हुन्छ।

१९ श्वेत-प्रदरमा–१ मासा अमला भित्रको गेड़ा पिंधेर पानीमा मलेर छानेर त्यसमा मिश्री र मह मिलाएर खानाले श्वेत-प्रदर नष्ट हुन्छ।

२० सोम-रोगमा–६ मासा अमलाको रस, १ कोशा पाकेको केरामा मह र मिश्री मिलाएर खानाले सोम-रोग नष्ट हुन्छ।

२१ धेरै रोगहरूमा–१ पाउ गाईको नौनी आगोमा तताउनू, त्यसमा २ तोला अमलाको चूर्ण हाल्नू र चलाउनू, अनि २ तोला बरको कमलो पात पिंधेर लेदो बनाई हाल्नू, हल्लाउनू र पकाउनू। जब सबै औषधी मिलीसक्छ, तब झिकेर राख्नू। यो औषधी ९ मासादेखि २ तोलासम्मको मात्रामा खानू, पथ्य खाली दूध-भात मात्र खानाले अलकाई र अरू तमाम रोगहरू नष्ट हुन्छन्। रोगी र अवस्था हेरी प्रयोग गर्नू, अत्यन्त गुणकारक छ; यसले धेरै रोगहरूमा फाइदा गर्छ।

६ अथवा–आँपको कोयाको गुदी, बेलको चाना र मिश्री बराबर लिई ३ मासादेखि ६ मासासम्म तातो पानीको साथ पिउनाले अतिसार नष्ट हुन्छ ।

७ अथवा–आँपको कोयाको गुदी मात्र खानाले पनि अतिसार नष्ट हुन्छ ।

८ आमातिसारमा–आँपको कोयाको गुदी, गुँद र इन्द्रजौ बराबर पिंधेर चूर्ण गर्नू । १ मासाको मात्रा दिनमा २-३ पटक तातो पानीसित दिनाले जवान मनुष्यको अतिसार नष्ट हुन्छ ।

९ अलकाईमा–आँपको कोपिला पानीसँग पिंधेर मिश्री मिलाई २ तोला खानाले रगत आउने अलकाई नष्ट हुन्छ ।

१० अथवा–१। तोला आँपको कोपिलाको रस, १। तोला फणिरको पातको रस मिसाई त्यसमा १ पाउ दूध पिलाउनू र मिश्री पनि मिलाई ८ दिनसम्म सेवन गर्नाले रगत आउने अलकाई पनि नष्ट हुन्छ ।

११ अथवा–१ तोला आँपको अत्तरछाला पिंधेर पानी मिलाई पिउनाले पनि अलकाई नष्ट हुन्छ ।

१२ रक्तस्रावमा–अलकाई, प्रदर, अतिसार वा अरू कुनै कारणबाट हुने रक्तस्रावमा २ तोलादेखि चार तोलासम्म आँपको अत्तरछालाको रस दिनमा २ पटक पिलाउनाले आराम गर्छ ।

१३ सूजाकमा–३।४ मासा आँपको बोक्रा थिचेर १ पाउ पानीमा बेलुका भिजाई दिनू । बिहान मली छानेर पिउनू । ७ दिनसम्म यही रीतिले पिउने गर्‍यो भने सूजाक नष्ट हुन्छ ।

१४ श्वेत-प्रदरमा–आधा तोला आँपको अत्तारछालाको रस वा १ तोला अत्तारछालाको ठण्डा काढ़ामा १ तोला चूनको नियारेको पानी मिलाएर ७ दिनसम्म लिनाले श्वेत-प्रदर आराम हुन्छ ।

१५ अथवा–आँपको बोक्रा र आँपको फलको बोक्राको रस ५ तोला पानी मिलाएर २-२ घण्टामा दिनाले फोक्सो, जरायु र आन्द्राबाट हुने रक्तस्राव पनि बन्द हुन्छ; श्वेत-प्रदर पनि नष्ट हुन्छ ।

६ अथवा–आँपको कोयाको गुदी, बेलको चाना र मिश्री बराबर लिई ३ मासादेखि ६ मासासम्म तातो पानीको साथ पिउनाले अतिसार नष्ट हुन्छ ।

७ अथवा–आँपको कोयाको गुदी मात्र खानाले पनि अतिसार नष्ट हुन्छ ।

८ आमातिसारमा–आँपको कोयाको गुदी, गुँद र इन्द्रजौ बराबर पिंधेर चूर्ण गर्नू । १ मासाको मात्रा दिनमा २-३ पटक तातो पानीसित दिनाले जवान मनुष्यको अतिसार नष्ट हुन्छ ।

९ अलकाईमा–आँपको कोपिला पानीसँग पिंधेर मिश्री मिलाई २ तोला खानाले रगत आउने अलकाई नष्ट हुन्छ ।

१० अथवा–१। तोला आँपको कोपिलाको रस, १। तोला फणिरको पातको रस मिसाई त्यसमा १ पाउ दूध पिलाउनू र मिश्री पनि मिलाई ८ दिनसम्म सेवन गर्नाले रगत आउने अलकाई पनि नष्ट हुन्छ ।

११ अथवा–१ तोला आँपको अत्तरछाला पिंधेर पानी मिलाई पिउनाले पनि अलकाई नष्ट हुन्छ ।

१२ रक्तस्रावमा–अलकाई, प्रदर, अतिसार वा अरू कुनै कारणबाट हुने रक्तस्रावमा २ तोलादेखि चार तोलासम्म आँपको अत्तरछालाको रस दिनमा २ पटक पिलाउनाले आराम गर्छ ।

१३ सूजाकमा–३।४ मासा आँपको बोक्रा थिचेर १ पाउ पानीमा बेलुका भिजाई दिनू । बिहान मली छानेर पिउनू । ७ दिनसम्म यही रीतिले पिउने गऱ्यो भने सूजाक नष्ट हुन्छ ।

१४ श्वेत-प्रदरमा–आधा तोला आँपको अत्तारछालाको रस वा १ तोला अत्तारछालाको ठण्डा काढ़ामा १ तोला चूनको निथारेको पानी मिलाएर ७ दिनसम्म लिनाले श्वेत-प्रदर आराम हुन्छ ।

१५ अथवा–आँपको बोक्रा र आँपको फलको बोक्राको रस ५ तोला पानी मिलाएर २-२ घण्टामा दिनाले फोक्सो, जरायु र आन्द्राबाट हुने रक्तस्राव पनि बन्द हुन्छ; श्वेत-प्रदर पनि नष्ट हुन्छ ।

# काउलो

क्षय-कासमा १
रक्त-पित्तमा २
रक्तातिसारमा ३
मूत्राघातमा ४
हृदय-रोगमा ५
शुक्र-मेहमा ६
हाड़ भाँचिएमा ७
फोड़ामा ८
रक्त-स्रावमा ९
उपदंशमा १०
पातलो वीर्य भएमा ११
पिसाब सफा गर्नामा १२
सर्पको विषमा १३
बिच्छीको विषमा १४

नेपाली—काउलो । हिन्दी—कोह । संस्कृत—अर्जुन ।

१ क्षय-कासमा–काउलोको बोक्राको धूलोमा असुरोको पातको रसको ७ पटक भावना दिनू । ३।४ मासाको मात्रामा मह र मिश्री वा गो-घृतसित चटाउनाले क्षयको खोकी ( कफमा रगत आउने ) नष्ट हुन्छ ।

२ रक्त-पित्तमा–१ तोला काउलोको बोक्रा रात भर पानीमा भिजाएर राख्नू, बेहान मलेर छानी अथवा पकाएर काढ़ा बनाई पिउनाले पनि रक्तपित्त नष्ट हुन्छ ।

३ रक्तातिसारमा–६ मासा काउलाको बोक्रा पिंधेर त्यसमा बाख्रीको दूध र मह मिलाएर पिउनाले रक्तातिसार नष्ट हुन्छ ।

४ मूत्राघातमा–मूत्राघातमा १ तोला काउलोको अत्तरछालाको काढ़ा पकाएर पिलाउनू । मूत्राघात नष्ट हुन्छ ।

५ हृदय-रोगमा–गहुँ र काउलोको अत्तरछाला बराबर मिलाई पिंध्नू, यसको १ तोला धूलो गाईको दूध र गाईको घ्यूमा पकाउनू र त्यसमा मिश्री र मह मिलाई खानाले उग्र हृदय-रोग पनि नष्ट हुन्छ ।

६ शुक्रमेहमा–६ मासा काउलोको बोक्रा र ३ मासा श्रीखण्डको काढ़ा पकाएर पिउनाले शुक्रमेह नष्ट हुन्छ ।

# काउलो

क्षय-कासमा १
रक्त-पित्तमा २
रक्तातिसारमा ३
मूत्राघातमा ४
हृदय-रोगमा ५
शुक्र-मेहमा ६
हाड़ भाँचिएमा ७
फोड़ामा ८
रक्त-स्रावमा ९
उपदंशमा १०
पातलो वीर्य भएमा ११
पिसाब सफा गर्नामा १२
सर्पको विषमा १३
बिच्छीको विषमा १४

नेपाली—काउलो । हिन्दी—कोह । संस्कृत—अर्जुन ।

१ क्षय-कासमा—काउलोको बोक्राको धूलोमा असुरोको पातको रसको ७ पटक भावना दिनू । ३।४ मासाको मात्रामा मह र मिश्री वा गो-घृतसित चटाउनाले क्षयको खोकी (कफमा रगत आउने) नष्ट हुन्छ ।

२ रक्त-पित्तमा—१ तोला काउलोको बोक्रा रात भर पानीमा भिजाएर राख्नू, बेहान मलेर छानी अथवा पकाएर काढ़ा बनाई पिउनाले पनि रक्तपित्त नष्ट हुन्छ ।

३ रक्तातिसारमा—६ मासा काउलाको बोक्रा पिंधेर त्यसमा बाख्रीको दूध र मह मिलाएर पिउनाले रक्तातिसार नष्ट हुन्छ ।

४ मूत्राघातमा—मूत्राघातमा १ तोला काउलोको अन्तरछालाको काढ़ा पकाएर पिलाउनू । मूत्राघात नष्ट हुन्छ ।

५ हृदय-रोगमा—गहुँ र काउलोको अन्तरछाला बराबर मिलाई पिंध्नू, यसको १ तोला धूलो गाईको दूध र गाईको घ्यूमा पकाउनू र त्यसमा मिश्री र मह मिलाई खानाले उग्र हृदय-रोग पनि नष्ट हुन्छ ।

६ शुक्रमेहमा—६ मासा काउलोको बोक्रा र ३ मासा श्रीखण्डको काढ़ा पकाएर पिउनाले शुक्रमेह नष्ट हुन्छ ।

# चुत्रो



नेपाली—चुत्रो । हिन्दी—दारुहल्दी । संस्कृत—दारुहरिद्रा ।

१ जरोमा–१ तोला चुत्रोको जराको काढ़ा खानाले जरो उत्रन्छ ।

२ अथवा–१५ तोला चुत्रोको जरा २ माना पानी हालेर पकाउनू, आधा माना पानी बाँकी रहेपछि छानेर शीशीमा राख्नू । २॥ तोलादेखि ५ तोलासम्मको मात्रा गरी पिलाउनाले जरो नष्ट हुन्छ ।

३ अथवा–१५ लालको मात्रामा रसाञ्जन दिनको ३ पटक चिसो पानीसँग दिनाले औलोको जरो नष्ट हुन्छ[1] । भोक लाग्छ र दिशा खलास हुन्छ । रोगीलाई पैल्हे रगत, आउँ परेको थियो भने यो औषधि दिनुभन्दा पहिले १ पटक जुलाबको औषधी दिएपछि मात्र यसको प्रयोग गर्नू ( नत्र आउँको रोग फेरि पल्टने सम्भावना हुन्छ )। खाली पेटमा औषधी दिनू । प्यास लाग्छ; तर पानी नदिनू, १ घण्टापछि पसीना आउँछ र तातागत हुन्छ, अनि दूध पिलाउनू र सुत्न दिनू । रोगी सुतेर उठेपछि उसको तबियत एकदम ठीक हुन्छ ।

१-यसले पेटमा अलि गर्मी गर्छ ।

# चुत्रो

जरोमा १, २, ३
दाँत दुखेमा ४
आँखाको रोगमा ५, ६, ७, ८, ९, १०
कमल-पित्तमा ११
मुख-पाकमा १२
कण्ठमालामा १३
सूजमा १४
अलकाईमा १५, १६, १७
झाड़ा लागेमा १८
वायुले पेट दुखेमा १९
गठिया वातमा २०
अण्ड-वृद्धिमा २१
उपदंशमा २२
प्रदरमा २३
सर्प र बिच्छीको विषमा २४
रसाञ्जन बनाउने तरीका २५
आर्को तरीका २६
रसाञ्जन शुद्ध गर्ने तरीका २७

नेपाली—चुत्रो । हिन्दी—दारुहल्दी । संस्कृत—दारुहरिद्रा ।

१ जरोमा–१ तोला चुत्रोको जराको काढ़ा खानाले जरो उत्रन्छ ।

२ अथवा–१५ तोला चुत्रोको जरा २ माना पानी हालेर पकाउनू, आधा माना पानी बाँकी रहेपछि छानेर शीशामा राख्नू । २॥ तोला-देखि ५ तोलासम्मको मात्रा गरी पिलाउनाले जरो नष्ट हुन्छ ।

३ अथवा–१५ लालको मात्रामा रसाञ्जन दिनको ३ पटक चिसो पानीसँग दिनाले औलोको जरो नष्ट हुन्छ[1] । भोक लाग्छ र दिशा खलास हुन्छ । रोगीलाई पैल्हे रगत, आउँ परेको थियो भने यो औषधि दिनुभन्दा पहिले १ पटक जुलाबको औषधी दिएपछि मात्र यसको प्रयोग गर्नू (नत्र आउँको रोग फेरि पल्टने सम्भावना हुन्छ)। खाली पेटमा औषधी दिनू । प्यास लाग्छ; तर पानी नदिनू, १ घण्टापछि पसीना आउँछ र नातागत हुन्छ, अनि दूध पिलाउनू र सुत्न दिनू । रोगी सुतेर उठेपछि उसको तबियत एकदम ठीक हुन्छ ।

---

१-यसले पेटमा अलि गर्मी गर्छ ।

१५ अलकाईमा–४ लाल रसाञ्जन, ४ लाल नीमको फलको गुदी र १ मासा मुनक्का मिलाई खल गरी ३ गोली बनाउनू। राती सुत्ने बेला पानीसित १ गोली खानाले अलकाई (रगत भएको) नष्ट हुन्छ।

१६ अथवा–रसाञ्जन र नौनी मिलाएर अलकाईको खटिरामा लगाउनाले अलकाई नष्ट हुन्छ।

१७ अथवा–१ तोला रसाञ्जन ५ तोला पानी मिलाएर अलकाईको खटिरा धुने गर्नाले अलकाई नष्ट हुन्छ।

१८ झाड़ा लागेमा–चुत्रोको जराको बोक्रा र सुठो बराबर लिएर पिधेर ३।३ मासाको मात्रा गरी दिउसो २।३ पटक दिनाले झाड़ा बन्द हुन्छ।

१९ वायुले पेट दुखेमा–६ मात्रा चुत्रोको जराको बोक्रा र शखरको काढ़ा बनाएर पिउनाले पेटको वायु र पेट दुख्ने आदि रोग नष्ट हुन्छ।

२० गठिया बातमा–१ तोला चुत्रोको डाँठको काढ़ा बनाएर पिउनाले पसीना र दिशा लागेर गठिया वात नष्ट हुन्छ।

२१ अण्ड-वृद्धिमा–१ तोला चुत्रोको जराको काढ़ामा गहुँत मिलाएर पिउनाले अण्ड वृद्धि नष्ट हुन्छ।

२२ उपदंशमा–रसाञ्जनको लेप र ६ मासा चुत्रोको काढ़ाको सेवन गरे उपदंश, गण्डमाला, सैन, भगन्दर, व्रण र विसर्प आदि रोग नष्ट हुन्छन्।

२३ प्रदरमा–६ मासा त्रिफलाको काढ़ामा १ मासासम्म रसाञ्जन हालेर सेवन गर्नाले रक्त-प्रदर र गर्भाशयको शिथिलता नष्ट हुन्छ।

२४ सर्प र बिच्छीको विषमा–रसाञ्जनको लेप गर्नाले सर्प र बिच्छीको विष नष्ट हुन्छ।

२५ रसाञ्जन बनाउने तरीका–वर्षाको आखीरमा चुत्रोको पञ्चांग ल्याई राम्रोसँग सफा गरी कुटेर काढ़ा पकाएर छान्नू र छानेको रस फेरि पकाउनू, जब बाक्लो हुन्छ, तब निकालेर ठण्डा भएपछि ठूलो मुख भएको शीशीमा राख्नू। यसलाई "रसाञ्जन" भन्दछन्।

१५ अलकाईमा–४ लाल ररााञ्जन, ४ लाल नीमको फलको गुदी र १ मासा मुनक्का मिलाई खल गरी ३ गोली बनाउनू। राती सुत्ने बेला पानीसित १ गोली खानाले अलकाई (रगत भएको) नष्ट हुन्छ।

१६ अथवा–रसाञ्जन र नौनी मिलाएर अलकाईको खटिरामा लगाउनाले अलकाई नष्ट हुन्छ।

१७ अथवा–१ तोला रसाञ्जन ५ तोला पानी मिलाएर अलकाईको खटिरा धुने गर्नाले अलकाई नष्ट हुन्छ।

१८ झाड़ा लागेमा–चुत्रोको जराको बोक्रा र सुठो बराबर लिएर पिषेर ३।३ मासाको मात्रा गरी दिउसो २।३ पटक दिनाले झाड़ा बन्द हुन्छ।

१९ वायुले पेट दुखेमा–६ मात्रा चुत्रोको जराको बोक्रा र शखरको काढ़ा बनाएर पिउनाले पेटको वायु र पेट दुख्ने आदि रोग नष्ट हुन्छ।

२० गठिया बातमा–१ तोला चुत्रोको डाँठको काढ़ा बनाएर पिउनाले पसीना र दिशा लागेर गठिया बात नष्ट हुन्छ।

२१ अण्ड-वृद्धिमा–१ तोला चुत्रोको जराको काढ़ामा गहुँत मिलाएर पिउनाले अण्ड वृद्धि नष्ट हुन्छ।

२२ उपदंशमा–रसाञ्जनको लेप र ६ मासा चुत्रोको काढ़ाको सेवन गरे उपदंश, गण्डमाला, सैन, भगन्दर, व्रण र विसर्प आदि रोग नष्ट हुन्छन्।

२३ प्रदरमा–६ मासा त्रिफलाको काढ़ामा १ मासासम्म रसाञ्जन हालेर सेवन गर्नाले रक्त-प्रदर र गर्भाशयको शिथिलता नष्ट हुन्छ।

२४ सर्प र बिच्छीको विषमा–रसाञ्जनको लेप गर्नाले सर्प र बिच्छीको विष नष्ट हुन्छ।

२५ रसाञ्जन बनाउने तरीका–वर्षाको आखीरमा चुत्रोको पञ्चांग ल्याई राम्रोसँग सफा गरी कुटेर काढ़ा पकाएर छान्नू र छानेको रस फेरि पकाउनू, जब बाक्लो हुन्छ, तब निकालेर ठण्डा भएपछि ठूलो मुख भएको शीशीमा राख्नू। यसलाई "रसाञ्जन" भन्दछन्।

# दूध

# दूध

६ अथवा–दूध र पानी बराबर मिलाएर पकाउनू, दूध मात्र बाँकी रहेपछि ठण्डा गराएर पिलाउनु। यसले उदर-वात, शूल प्रवाहिका, रक्त-पित्त र तृषा आदि नष्ट हुन्छन्। यसले रक्त-विकारमा अमृत जस्तो गुण गर्दछ।

७ कपाल दुखेमा–चिप्लो ढुङ्गामा सुठो दूधमा घोटेर बाक्लो धारी शिरमा लेप गरेर रुवो टाँसीदिनु। जस्तै पुरानो शिर-दर्द भए पनि ७।८ घण्टामा आराम हुन्छ।

८ अथवा–रुवोको मोटो फाहा बनाएर दूधमा भिजाएर शिरमा बाँध्नु। माथिबाट फेरि आर्को कपड़ाले बाँध्नु र माथिबाट फेरि अलिअलि दूध हाल्दैगर्नू, अनि साँझ शिर धोएर नौनी लगाएर सुत्नु; ३ दिनसम्म यो क्रिया गर्नाले रक्त-विकार र पित्तबाट उठेको शिर रोग नष्ट हुन्छ।

९ अथवा–१ माना गाईको दूधमा ३ तोला सफा गरेको अमिलो हाल्नु र १ घण्टा भिजाई दिनु र आगोमा पकाउनू, दूध फाटेपछि झिकेर कपड़ामा छान्नु र त्यो पानीमा मिश्री मिलाएर चिसो पार्नु र खान दिनु; ३।४ दिनमा कपाल दुखेको आराम हुन्छ। यही पानी कपालमा मालिस गरे पनि हुन्छ। यसले गर्मीबाट कपाल दुखेको आराम गर्छ।

१० सर्दीबाट कपाल दुखेमा–हावा नलाग्ने कोठामा बसेर दूधको बाफ शिर र नाकबाट लिनु र दूधले नै कपाल धुनु, सर्दीबाट कपाल दुखेको आराम हुन्छ।

११ अथवा–एउटा सूती कपड़ा दूधमा भिजाएर कपाल दुखेको ठाउँमा बाँधीदिनु र माथिबाट फलाटिनको टुक्राले बाँध्नु, १।२ घण्टा भएपछि निकाल्नु। यस्ता प्रकारले ३।४ पटकसम्म गर्नु, आराम हुन्छ। यसले गर्मी र सर्दीले कपाल दुखेको भए पनि आराम हुन्छ।

१२ अधा (आधा कपाल दुख्ने) मा–अधा दुखेर रोगी बेचैन भएको छ भने त्यसलाई दूध र तात्तातो जलेबी मात्र खान दिई अरु

६ अथवा–दूध र पानी बराबर मिलाएर पकाउनू, दूध मात्र बाँकी रहेपछि ठण्डा गराएर पिलाउनु। यसले उदर-वात, शूल प्रवाहिका, रक्त-पित्त र तृषा आदि नष्ट हुन्छन्। यसले रक्त-विकारमा अमृत जस्तो गुण गर्दछ।

७ कपाल दुखेमा–चिप्लो ढुङ्गामा सुठो दूधमा घोटेर बाक्लो पारी शिरमा लेप गरेर रुवो टाँसीदिनु। जस्तै पुरानो शिर-दर्द भए पनि ७।८ घण्टामा आराम हुन्छ।

८ अथवा–रुवोको मोटो फाहा बनाएर दूधमा भिजाएर शिरमा बाँध्नु। माथिबाट फेरि आर्को कपड़ाले बाँध्नु र माथिबाट फेरि अलिअलि दूध हाल्दैगर्नू, अनि साँझ शिर धोएर नौनी लगाएर सुत्नु; ३ दिनसम्म यो क्रिया गर्नाले रक्त-विकार र पित्तबाट उठेको शिर रोग नष्ट हुन्छ।

९ अथवा–१ माना गाईको दूधमा ३ तोला सफा गरेको अमिली हाल्नु र १ घण्टा भिजाई दिनु र आगोमा पकाउनू, दूध फाटेपछि झिकेर कपड़ामा छान्नु र त्यो पानीमा मिश्री मिलाएर चिसो पार्नु र खान दिनु; ३।४ दिनमा कपाल दुखेको आराम हुन्छ। यही पानी कपालमा मालिस गरे पनि हुन्छ। यसले गर्मीबाट कपाल दुखेको आराम गर्छ।

१० सर्दीबाट कपाल दुखेमा–हावा नलाग्ने कोठामा बसेर दूधको बाफ शिर र नाकबाट लिनु र दूधले नै कपाल धुनु, सर्दीबाट कपाल दुखेको आराम हुन्छ।

११ अथवा–एउटा सूती कपड़ा दूधमा भिजाएर कपाल दुखेको ठाउँमा बाँधीदिनु र माथिबाट फलाटिनको टुक्राले बाँध्नु, १।२ घण्टा भएपछि निकाल्नु। यस्ता प्रकारले ३।४ पटकसम्म गर्नु, आराम हुन्छ। यसले गर्मी र सर्दीले कपाल दुखेको भए पनि आराम हुन्छ।

१२ अधा (आधा कपाल दुख्ने) मा–अधा दुखेर रोगी बेचैन भएको छ भने त्यसलाई दूध र तात्तातो जलेबी मात्र खान दिई अरु

अभ्यास गर्नाले पित्त-सम्बन्धी तमाम बिकारहरू नष्ट हुन्छन् ।

२२ हाड़ भाँचिएमा–१ माना गाईको दूध, १ तोला मुनक्का, २ ओटा छोहरा र ३ मासा जेठीमधु पकाएर त्यसमा २ तोला घ्यू र १ मासा काँचो लाहा पिँधेर हाल्नु र ठण्डा भएपछि पिलाउनु। यसले चोटपटक लागेको र हाड़ भाँचिएको समेत आराम गर्छ ।

२३ छातीको दर्दमा–१ माना गो-दुग्धमा १०।१५ थोपा भलायोको (भलाया पोलेर त्यसबाट निक्लेको) तेल मिलाएर पिलाउनु । यसबाट छातीको पीडा आदि रोग नष्ट हुन्छन् ।

२४ रुघामा–१ माना वा आधा माना गाईको तातो दूधमा १०।१२ दाना मरिच र मिश्री मिलाएर पिउनाले रुघा आराम गर्छ ।

२५ पाण्डु क्षय र ग्रहणीमा–फलामको कराहीमा पकाएको दूध पिउने गर्नाले पाण्डु, क्षय र ग्रहणी रोग समेत आराम हुन्छन् ।

२६ उदावर्तमा–काँचो दूधमा पानी हालेर लस्सी बनाउनु र पिउनु । यसले मूत्र-रोगबाट पैदा भएको उदावर्त रोग नष्ट हुन्छ ।

२७ पागलपनमा–रोगीको कपाल खौरेर शिरमा चार तह गरेर कपड़ा राख्नु र त्यसमा बाख्रीको दूध चुहाउँदै गर्नु, यस्तो किसिम-सित रात-दिन गरी १२ घण्टासम्म शिरमा दूध परी रहोस् । यो औषधीको प्रयोगले केही दिनमा पागलपन नष्ट हुन्छ ।

२८ निर्बल मस्तिष्क भएमा–केही रोग नलागेकी बाख्रीलाई असल-असल पोसिलो घाँस र अन्न खानदिनु, त्यस बाख्रीको दूध बिरामी-लाई पिउन दिनु; यसले मस्तिष्क खूब बलियो हुन्छ ।

२९ अथवा–स्त्री (स्वास्नीमानिस) को दुग्धमा कपड़ा भिजाएर रोगीको शिरमा राखीदिनु र आधा घण्टामा फेरि आर्को ताजा कपड़ामा दूधले भिजाई बदलिदिनू । यस्ता प्रकारले ४।५ दिन प्रयोग गरे मस्तिष्क खूब बलियो हुन्छ र मुटु हल्लने व्यथा पनि नष्ट हुन्छ ।

३० निद्रा नलाग्ने (उन्निद्र रोग) मा–उपर्युक्त विधिले शिरमा दूधले भिजाएको कपड़ा राख्नू र हातगोड़ामा मालिस पनि गर्नू ।

अभ्यास गर्नाले पित्त-सम्बन्धी तमाम विकारहरू नष्ट हुन्छन् ।

२२ हाड़ भाँचिएमा–१ माना गाईको दूध, १ तोला मुनक्का, २ ओटा छोहरा र ३ मासा जेठीमधु पकाएर त्यसमा २ तोला घ्यू र १ मासा काँचो लाहा पिंधेर हाल्नु र ठण्डा भएपछि पिलाउनु। यसले चोटपटक लागेको र हाड़ भाँचिएको समेत आराम गर्छ।

२३ छातीको दर्दमा–१ माना गो-दुग्धमा १०।१५ थोपा भलायोको (भलाया पोलेर त्यसबाट निक्लेको) तेल मिलाएर पिलाउनु। यसबाट छातीको पीडा आदि रोग नष्ट हुन्छन्।

२४ रुघामा–१ माना वा आधा माना गाईको तातो दूधमा १०।१२ दाना मरिच र मिश्री मिलाएर पिउनाले रुघा आराम गर्छ।

२५ पाण्डु क्षय र ग्रहणीमा–फलामको कराहीमा पकाएको दूध पिउने गर्नाले पाण्डु, क्षय र ग्रहणी रोग समेत आराम हुन्छन्।

२६ उदावर्तमा–काँचो दूधमा पानी हालेर लस्सी बनाउनु र पिउनु। यसले मूत्र-रोगबाट पैदा भएको उदावर्त रोग नष्ट हुन्छ।

२७ पागलपनमा–रोगीको कपाल खौरेर शिरमा चार तह गरेर कपड़ा राख्नु र त्यसमा बाख्रीको दूध चुहाउँदै गर्नु, यस्तो किसिम-सित रात-दिन गरी १२ घण्टासम्म शिरमा दूध परी रहोस्। यो औषधीको प्रयोगले केही दिनमा पागलपन नष्ट हुन्छ।

२८ निर्बल मस्तिष्क भएमा–केही रोग नलागेकी बाख्रीलाई असल-असल पोसिलो घाँस र अन्न खानदिनु, त्यस बाख्रीको दूध बिरामी-लाई पिउन दिनु; यसले मस्तिष्क खूब बलियो हुन्छ।

२९ अथवा–स्त्री (स्वास्नीमानिस) को दुग्धमा कपड़ा भिजाएर रोगीको शिरमा राखीदिनु र आधा घण्टामा फेरि आर्को ताजा कपड़ामा दूधले भिजाई बदलिदिनू। यस्ता प्रकारले ४।५ दिन प्रयोग गरे मस्तिष्क खूब बलियो हुन्छ र मुटु हल्लने व्यथा पनि नष्ट हुन्छ।

३० निद्रा नलाग्ने (उन्निद्र रोग) मा–उपर्युक्त विधिले शिरमा दूधले भिजाएको कपड़ा राख्नू र हातगोड़ामा मालिस पनि गर्नू।

लाभदायक छ ।

४० नाथ्रो फुटेमा–गधीको दूध रोगीको शिरमा मर्दन गर्नू (२ घण्टासम्म दूधको चीसो रहीरहोस्), ६।७ दिनसम्म यही रीतिले मालिश गर्नाले नाथ्रो फुट्ने रोग नष्ट हुन्छ ।

४१ अथवा–बाख्रीको दूध पिलाउनाले (घ्यू मिलाएर पिलायो भने झन् उत्तम हुन्छ) नाथ्रो फुटेको आराम हुन्छ ।

४२ अथवा–स्त्रीको दूध नस हाल्नाले नाथ्रो फुट्ने रोग नष्ट हुन्छ ।

४३ नाक सुनिएमा–रुघा वा पिनास भएर नाक सुनिएमा दूधको नस हाल्नू र दूधले कुल्ला गर्नू, आराम हुन्छ ।

४४ कान दुखेमा–हावा नलाग्ने ठाउँमा रोगीलाई राखी दूध तताई दूधको बाफ कान भित्र पुऱ्याउनू । यसले कान दुखेको नष्ट हुन्छ ।

४५ अथवा–बाख्रीको दूध र कागतीको अमिलो मिलाएर मनतातो पारी कानमा हाल्नू, एकै छिनमा कानको पीडा नष्ट हुन्छ ।

४६ अथवा–छोरी पाएको स्त्रीको दूधमा अलिकति अफीम मिलाएर मनतातो पारी कानमा हाल्नू । तत्काल पीडा नष्ट हुन्छ ।

४७ कान-भित्रको खटिरामा–कान, भित्र ताजा दूध हालेर रूवोले कान बन्द गरिदिनू, दिनभरमा ३।४ पटक हाल्नू । यसले कान-भित्रका खटिरा आदि नष्ट हुन्छन् ।

४८ कान पाकेमा–स्त्रीको दूध कानभित्र हाल्नू । यसले कान पाकेको नष्ट हुन्छ ।

४९ मुख पाकमा–दिनको ३।४ पटक काँचो दूधले कुल्ला गर्नू । यसबाट मुख-पाक नष्ट हुन्छ ।

५० घाँटीको खटिरामा–दूधले कुल्ला गर्नू, घाँटी भित्र र घाँटी बाहिर पनि दूध मल्नू । यसले घाँटीका खटिरा आदि नष्ट हुन्छन्[१] ।

५१ गण्डमालामा–दिन भरमा ३।४ पटक गरी जम्मा ३ घण्टासम्म

---

१–एक किसिमको खटिरा हुन्छ; २४ घण्टामा घाँटी सुनिएर बच्चाको सास बन्द हुन्छ । त्यसलाई 'रोहिणी' भन्दछन् । यो उपचारले त्यो पनि नष्ट हुन्छ ।

लाभदायक छ ।

४० नाथ्रो फुटेमा–गधीको दूध रोगीको शिरमा मर्दन गर्नू (२ घण्टासम्म दूधको चीसो रहीरहोस्), ६।७ दिनसम्म यही रीतिले मालिश गर्नाले नाथ्रो फुट्ने रोग नष्ट हुन्छ ।

४१ अथवा–बाख्रीको दूध पिलाउनाले (घ्यू मिलाएर पिलायो भने झन् उत्तम हुन्छ) नाथ्रो फुटेको आराम हुन्छ ।

४२ अथवा–स्त्रीको दूध नस हाल्नाले नाथ्रो फुट्ने रोग नष्ट हुन्छ ।

४३ नाक सुनिएमा–रुघा वा पिनास भएर नाक सुनिएमा दूधको नस हाल्नू र दूधले कुल्ला गर्नू, आराम हुन्छ ।

४४ कान दुखेमा–हावा नलाग्ने ठाउँमा रोगीलाई राखी दूध तताई दूधको बाफ कान भित्र पुऱ्याउनू । यसले कान दुखेको नष्ट हुन्छ ।

४५ अथवा–बाख्रीको दूध र कागतीको अमिलो मिलाएर मनतातो पारी कानमा हाल्नू, एकै छिनमा कानको पीडा नष्ट हुन्छ ।

४६ अथवा–छोरी पाएको स्त्रीको दूधमा अलिकति अफीम मिलाएर मनतातो पारी कानमा हाल्नू । तत्काल पीडा नष्ट हुन्छ ।

४७ कान-भित्रको खटिरामा–कान, भित्र ताजा दूध हालेर रूवोले कान बन्द गरिदिनू, दिनभरमा ३।४ पटक हाल्नू । यसले कान-भित्रका खटिरा आदि नष्ट हुन्छन् ।

४८ कान पाकेमा–स्त्रीको दूध कानभित्र हाल्नू । यसले कान पाकेको नष्ट हुन्छ ।

४९ मुख पाकमा–दिनको ३।४ पटक काँचो दूधले कुल्ला गर्नू । यसबाट मुख-पाक नष्ट हुन्छ ।

५० घाँटीको खटिरामा–दूधले कुल्ला गर्नू, घाँटी भित्र र घाँटी बाहिर पनि दूध मल्नू । यसले घाँटीका खटिरा आदि नष्ट हुन्छन्[१] ।

५१ गण्डमालामा–दिन भरमा ३।४ पटक गरी जम्मा ३ घण्टासम्म

---

१–एक किसिमको खटिरा हुन्छ; २४ घण्टामा घाँटी सुनिएर बच्चाको सास बन्द हुन्छ । त्यसलाई 'रोहिणी' भन्दछन् । यो उपचारले त्यो पनि नष्ट हुन्छ ।

हाली पकाउनू र शीतल भएपछि मिश्री हालेर पिलाउनू। यसले अतिसार नष्ट हुन्छ।

६३ आमातिसारमा–काँचो दूध पेटमा मलेर आगोले सेक्नू। यसबाट आमातिसार नष्ट हुन्छ।

६४ जुकामा–केही दिन भेड़ीको दूध सेवन गर्नाले जुका नष्ट हुन्छ।

६५ गर्मी-सम्बन्धी रोगमा–१ माना गाईको वा बाख्रीको दूध लिएर एउटा कोरा (काँचो) हाँड़ीमा हाल्नू, जुनेली रातमा चन्द्रमाको उज्यालो पर्ने गरी एउटा थाममा झुण्ड्याउनू र बेहान त्यसमा ३ तोला मिश्री मिलाएर ५।७ पटक धारधूर गरी रोगीलाई पिलाउनू। गर्मीबाट पैदा भएका हरकिसिमको रोग आराम हुन्छ।

६६ कलेजा दुखेकोमा–कलेजा बाहिर दूधले सेके दुख्न बन्द हुन्छ।

६७ कलेजा सुनिएकोमा–कलेजा सुनिएको छ भने देम फुलेर आउँछ र देब्रे कोल्टे फर्क्यो भने कलेजा दुख्तछ। त्यसमा काँचो दूधले १।। घण्टासम्म सेकिदिनू, आराम हुन्छ।

६८ अथवा–आधा तोला मकोय (धोतीलाएको फल) को रसमा दूध मिलाई पिलाए पनि कलेजा सुनिएको नष्ट हुन्छ।

६९ फियो बढ़ेकोमा–२ माना गाईको दूध तताउनू, ३-४ भल्को उम्लेपछि त्यसमा ४ तोला कलमी सोरा हाल्नू र चुलोबाट निकाल्नू, दूध फाटेर झोल चौटा छुटिन्छ, अनि कपडामा छान्नू। यो पानी ३ दिनसम्म पिलाउनू। (यो पानी पिएपछि देब्रे कोल्टो सुत्नू) यो औषधी खाँदा मुङ वा रहरको खिचड़ी घ्यू हाली खानदिनू। एक छाक बेलुका मात्र खानू ३ दिनमा राम्रो आराम भएन भने ७ दिनसम्म यो क्रिया गर्नू, घ्यूको सेवन गर्नू अवश्यमेव फियो र कलेजा बढ़ेको आराम हुन्छ।

७० अथवा–१५-२० दिनसम्म तातो दूधले सेक्नू। कलेजा र फियो बढ़ेको आराम हुन्छ।

७१ अलकाईमा–बिरालीको दूध अलकाईको खटिरामा लगाउनू, तत्काल पीडा शान्त हुन्छ। केही दिन निरन्तर लगाए खटिरा बैलाउँछ

हाली पकाउनु र शीतल भएपछि मिश्री हालेर पिलाउनु। यसले अतिसार नष्ट हुन्छ।

६३ आमातिसारमा–काँचो दूध पेटमा मलेर आगोले सेक्नु। यसबाट आमातिसार नष्ट हुन्छ।

६४ जुकामा–केही दिन भेड़ीको दूध सेवन गर्नाले जुका नष्ट हुन्छ।

६५ गर्मी-सम्बन्धी रोगमा–१ माना गाईको वा बाख्रीको दूध लिएर एउटा कोरा (काँचो) हाँड़ीमा हाल्नु, जुनेली रातमा चन्द्रमाको उज्यालो पर्ने गरी एउटा थाममा झुण्ड्याउनु र बेहान त्यसमा ३ तोला मिश्री मिलाएर ५।७ पटक धारधूर गरी रोगीलाई पिलाउनु। गर्मीबाट पैदा भएका हरकिसिमको रोग आराम हुन्छ।

६६ कलेजा दुखेकोमा–कलेजा बाहिर दूधले सेके दुख्न बन्द हुन्छ।

६७ कलेजा सुनिएकोमा–कलेजा सुनिएको छ भने देम फुलेर आउँछ र देब्रे कोल्टे फर्क्यो भने कलेजा दुख्तछ। त्यसमा काँचो दूधले १॥ घण्टासम्म सेकिदिनु, आराम हुन्छ।

६८ अथवा–आधा तोला मकोय (धोतीलाएको फल) को रसमा दूध मिलाई पिलाए पनि कलेजा सुनिएको नष्ट हुन्छ।

६९ फियो बढ़ेकोमा–२ माना गाईको दूध तताउनू, ३-४ भल्को उम्लेपछि त्यसमा ४ तोला कलमी सोरा हाल्नु र चुलोबाट निकाल्नु, दूध फाटेर झोल चोंटा छूटिन्छ, अनि कपडामा छान्नु। यो पानी ३ दिनसम्म पिलाउनु। (यो पानी पिएपछि देब्रे कोल्टो सुत्नु) यो औषधी खाँदा मुङ्ग वा रहरको खिचड़ी घ्यू हाली खानदिनु। एक छाक बेलुका मात्र खानु ३ दिनमा राम्रो आराम भएन भने ७ दिनसम्म यो क्रिया गर्नु, घ्यूको सेवन गर्नु अवश्यमेव फियो र कलेजा बढ़ेको आराम हुन्छ।

७० अथवा–१५-२० दिनसम्म तातो दूधले सेक्नु। कलेजा र फियो बढ़ेको आराम हुन्छ।

७१ अलकाईमा–बिरालीको दूध अलकाईको खटिरामा लगाउनु, तत्काल पीडा शान्त हुन्छ। केही दिन निरन्तर लगाए खटिरा बैलाउँछ

योनिकण्डू ( योनि चिलाउने ) नष्ट हुन्छ ।

८१ योनि संकीर्ण[1] गर्नु परेमा–पहिलो बेते घोड़ीको बिगौती-दूधमा कपड़ा भिजाएर राखी छाड्नु । आवश्यकतामा स्नान गरेको २ घण्टा-पछि त्यो कपड़ा योनिमा राख्नु । यसले योनि सङ्कीर्ण हुन्छ । धेरै दिन प्रयोग गर्‍यो भने रक्त र श्वेत दुवै किसिमका प्रदर पनि नष्ट हुन्छन् ।

८२ थुनिलो भएमा–दिनको ४।५ पटक काँचो दूधले सेक्ने गर्नु, थुनिलो बढ्न सक्दैन र बिस्तारै-बिस्तारै घट्दै जान्छ । ६।७ दिनमा आराम हुन्छ ।

८३ स्तन बढाउनमा–तातो पानीमा तौलिया भिजाएर स्तनमा खूब मर्दन गर्नु, रातो भए पछि त्यसमा भेड़ाको दूध मालिस गर्नु । यसले स्तन[2] बढ्दछ ।

८४ बच्चाको कर्ण-शोथमा–दूधले सेके कानको सूज आराम हुन्छ ।

८५ बच्चाको सुक्खा खोकीमा–१० तोला गाईको दूध, ९ मासा गाईको घ्यूमा १० तोला पानी मिसाएर पकाउनु । पानी घटी सकेपछि त्यसमा २ तोला मिश्री मिलाएर अलि-अलि बच्चालाई पिलाउने गर्नु । यसले सूखा ( हूपिङ्ग-कफ ) खोकी नष्ट हुन्छ ।

८६ बच्चाको आउँमा–५ तोला घोड़ीको दूध तताएर बच्चालाई पिलाउनू । बच्चाको आउँ नष्ट हुन्छ ।

८७ मोटाउनामा–केही दिनसम्म भेड़ीको दूध पिलाउने गर्‍यो भने बालक हृष्ट-पुष्ट हुन्छन् । पेट-सम्बन्धी पीडा केही हुँदैन ।

८८ अथवा–बाख्रीको काँचो दूधमा पानी मिलाएर पिलाउने गर्‍यो भने पनि बच्चाहरू खूब मोटा हुन्छन् ।

८९ बिफरबाट रक्षा–बिफर वा दादुरा फैलिएको बखतमा १४ दिनसम्म बालकलाई घोड़ीको दूध पिलाए बिफर आदि रोगबाट

---

१–कतिपय योनिका रोगले योनि-गह्वर खुलेर ठूलो छिद्र हुन्छ ।

२–उमेर पुगी सकेपछि पनि कुनै स्त्राको स्तन देखिदैन, अतः यो क्रिया गर्नालि रोग नष्ट हुन्छ र स्तन पुष्ट हुन्छन् ।

योनिकण्डू ( योनि चिलाउने ) नष्ट हुन्छ ।

८१ योनि संकीर्ण[1] गर्नु परेमा–पहिलो बेते घोड़ीको बिगौती-दूधमा कपड़ा भिजाएर राखी छाड्नु । आवश्यकतामा स्नान गरेको २ घण्टा-पछि त्यो कपड़ा योनिमा राख्नु । यसले योनि सङ्कीर्ण हुन्छ । धेरै दिन प्रयोग गऱ्यो भने रक्त र श्वेत दुवै किसिमका प्रदर पनि नष्ट हुन्छन् ।

८२ थुनिलो भएमा–दिनको ४।५ पटक काँचो दूधले सेक्ने गर्नु, थुनिलो बढ्न सक्तैन र बिस्तारै-बिस्तारै घट्दै जान्छ । ६।७ दिनमा आराम हुन्छ ।

८३ स्तन बढाउनमा–तातो पानीमा तोलिया भिजाएर स्तनमा खूब मर्दन गर्नु, रातो भए पछि त्यसमा भेड़ाको दूध मालिस गर्नु । यसले स्तन[2] बढ्दछ ।

८४ बच्चाको कर्ण-शोथमा–दूधले सेके कानको सूज आराम हुन्छ ।

८५ बच्चाको सुक्खा खोकीमा–१० तोला गाईको दूध, ९ मासा गाईको घ्यूमा १० तोला पानी मिसाएर पकाउनु । पानी घटी सकेपछि त्यसमा २ तोला मिश्री मिलाएर अलि-अलि बच्चालाई पिलाउने गर्नु । यसले सूखा ( हूपिङ्ग-कफ ) खोकी नष्ट हुन्छ ।

८६ बच्चाको आउँमा–५ तोला घोड़ीको दूध तताएर बच्चालाई पिलाउनू । बच्चाको आउँ नष्ट हुन्छ ।

८७ मोटाउनामा–केही दिनसम्म भेड़ीको दूध पिलाउने गऱ्यो भने बालक हृष्ट-पुष्ट हुन्छन् । पेट-सम्बन्धी पीडा केही हुँदैन ।

८८ अथवा–बाख्रीको काँचो दूधमा पानी मिलाएर पिलाउने गऱ्यो भने पनि बच्चाहरू खूब मोटा हुन्छन् ।

८९ बिफरबाट रक्षा–बिफर वा दादुरा फैलिएको बखतमा १४ दिनसम्म बालकलाई घोड़ीको दूध पिलाए बिफर आदि रोगबाट

---

१–कतिपय योनिका रोगले योनि-गह्वर खुलेर ठूलो छिद्र हुन्छ ।

२–उमेर पुगी सकेपछि पनि कुनै स्त्राको स्तन देखिदैन, अतः यो क्रिया गर्नाले रोग नष्ट हुन्छ र स्तन पुष्ट हुन्छन् ।

# दही



नेपाली—दही । हिन्दी—दही । संस्कृत—दधि ।

१ अजीर्णमा–गाईको दही बराबर पानी मिलाई पिए अजीर्ण नष्ट हुन्छ।

२ तृषा (तिर्खा) मा–पुरानो ईंटको टुक्रा सफा गरेर धुनू र आगामा तताई रातो गरेर गाईको दहीमा झ्वाईं गर्नू र तृषाको रोगीलाई अलि-अलि गरी पिलाउनू । यसो गर्नाले तृषा शान्त हुन्छ ।

३ सूर्यावर्तमा–सूर्योदयभन्दा पहिले दही र भात ३ दिनसम्म खानू । यसले सूर्यावर्त[1] नष्ट हुन्छ ।

४ कोढ़ (कुष्ठ) मा–चितू र सहिजनको बोक्रा पिंधेर दहीको पानीमा मिलाई लेप गर्नाले कुष्ठ नष्ट हुन्छ ।

५ अथवा–अलैंची र पुनर्नवा खूब मसीनो गरी पिंधी त्यसमा दहीको पानी मिलाई लेप गर्नाले कुष्ठ नष्ट हुन्छ ।

६ अथवा–खयर र लोध मसीनो गरी पिंधी दहीको पानीमा मिलाई कुष्ठमा लेप गर्नाले कुष्ठ नष्ट हुन्छ ।

७ अलकाईमा–दहीको सेवनले अलकाईको रगत आउन बन्द हुन्छ।

८ राती नदेखेमा–दहीको पानीमा आफ्नो थूक मिलाई अञ्जन

---

१–मध्याह्नसम्म जात-जात सूर्यको तेज बढ्दै जान्छ, उति कपाल दुख्छ, घाम कम भएपछि आराम हुन्छ, यसलाई 'सूर्यावर्त' भन्दछन् ।

## दही

अजीर्णमा १
तृषा ( तिर्खा ) मा २
सूर्यावर्तमा ३
कोढ़मा ४, ५, ६
अल्काईमा ७
राती नदेखेमा ८
दाद र चिलाउनेमा ९
दाहमा १०
प्रवाहिकामा ११
अतिसारमा १२, १३
कफ-वातमा १४
निद्रा नलागेमा १५
मुखको नीलो कालो दागमा १६
जाइफलको नशामा १७
काँचको टुक्रा खाएमा १८
करवीर आदिको विषमा १९
बारुलो आदिको विषमा २०

नेपाली—दही। हिन्दी—दही। संस्कृत—दधि।

१ अजीर्णमा–गाईको दही बराबर पानी मिलाई पिए अजीर्ण नष्ट हुन्छ।

२ तृषा (तिर्खा) मा–पुरानो ईंटको टुक्रा सफा गरेर धुनू र आगामा तताई रातो गरेर गाईको दहीमा झ्वाईं गर्नू र तृषाको रोगीलाई अलि-अलि गरी पिलाउनू। यसो गर्नाले तृषा शान्त हुन्छ।

३ सूर्यावर्तमा–सूर्योदयभन्दा पहिले दही र भात ३ दिनसम्म खानू। यसले सूर्यावर्त[1] नष्ट हुन्छ।

४ कोढ़ (कुष्ठ) मा–चितू र सहिजनको बोक्रा पिंधेर दहीको पानीमा मिलाई लेप गर्नाले कुष्ठ नष्ट हुन्छ।

५ अथवा–अलैंची र पुनर्नवा खूब मसीनो गरी पिंधी त्यसमा दहीको पानी मिलाई लेप गर्नाले कुष्ठ नष्ट हुन्छ।

६ अथवा–खयर र लोध मसीनो गरी पिंधी दहीको पानीमा मिलाई कुष्ठमा लेप गर्नाले कुष्ठ नष्ट हुन्छ।

७ अलकाईमा–दहीको सेवनले अलकाईको रगत आउन बन्द हुन्छ।

८ राती नदेखेमा–दहीको पानीमा आफ्नो थूक मिलाई अञ्जन

---

१–मध्याह्नसम्म जात-जात सूर्यको तेज बढ्दै जान्छ, उति कपाल दुख्छ, घाम कम भएपछि आराम हुन्छ, यसलाई 'सूर्यावर्त' भन्दछन्।

# मोही



नेपाली—मोही। हिन्दी—मट्ठा। संस्कृत—तक्रम्।

१ औलोको जरोमा—गाईको मोही तताउनू, फाट्तछ, अनि कपड़ामा छानेर त्यसको पानीको डुस्[1] दिनू। औलोको ज्वर नष्ट हुन्छ।

२ कफ-रोगमा—१ माना मोहीमा ३ मासा सुठो, मरिच र पिप्लाको चूर्ण हालेर पिउनाले कफ-सम्बन्धी रोग नष्ट हुन्छन्।

३ पेटका रोगमा—२ मासा पिप्ला र सिंधेनुन हालेर मोही पिउनाले

१—डाक्टरी पसलमा डुस दिने यन्त्र पाइन्छ, त्यसमा पानी भरेर रबड़का नली लगाएर गुदद्वार भित्र पसाल्नू बिस्तारै-बिस्तारै त्यो पानी गुदद्वार भित्र पस्दछ, अनि एक छिनपछि त्यो निकाल्नू, यसो गर्दा पेटमा भएको मल बाहिर आउँछ, यसलाई 'डुस' दिने भन्दछन्। वैद्य शास्त्रमा 'वस्तिक्रिया' भन्दछन्।

# मोही



नेपाली—मोही। हिन्दी—मट्ठा। संस्कृत—तक्रम्।

१ औलोको जरोमा—गाईको मोही तताउनू, फाट्तछ, अनि कपड़ामा छानेर त्यसको पानीको डुस्[1] दिनू। औलोको ज्वर नष्ट हुन्छ।

२ कफ-रोगमा—१ माना मोहीमा ३ मासा सुठो, मरिच र पिप्लाको चूर्ण हालेर पिउनाले कफ-सम्बन्धी रोग नष्ट हुन्छन्।

३ पेटका रोगमा—२ मासा पिप्ला र सिंधेनुन हालेर मोही पिउनाले

१—डाक्टरी पसलमा डुस दिन यन्त्र पाइन्छ, त्यसमा पानी भरर रबड़का नली लगाएर गुदद्वार भित्र पसाल्नू बिस्तारै-बिस्तारै त्यो पानी गुदद्वार भित्र पस्दछ, अनि एक छिनपछि त्यो निकाल्नू, यसो गर्दा पेटमा भएको मल बाहिर आउँछ, यसलाई 'डुस' दिने भन्दछन्। वैद्य शास्त्रमा 'वस्तिक्रिया' भन्दछन्।

मथेर कपड़ामा छान्नु र पिउनु ( यसमा खान सकेसम्म मोही पनि मिलाएर पिउनु )। यसले अरुचि नष्ट हुन्छ।

१५ ग्रहणीमा–गाईको मोहीमा १ तोला कालो मुसली पिँधेर खान दिनु। पथ्य मोही र भात मात्र दिनु, यसले ग्रहणी आराम गर्छ।

१६ अथवा–मोहीमा सुठो र पिप्लाको धूलो २ मासा हालेर पिउनु। यसले पनि ग्रहणी नष्ट हुन्छ।

१७ अथवा–१ माना मोही र १ तोला खरबूजाको बिउ पिँधेर खाने गर्नु यसले ४० दिनमा ग्रहणी नष्ट हुन्छ।

१८ अथवा–मोहीमा ६ मासादेखि १ तोलासम्म सुठोको धूलो मिलाएर पिउने गऱ्यो भने ग्रहणी नष्ट हुन्छ।

१९ अथवा–मोहीमा ६ मासा चितूको जराको बोक्रा मिलाएर खाए पनि ग्रहणी नष्ट हुन्छ।

२० अथवा–मोहीमा २ देखि ६ मासासम्म हर्रोको धूलो मिलाएर खाए आउँरगत भएको ग्रहणी पनि आराम हुन्छ।

२१ अथवा–२।३ दाना खजूर अथवा छोहोरा गाईको मोहीसित खानु, ग्रहणी नष्ट हुन्छ।

२२ कफोदरमा–मोहीमा जीरा, मरिच, ज्वानो, पिप्ला र सिँधेनुन बराबर गरी ५ मासा मिलाई खायो भने कफोदर र कफ-सम्बन्धी पेटको रोग नष्ट हुन्छ।

२३ अतिसारमा–ताजा मोहीमा १।२ मासा भुटेको जीराको धूलो मिलाएर पिउनू, यसो गर्नाले अतिसार नष्ट हुन्छ।

२४ अथवा–एक चौथाई ( आधा पाउ ) मोहीमा १ तोला असल मह मिलाई पिउनाले पनि अतिसार नष्ट हुन्छ।

२५ आउँमा–मोही, भात र मिश्री मिसाएर खानू, आराम हुन्छ।

२६ दाहमा–मोहीमा कपड़ा भिजाएर रोगीलाई ओढ़ाउनु, दाह आराम हुन्छ।

२७ अथवा–मोहीमा कपड़ा डुबाएर शरीरमा मल्नु, दाह

मथेर कपड़ामा छान्नू र पिउनु (यसमा खान सकेसम्म मोही पनि मिलाएर पिउनु)। यसले अरुचि नष्ट हुन्छ।

१५ ग्रहणीमा–गाईको मोहीमा १ तोला कालो मुसली पिंधेर खान दिनु। पथ्य मोही र भात मात्र दिनु, यसले ग्रहणी आराम गर्छ।

१६ अथवा–मोहीमा सुठो र पिप्लाको धूलो २ मासा हालेर पिउनु। यसले पनि ग्रहणी नष्ट हुन्छ।

१७ अथवा–१ माना मोही र १ तोला खरबूजाको बिउ पिंधेर खाने गर्नू यसले ४० दिनमा ग्रहणी नष्ट हुन्छ।

१८ अथवा–मोहीमा ६ मासादेखि १ तोलासम्म सुठोको धूलो मिलाएर पिउने गऱ्यो भने ग्रहणी नष्ट हुन्छ।

१९ अथवा–मोहीमा ६ मासा चितूको जराको बोक्रा मिलाएर खाए पनि ग्रहणी नष्ट हुन्छ।

२० अथवा–मोहीमा २ देखि ६ मासासम्म हर्रोको धूलो मिलाएर खाए आउँरगत भएको ग्रहणी पनि आराम हुन्छ।

२१ अथवा–२।३ दाना खजूर अथवा छोहोरा गाईको मोहीसित खानु, ग्रहणी नष्ट हुन्छ।

२२ कफोदरमा–मोहीमा जीरा, मरिच, ज्वानो, पिप्ला र सिंधेनुन बराबर गरी ५ मासा मिलाई खायो भने कफोदर र कफ-सम्बन्धी पेटको रोग नष्ट हुन्छ।

२३ अतिसारमा–ताजा मोहीमा १।२ मासा भुटेको जीराको धूलो मिलाएर पिउनू, यसो गर्नाले अतिसार नष्ट हुन्छ।

२४ अथवा–एक चौथाई (आधा पाउ) मोहीमा १ तोला असल मह मिलाई पिउनाले पनि अतिसार नष्ट हुन्छ।

२५ आउँमा–मोही, भात र मिश्री मिसाएर खानू, आराम हुन्छ।

२६ दाहमा–मोहीमा कपड़ा भिजाएर रोगीलाई ओढ़ाउनु, दाह आराम हुन्छ।

२७ अथवा–मोहीमा कपड़ा डुबाएर शरीरमा मल्नु, दाह

४० वातज प्रदरमा–५ मासा मिश्री २।३ मासा जेठीमधु र ३।४ मासा तिलको तेलमा बाक्लो मोही मिलाएर पिउनाले वातज प्रदर नष्ट हुन्छ ।

४१ रक्तप्रदरमा–फलामको टुक्रा आगामा तताएर मोहीमा भ्वाइँ पार्नु र त्यो मोही रोगिणीलाई पिलाउनू । रक्तप्रदर आराम हुन्छ ।

४२ करवीरको विषमा–बाक्लो मोही र चिनी पिउनाले करवीरको विष नष्ट हुन्छ ।

४३ काँचको विषमा–कसैले काँचको टुक्रा वा चूर्ण खाएको छ भने त्यसलाई गाईको मोही पिलाउनु, काँचको उपद्रव शान्त हुन्छ ।

४४ जाइफलको नशामा–बाक्लो मोही र चिनी खायो भने जाइफलको नशामा आराम गर्छ ।

४५ बर्रोको नशामा–बर्रोको गेडाको नशामा पनि बाक्लो मोही, चिनी र भात खानदिनू, नशाले छोड्छ ।

४० वातज प्रदरमा–५ मासा मिश्री २।३ मासा जेठीमधु र ३।४ मासा तिलको तेलमा बाक्लो मोही मिलाएर पिउनाले वातज प्रदर नष्ट हुन्छ ।

४१ रक्तप्रदरमा–फलामको टुक्रा आगामा तताएर मोहीमा झ्वाइँ पार्नु र त्यो मोही रोगिणीलाई पिलाउनू । रक्तप्रदर आराम हुन्छ ।

४२ करवीरको विषमा–बाक्लो मोही र चिनी पिउनाले करवीरको विष नष्ट हुन्छ ।

४३ काँचको विषमा–कसैले काँचको टुक्रा वा चूर्ण खाएको छ भने त्यसलाई गाईको मोही पिलाउनु, काँचको उपद्रव शान्त हुन्छ ।

४४ जाइफलको नशामा–बाक्लो मोही र चिनी खायो भने जाइफलको नशामा आराम गर्छ ।

४५ बर्रोको नशामा–बर्रोको गेड़ाको नशामा पनि बाक्लो मोही, चिनी र भात खानदिनू, नशाले छोड्छ ।



धतूराको विषमा ४९
अरु विषमा ५०
अफीम आदिको विषमा ५१
मद्यको नशामा ५२

नेपाली—नौनी । हिन्दी—मक्खन । संस्कृत—नवनीत ।

१ आँखा पोलेमा-गाईको नौनी आँखामा लगाउनु । आँखा पोलेको नष्ट हुन्छ ।

२ आँखा रातो भएमा–गाईको घ्यूमा मह मिलाएर अञ्जन लगाउनु । आँखा रातो भएको नष्ट हुन्छ ।

३ कपाल दुखेमा–गाईको ताजा घ्यू शिरमा, हालेर मल्नु । पित्तले कपाल दुखेको आराम हुन्छ ।

४ आधा (अधकपाली) मा–गाईको १ माना दूधमा ३।४ तोला गो-घृत र ४ मासा मिश्री मिलाएर बेहान पिलाउनु, अधकपाली नष्ट हुन्छ ।

५ अथवा–बेहान र बेलुका गाईको ताजा घ्यूको नाकमा नस हाल्नाले ७ दिनमा आधा रोग नष्ट हुन्छ ।

६ अमल-पित्तमा–१ माना गाईको घ्यमा आधा सेर कुरिलाको जरोको लेदो हाली पकाएर छान्नु । १ तोला यो घ्यूको सेवन गर्नाले अमल-पित्त, रक्त-पित्त, तृषा, मूर्च्छा र वमन नष्ट हुन्छ ।

७ कान पोलेकोमा–नौनी मनतातो पारेर कानमा हाल्नु । कानको दाह नष्ट हुन्छ ।

८ बहिरोपनमा–बाख्रोको घ्यू मनतातो पारी कानमा हाल्नाले बहिरोपन नष्ट हुन्छ ।

९ कान्ति बढ़ाउनामा–राती मुखमा घ्यू घसेर सुत्नू । मुखको कालो दाग नष्ट हुन्छ र मुख सुन्दर हुन्छ ।

१० गर्मीमा–२ तोला गाईको नौनीमा बराबर मिश्री मिलाएर खानु । यसो गर्नाले गर्मी-सम्बन्धी रोग नष्ट हुन्छन् ।

११ अथवा–शरीरमा गर्मी घुसेर राता-राता दाग र फोड़ा जस्तो हुन्छ ( कालो रङ्गको पनि हुन्छ ) त्यो फुटेर पानी निस्कन्छ, त्यसमा

नेपाली—नौनी। हिन्दी—मक्खन। संस्कृत—नवनीत।

१ आँखा पोलेमा-गाईको नौनी आँखामा लगाउनु। आँखा पोलेको नष्ट हुन्छ।

२ आँखा रातो भएमा–गाईको घ्यूमा मह मिलाएर अञ्जन लगाउनु। आँखा रातो भएको नष्ट हुन्छ।

३ कपाल दुखेमा–गाईको ताजा घ्यू शिरमा, हालेर मल्नु। पित्तले कपाल दुखेको आराम हुन्छ।

४ आधा (अधकपाली) मा–गाईको १ माना दूधमा ३।४ तोला गो-घृत र ४ मासा मिश्री मिलाएर बेहान पिलाउनु, अधकपाली नष्ट हुन्छ।

५ अथवा–बेहान र बेलुका गाईको ताजा घ्यूको नाकमा नस हाल्नाले ७ दिनमा आधा रोग नष्ट हुन्छ।

६ अमल-पित्तमा–१ माना गाईको घ्यमा आधा सेर कुरिलाको जरोको लेदो हाली पकाएर छान्नु। १ तोला यो घ्यूको सेवन गर्नाले अमल-पित्त, रक्त-पित्त, तृषा, मूर्च्छा र वमन नष्ट हुन्छ।

७ कान पोलेकोमा–नौनी मनतातो पारेर कानमा हाल्नु। कानको दाह नष्ट हुन्छ।

८ बहिरोपनमा–बाख्रोको घ्यू मनतातो पारी कानमा हाल्नाले बहिरोपन नष्ट हुन्छ।

९ कान्ति बढ़ाउनामा–राती मुखमा घ्यू घसेर सुत्नू। मुखको कालो दाग नष्ट हुन्छ र मुख सुन्दर हुन्छ।

१० गर्मीमा–२ तोला गाईको नौनीमा बराबर मिश्री मिलाएर खानु। यसो गर्नाले गर्मी-सम्बन्धी रोग नष्ट हुन्छन्।

११ अथवा–शरीरमा गर्मी घुसेर राता-राता दाग र फोड़ा जस्तो हुन्छ (कालो रङ्गको पनि हुन्छ) त्यो फुटेर पानी निस्कन्छ, त्यसमा

कफ पातलो पारेर नष्ट गर्दछ ।

२१ दाह, मूर्च्छा र जरोमा–शतधौत घृत लगाउनाले दाह, मूर्छा र जरोमा समेत आराम गर्छ ।

२२ उन्माद र चौथिया जरोमा–गाईको घ्यूमा गोदुग्ध, दही र गोबरको रस बराबर हालेर पकाउनु घ्यू मात्र बाँकी रहेपछि छानेर पिउनु । मात्रा १ तोला । यसले चौथिया (४।४ दिनमा आउने) जरो, उन्माद (पागलपन) र छोप्ने व्यथा (छारे रोग) आदि नष्ट हुन्छन् ।

२३ चातुर्थिक जरोमा–पुरानो घ्यूमा हींग मिलाएर नस हाल्नाले चौथिया जरो नष्ट हुन्छ ।

२४ हात-गोड़ा पोलेमा–गाईको घ्यू मल्नाले हात-गोड़ा पोलेको नष्ट हुन्छ ।

२५ पाण्डु-रोगमा–१ माना घ्यूमा १ पाउ सुठोको लेदो हाली पकाउनू र राख्नू । यो घ्यूले ग्रहणी, पाण्डु, फियो र खोकीलाई आराम गर्छ ।

२६ हिक्कामा–३।३ तोला गाईको घ्यू मनतातो पारेर पिलाउनू । हिक्का बन्द हुन्छ ।

२७ रक्तातिसारमा–गो-दुग्धबाट नौनी निकालेर मह र मिश्री बराबर मिलाई चटाउनू । यसले रक्तातिसार नष्ट हुन्छ ।

२८ अग्निमन्द भएमा–१ माना गाईको घ्यूमा १ पाउ जीरा र धनियाँको लेदो हालेर पकाउनू र छानी राख्नू । यसले वमन, अरुचि र अग्निमान्द्य नष्ट हुन्छ ।

२९ परिणाम-शूलमा[1]–१ माना गाईको घ्यूमा १ पाउ पिप्लाको काढ़ाको लेदो हालेर पकाउनू । घ्यूमात्र बाँकी रहेपछि निकालेर छान्नू । यो घ्यू १ तोलामा आधा तोला मह मिलाएर खानाले परिणाम-शूल नष्ट हुन्छ र शरीर फुर्तिलो हुन्छ ।

---

१–खाएको अन्न पच्ने बखतमा शूल (पेट दुख्ने) हुने रोगलाई 'परिणाम शूल' भन्दछन् ।

कफ पातलो पारेर नष्ट गर्दछ ।

२१ दाह, मूर्च्छा र जरोमा–शतधौत घृत लगाउनाले दाह, मूर्छा र जरोमा समेत आराम गर्छ ।

२२ उन्माद र चौथिया जरोमा–गाईको घ्यूमा गोदुग्ध, दही र गोबरको रस बराबर हालेर पकाउनु घ्यू मात्र बाँकी रहेपछि छानेर पिउनु । मात्रा १ तोला । यसले चौथिया (४।४ दिनमा आउने) जरो, उन्माद (पागलपन) र छोप्ने व्यथा (छारे रोग) आदि नष्ट हुन्छन् ।

२३ चातुर्थिक जरोमा–पुरानो घ्यूमा हींग मिलाएर नस हाल्नाले चौथिया जरो नष्ट हुन्छ ।

२४ हात-गोड़ा पोलेमा–गाईको घ्यू मल्नाले हात-गोड़ा पोलेको नष्ट हुन्छ ।

२५ पाण्डु-रोगमा–१ माना घ्यूमा १ पाउ सुठोको लेदो हाली पकाउनू र राख्नू । यो घ्यूले ग्रहणी, पाण्डु, फियो र खोकीलाई आराम गर्छ ।

२६ हिक्कामा–३।३ तोला गाईको घ्यू मनतातो पारेर पिलाउनू । हिक्का बन्द हुन्छ ।

२७ रक्तातिसारमा–गो-दुग्धबाट नौनी निकालेर मह र मिश्री बराबर मिलाई चटाउनू । यसले रक्तातिसार नष्ट हुन्छ ।

२८ अग्निमन्द भएमा–१ माना गाईको घ्यूमा १ पाउ जीरा र धनियाँको लेदो हालेर पकाउनू र छानी राख्नू । यसले वमन, अरुचि र अग्निमान्द्य नष्ट हुन्छ ।

२९ परिणाम-शूलमा[1]–१ माना गाईको घ्यूमा १ पाउ पिप्लाको काढ़ाको लेदो हालेर पकाउनू । घ्यूमात्र बाँकी रहेपछि निकालेर छान्नू । यो घ्यू १ तोलामा आधा तोला मह मिलाएर खानाले परिणाम-शूल नष्ट हुन्छ र शरीर फुर्तिलो हुन्छ ।

---

१–खाएको अन्न पच्ने बखतमा शूल (पेट दुख्ने) हुने रोगलाई 'परिणाम शूल' भन्दछन् ।

४२ विसर्पमा–शत-धौत घृत लगाउनू, विसर्प नष्ट हुन्छ ।

४३ बच्चाको छातीको कफमा–गो-घृतको मालिस गर्नू र सेक्नू, आराम हुन्छ ।

४४ बच्चाको बिफर र दादुराको गर्मी गड़ेमा–१ तोला नौनी र आधा तोला मिश्रीमा १ मासासम्म जीराको धूलो मिलाएर दिनाले बच्चाको बिफर र दादुराको गड़ेको गर्मी नष्ट हुन्छ ।

४५ बच्चाको दाँत आउनेमा–बच्चाको गिजामा घ्यू मलिदिनू, दाँत चाँड़ै आउँछ, तकलीफ हुँदैन ।

४६ प्यासमा–१ माना गाईको दूधमा २ तोला घ्यू मिलाएर पिलाउनू, प्यास शान्त हुन्छ ।

४७ भलायो र सिउँड़ीको विषमा–गाईको नौनी लगाउनाले भलायो उब्जेको र सिउँड़ीको दूध आँखामा परेर पोलेको पनि आराम गर्छ ।

४८ करवीरको विषमा–नौनी मनतातो पारी पिलाउनू, करवीरको विष उत्रन्छ ।

४९ धतूराको विषमा–आधा माना गाईको घ्यू पिलायो भने धतूरो र रसकपूरको विष नष्ट हुन्छ ।

५० अरु विषमा–शत-धौत घृत मल्नाले माउरी र बारुलो आदिको विष नष्ट हुन्छ ।

५१ अफीम आदिको विषमा–गाईको घ्यू र दूध मिलाएर पिलाउनू, अफीम आदिको विष नष्ट हुन्छ ।

५२ मद्यको नशामा–२ तोला गाईको घ्यूमा चिनी मिलाउनु र खानू, रक्सी र जाँड़ आदिको विष ( नशा ) नष्ट हुन्छ ।

●

४२ विसर्पमा–शत-धौत घृत लगाउनू, विसर्प नष्ट हुन्छ ।

४३ बच्चाको छातीको कफमा–गो-घृतको मालिस गर्नू र सेक्नू, आराम हुन्छ ।

४४ बच्चाको बिफर र दादुराको गर्मी गड़ेमा–१ तोला नौनी र आधा तोला मिश्रीमा १ मासासम्म जीराको धूलो मिलाएर दिनाले बच्चाको बिफर र दादुराको गड़ेको गर्मी नष्ट हुन्छ ।

४५ बच्चाको दाँत आउनेमा–बच्चाको गिजामा घ्यू मलिदिनू, दाँत चाँड़ै आउँछ, तकलीफ हुँदैन ।

४६ प्यासमा–१ माना गाईको दूधमा २ तोला घ्यू मिलाएर पिलाउनू , प्यास शान्त हुन्छ ।

४७ भलायो र सिउँड़ीको विषमा–गाईको नौनी लगाउनाले भलायो उब्जेको र सिउँड़ीको दूध आँखामा परेर पोलेको पनि आराम गर्छ ।

४८ करवीरको विषमा–नौनी मनतातो पारी पिलाउनु, करवीरको विष उत्रन्छ ।

४९ धतूराको विषमा–आधा माना गाईको घ्यू पिलायो भने धतूरो र रसकपूरको विष नष्ट हुन्छ ।

५० अरु विषमा–शत-धौत घृत मल्नाले माउरी र बारुलो आदिको विष नष्ट हुन्छ ।

५१ अफीम आदिको विषमा–गाईको घ्यू र दूध मिलाएर पिलाउनू, अफीम आदिको विष नष्ट हुन्छ ।

५२ मद्यको नशामा–२ तोला गाईको घ्यूमा चिनी मिलाउनु र खानू, रक्सी र जाँड़ आदिको विष ( नशा ) नष्ट हुन्छ ।

●

# गोबर

पसीना रोक्नु परेमा १
बेर्नु निस्केमा २
सुकेलुतोमा ३
बिफरको घाउमा ४
घाउमा ५
कम्मर दुखेमा ६
मृत गर्भमा ७
अन्नमा किरा परेमा ८
बारीको किरामा ९

नेपाली—गोबर। हिन्दी—गोबर। संस्कृत—गोमय।

१ पसीना रोक्नु परेमा–नुन राखेको पुरानो माटाको भाँडो पिंधेर त्यो बराबर सुकेको गुइँठा पनि पिंधी पसीना आएको ठाउँमा मल्नू, पसीना आउन बन्द हुन्छ।

२ बेर्नु निस्केमा–गाईको गोबर तताएर निस्केको बेर्नु सेक्नू र बिस्तारै भित्र पसालेर लँगोटा लगाईदिनू, ३।४ दिनमा बेर्नु निस्कन बन्द हुन्छ।

३ सुकेलुतोमा–शरीरमा गोबर खूबसित मल्नू र तातो पानीले स्नान गर्नू। केही दिनमा दिव्य देह भई फोड़ा, फुन्सी र चिलाउने आदि सबै रोग नष्ट हुन्छन्।

४ बिफरको घाउमा–गुइँठाको सफा खरानी कपड़ामा छानेर घाउमा भरिदिनू। बिफर वा दादुरा फुटेको र सिफर भईसकेको भए पनि ठीक हुन्छ।

५ घाउमा–सफा गुइँठाको खरानी घ्यूमा मुछेर घाउमा लगायो भने घाउ आराम हुन्छ।

६ कम्मर दुखे (त्रिक-शूल) मा–गुइँठाको आगाले सेक्नू, कम्मर दुखेको नष्ट हुन्छ।

७ मृतगर्भमा–७ तोला गोबरको रस १ माना गाईको दूधमा

# गोबर

पसीना रोक्नु परेमा १
बेर्नु निस्केमा २
सुकेलुतोमा ३
बिफरको घाउमा ४
घाउमा ५
कम्मर दुखेमा ६
मृत गर्भमा ७
अन्नमा किरा परेमा ८
बारीको किरामा ९

नेपाली—गोबर। हिन्दी—गोबर। संस्कृत—गोमय।

१ पसीना रोक्नु परेमा–नुन राखेको पुरानो माटाको भाँड़ो पिंधेर त्यो बराबर सुकेको गुइँठा पनि पिंधी पसीना आएको ठाउँमा मल्नू, पसीना आउन बन्द हुन्छ।

२ बेर्नु निस्केमा–गाईको गोबर तताएर निस्केको बेर्नु सेक्नू र बिस्तारै भित्र पसालेर लँगोटा लगाईदिनू, ३।४ दिनमा बेर्नु निस्कन बन्द हुन्छ।

३ सुकेलुतोमा–शरीरमा गोबर खूबसित मल्नू र तातो पानीले स्नान गर्नू। केही दिनमा दिव्य देह भई फोड़ा, फुन्सी र चिलाउने आदि सबै रोग नष्ट हुन्छन्।

४ बिफरको घाउमा–गुइँठाको सफा खरानी कपड़ामा छानेर घाउमा भरिदिनू। बिफर वा दादुरा फुटेको र सिफर भईसकेको भए पनि ठीक हुन्छ।

५ घाउमा–सफा गुइँठाको खरानी घ्यूमा मुछेर घाउमा लगायो भने घाउ आराम हुन्छ।

६ कम्मर दुखे (त्रिक-शूल) मा–गुइँठाको आगाले सेक्नू, कम्मर दुखेको नष्ट हुन्छ।

७ मृतगर्भमा–७ तोला गोबरको रस १ माना गाईको दूधमा

# नुन



नेपाली—नुन । हिन्दी—नमक । संस्कृत—लवण ।

१ जरोमा–मसीनो गरी पिंधेको १ मुठी सिंधेनुन एउटा कराहीमा हालेर भुट्नू, रङ्ग बदलिएपछि झिक्नू, चिसो भएपछि छानेर शीशीमा राख्नू । यो धूलो खाली पेटमा जरोको रोगीलाई १ ठुलो चम्चा बराबर तातो पानीमा दिनू । २।३ घण्टासम्म केही खान नदिनू । प्यास चोपट्ट लाग्छ, असह्य भयो भने अलीकति मात्र पानी दिनू ।

# नुन

औलोको जरोमा १, २, ३, ४
खोकीमा ५
दममा ६, ७
हिक्कामा ८
अजीर्णमा ९
पेट दुखेमा १०
गानोको रोगमा ११
दिशा खलास नहुनेमा १२
कपाल दुखेमा १३
कान दुखेमा १४
दाँत दुखेमा १५, १६
घाँटीभित्र सुनिएमा १७
फियो बढ्ेमा १८
हुक पसेमा १९
छोप्ने व्यथामा २०
आमवातमा २१
सुनिएमा २२, २३
थकाईमा २४
मर्केकोमा २५
पुरानो घाउमा २६
लुतो आदिमा २७
दाद र चर्मदलमा २८
खटिरामा २९
कैटे र कव्यौतामा ३०
गोडा फुटेमा ३१
श्वेत कुष्ठमा ३२
सेतो र कालो दागमा ३३
गण्डमालामा ३४
मुसामा ३५
जुकामा ३६
आगाले पोलेमा ३७
बच्छय् आदिको विषमा ३८
अफीम र धतुरो आदिको विषमा ३९

नेपाली—नुन । हिन्दी—नमक । संस्कृत—लवण ।

१ जरोमा–मसीनो गरी पिंधेको १ मुठी सिंधेनुन एउटा कराहीमा हालेर भुट्नू, रङ्ग बदलिएपछि झिक्नू, चिसो भएपछि छानेर शीशीमा राख्नू । यो धूलो खाली पेटमा जरोको रोगीलाई १ ठुलो चम्चा बराबर तातो पानीमा दिनू । २।३ घण्टासम्म केही खान नदिनू । प्यास चोपट्ट लाग्छ, असह्य भयो भने अलीकति मात्र पानी दिनू ।

८ हिक्कामा–नुन पिंधी मसीनो गरी नस हाल्नू, यसले हिका र मगजको कीरा पनि नष्ट हुन्छ ।

९ अजीर्णमा–खाने कुरा खाई सकेपछि १ मासा नुन खान दिनु, अजीर्ण नष्ट हुन्छ ।

१० पेट दुखेमा–बिरेनुन, टिमुर सिंधेनुन बराबर मिलाई पिंधी २ मासाको मात्रा गरी तातो पानीसित खान दिनू, पेट दुखेको आराम हुन्छ ।

११ गानोको व्यथामा–बिरेनुन, टिमुर र ज्वानो बराबर मिलाएर पिंधी त्यसमा घ्यूकुमारीको लेदो हाली डल्लो बनाई भुङ्ग्रामा घुसारी दिनु, पाकेपछि निकालेर आधा तोलाको गोली बनाउनु । दिनको ३ पटक १।१ गोली तातो पानीमा दिनु । यसले गानो निर्मूल हुन्छ ।

१२ दिशा खलास नहुनेमा व्यथामा–५ तोला पिंधेको नुनको धूलो १ पाउ घ्यूमा हालेर खूब फेटेर शीशीमा हालीराख्नू । १ तोला यो औषधी राती सुत्ने बेला तातो पानी सित खान दिनू । बेहान दिशा खलास हुन्छ । केही दिन लगातार खायो भने कोष्ठ-बद्धता निर्मूल हुन्छ ।

१३ कपाल दुखेमा–१ मासा सिंधे नुनको धूलो जिब्रामा राखेर पानीले निल्नू र मसीनो नुनको धूलो नस पनि हाल्नू । कपाल दुखेको नष्ट हुन्छ ।

१४ कान दुखेमा–१ तोला पानीमा ४ तोला सिंधेनुन घोली, त्यसमा १० तोला तिलको तेल मिलाई पकाउनू र पानी मरेपछि तेल छानी शीशीमा हालीराख्नू । कान दुखेको बेला गरम गरी ३।४ थोपा कानमा हाल्नू, कान दुखेको आराम हुन्छ । केही दिन यसको अभ्यास गर्नाले कान पाकेको नष्ट भई बहिरोपन पनि नष्ट हुन्छ ।

१५ दाँत दुखेमा–सिंधेनुन आगामा पोलेर मसीनो गरी पिंध्नू र शीशीमा हालिराख्नू । यो धुलोले दाँत माज्ने गर्‍यो भने दाँत दुख्ने र कीरा लागेको भए पनि आराम गर्छ । दाँतलाई सफा र बलियो

८ हिक्कामा–नुन पिंधी मसीनो गरी नस हाल्नू, यसले हिक्का र मगजको कीरा पनि नष्ट हुन्छ ।

९ अजीर्णमा–खाने कुरा खाई सकेपछि १ मासा नुन खान दिनु, अजीर्ण नष्ट हुन्छ ।

१० पेट दुखेमा-विरेनुन, टिमुर सिंधेनुन बराबर मिलाई पिंधी २ मासाको मात्रा गरी तातो पानीसित खान दिनू, पेट दुखेको आराम हुन्छ ।

११ गानोको व्यथामा–बिरेनुन, टिमुर र ज्वानो बराबर मिलाएर पिंधी त्यसमा घ्यूकुमारीको लेदो हाली डल्लो बनाई भुङ्ग्रामा घुसारी दिनु, पाकेपछि निकालेर आधा तोलाको गोली बनाउनु । दिनको ३ पटक १।१ गोली तातो पानीमा दिनु । यसले गानो निर्मूल हुन्छ ।

१२ दिशा खलास नहुनेमा व्यथामा–५ तोला पिंधेको नुनको धूलो १ पाउ घ्यूमा हालेर खूब फेटेर शीशीमा हालीराख्नू । १ तोला यो औषधी राती सुत्ने बेला तातो पानी सित खान दिनू । बेहान दिशा खलास हुन्छ । केही दिन लगातार खायो भने कोष्ठ-बद्धता निर्मूल हुन्छ ।

१३ कपाल दुखेमा–१ मासा सिंधे नुनको धूलो जिभ्रामा राखेर पानीले निल्नू र मसीनो नुनको धूलो नस पनि हाल्नू । कपाल दुखेको नष्ट हुन्छ ।

१४ कान दुखेमा–१ तोला पानीमा ४ तोला सिंधेनुन घोली, त्यसमा १० तोला तिलको तेल मिलाई पकाउनू र पानी मरेपछि तेल छानी शीशीमा हालीराख्नू । कान दुखेको बेला गरम गरी ३।४ थोपा कानमा हाल्नू , कान दुखेको आराम हुन्छ । केही दिन यसको अभ्यास गर्नाले कान पाकेको नष्ट भई बहिरोपन पनि नष्ट हुन्छ ।

१५ दाँत दुखेमा–सिंधेनुन आगामा पोलेर मसीनो गरी पिध्नू र शीशीमा हालिराख्नू । यो धुलोले दाँत माज्ने गर्‍यो भने दाँत दुख्ने र कीरा लागेको भए पनि आराम गर्छ । दाँतलाई सफा र बलियो

२४ थकाईमा—तात्तातो नुन-पानीले गोड़ा खूबसित मलेर धोयो भने हिंड़ेको थकाई आराम गर्छ।

२५ मर्केको (मोच) मा—मर्केको मात्र छ र घाउ भएको छैन भने नुन-पानी मिसाएर तताएर तात्तातै लेप गरिदिनू। मर्केको र दम्को पसेको पनि आराम गर्छ।

२६ पुरानो घाउ (क्षत) मा—गह्लाउने धेरै दिनको फोहोर भएको घाउमा २ माना पानीमा ३ माना नुन मिलाएर दिनको २ पटक त्यो घाउ धुनू। यसले सड़ेको बिग्रेको घाउ र पुरानो घाउको पीप सफा गरी चाँड़ै पुरिदिन्छ।

२७ चिलाउने (लुतो आदि) मा—२०।२५ माना तातो पानीमा ५ तोला नुन मिलाएको पानीले स्नान गर्ने गर्‍यो भने लुतो-आदि रोग नष्ट हुन्छन्[१], पित्तबाट पैदा भएका साना-साना खटिराहरू पनि नष्ट हुन्छन्।

२८ दाद र चर्मदलमा—नुनको ढिको पानीमा घोटेर दाद भएको ठाउँमा लेप गरिदिनू। केही दिनसम्म लगाउने गर्‍यो भने पुराना दाद पनि नष्ट हुन्छन। आराम भइसकेपछि नौनी लगाउने गर्‍यो भने दाद निर्मूल भई फेरि आउँदैन[२]। १ दिनमा ३।४ पटक लगाउने गर्‍यो भने चर्मदल (एक किसिमको कड़ा दाद) भैंसे पनि नष्ट हुन्छ।

२९ खटिरामा—जुन खटिरा पाक्नू न थाक्नू भएको छ, त्यसमा नुन पानी बाक्लो गरी लेप गरिदिनू र त्यसमाथि तातो खिचड़ी अथवा भात राखी बाँधीदिनू (दिन भरमा ३ पटक लगाउनू) खटिरा चाँड़ै पाकेर फुट्दछ।

३० कैटे[३] र कख्यौतीमा—तातो पानीमा नुन पिंधेर गाढ़ा गरेर दिन

---

१ नुन-पानी रौं भएको ठाउँमा धेरै नलगाउनू, यसले रौं चाँड़ै फुलाई सेतो पारिदन्छ।

२—कुनै किसिमको दाद हिउँदमा आराम हुन्छ, फेरि बर्सातमा पैदा हुन्छ।

३—भिरङ्गी (सिफलिस) को कीरा परेपछि कैंटे पैदा हुन्छ, त्यो तिघ्राको जोर्नीमा डल्लो भएर आउँछ।

२४ थकाईमा–तात्तातो नुन-पानीले गोड़ा खूबसित मलेर धोयो भने हिंड़ेको थकाई आराम गर्छ।

२५ मर्केको (मोच) मा–मर्केको मात्र छ र घाउ भएको छैन भने नुन-पानी मिसाएर तताएर तात्तातै लेप गरिदिनू। मर्केको र दम्को पसेको पनि आराम गर्छ।

२६ पुरानो घाउ (क्षत) मा–गह्राउने धेरै दिनको फोहोर भएको घाउमा २ माना पानीमा ३ माना नुन मिलाएर दिनको २ पटक त्यो घाउ धुनू। यसले सड़ेको बिग्रेको घाउ र पुरानो घाउको पीप सफा गरी चाँड़ै पुरिदिन्छ।

२७ चिलाउने (लुतो आदि) मा–२०।२५ माना तातो पानीमा ५ तोला नुन मिलाएको पानीले स्नान गर्ने गऱ्यो भने लुतो-आदि रोग नष्ट हुन्छन्[१], पित्तबाट पैदा भएका साना-साना खटिराहरू पनि नष्ट हुन्छन्।

२८ दाद र चर्मदलमा–नुनको ढिको पानीमा घोटेर दाद भएको ठाउँमा लेप गरिदिनू। केही दिनसम्म लगाउने गऱ्यो भने पुराना दाद पनि नष्ट हुन्छन्। आराम भइसकेपछि नौनी लगाउने गऱ्यो भने दाद निर्मूल भई फेरि आउँदैन[२]। १ दिनमा ३।४ पटक लगाउने गऱ्यो भने चर्मदल (एक किसिमको कड़ा दाद) भैंसे पनि नष्ट हुन्छ।

२९ खटिरामा–जुन खटिरा पाक्नू न थाक्नू भएको छ, त्यसमा नुन पानी बाक्लो गरी लेप गरिदिनू र त्यसमाथि तातो खिचड़ी अथवा भात राखी बाँधीदिनू (दिन भरमा ३ पटक लगाउनू) खटिरा चाँड़ै पाकेर फुट्दछ।

३० कैंटे[३] र कख्यौतीमा–तातो पानीमा नुन पिंधेर गाढ़ा गरेर दिन

१ नुन-पानी रौं भएको ठाउँमा धेरै नलगाउनू, यसले रौं चाँड़ै फुलाई सेतो पारिदन्छ।

२–कुनै किसिमको दाद हिउँदमा आराम हुन्छ, फेरि बर्सातमा पैदा हुन्छ।

३–भिरङ्गी (सिफलिस) को कीरा परेपछि कैंटे पैदा हुन्छ, त्यो तिघ्राको जोनिमा डल्लो भएर आउँछ।

हालिदिनू। फोको पनि उठ्दैन र दाह पनि हुँदैन।

३८ बच्छ्यू आदिको विषमा–चुक अमिलोमा नुन मसीनोसित पिंधी टोकेको ठाउँमा मल्न् र लेप गरिदिनू। यसले बच्छ्यूँ, अरिङ्गाल, माउरी र बिच्छी आदिका विष नष्ट हुन्छन्। (अमिलो नपाए पानीमा पिंधेर लेप गरे पनि हुन्छ)।

३९ अफीम र धतुरो आदिमा–कसैले अफीम आदि विष खायो र ज्यान-जानलाग्यो भने नन चर्को भएको पानी पेट भरी पिलाउनू र वमन गराउनू, विष नउत्रेसम्म यस्तै किसिमसित वमन गराईरहनू; विष नष्ट हुन्छ र प्राण बाँच्दछ।



हालिदिनू। फोको पनि उठ्दैन र दाह पनि हुँदैन।

३८ बच्छ्यू आदिको विषमा–चुक अमिलोमा नुन मसीनोसित पिंधी टोकेको ठाउँमा मल्नू र लेप गरिदिनू। यसले बच्छ्यूँ, अरिङ्गाल, माउरी र बिच्छी आदिका विष नष्ट हुन्छन्। (अमिलो नपाए पानीमा पिंधेर लेप गरे पनि हुन्छ)।

३९ अफीम र धतुरो आदिमा–कसैले अफीम आदि विष खायो र ज्यान-जानलाग्यो भने नुन चर्को भएको पानी पेट भरी पिलाउनू र वमन गराउनू, विष नउत्रेसम्म यस्तै किसिमसित वमन गराईरहनू; विष नष्ट हुन्छ र प्राण बाँच्दछ।

गाजल जस्तो गरी लगाउनाले आँखाका सम्पूर्ण रोग नष्ट हुन्छन ।

२ अथवा–१ मासा गुर्जोको रस, १ मासा सिंधेनुन र १ मासा मह मिलाएर नियम गरेर रोज आँखामा लगाउनाले आँखा चिलाउने, दुख्ने र मोतीबिन्दु समेत नष्ट हुन्छ ।

३ आँखाको फुलोमा–महमा सिंधेनुन घोटेर लगाउनाले केही दिनमा फुलो र पोल्ने पनि नष्ट हुन्छ ।

४ रतौंधी (राती नदेख्ने) मा–मह सलाईले लगाउनु । रतौंधी नष्ट हुन्छ ।

५ आँखाको कमजोरीमा–बेहान बेलुका सलाईले आँखामा मह लगाउनाले दृष्टिक्षीणता नष्ट हुन्छ र आँखाको तेज पनि बढ्दछ ।

६ कानको रोगमा–मह मनतातो पारी कानमा हाल्नाले कान दुख्न नष्ट हुन्छ र कानको घाउ पनि नष्ट हुन्छ ।

७ अथवा–महमा सिंधेनुन, कडुवा तेल र अदुवाको रस मिलाएर मनतातो गरी कानमा हाल्नाले कान दुखेको नष्ट हुन्छ ।

८ दाँतको रोगमा–मह र अमिलो मिलाएर दाँत माझ्नाले दाँत सफा र बलियो हुन्छ ।

९ अथवा–चाँडै नै दाँत झर्न, गिजा सुनिने, पीप आउने र दाँत दुख्ने रोग[१] लाग्यो भने प्रतिदिन महले कुल्ला गर्नू, आराम हुन्छ ।

१० दादमा–सुँपको बिउ पिंधेर मह मिलाई दादमा लगाउनाले दाद नष्ट हुन्छ ।

११ खटिरामा–खटिरामा मासु सड़ेको छ भने मह र घ्यू मिलाएर लेप गर्नू, घाउ शुद्ध हुन्छ ।

१२ अथवा–विषाएको घाउ छ भने मह लगाई दिनू, आराम हुन्छ ।

१३ अथवा–चोट लागेको ठाउँमा वरिपरि व्रण निक्ल्यो भने मह र घ्यू लगाई दिनू, आराम हुन्छ ।

१४ चिलाउनेमा–चोट लागेको ठाउँमा वरिपरि धेरै खटिरा आएर

१–डाक्टरहरू यस रोगलाई 'पायरिया' भन्दछन् ।

गाजल जस्तो गरी लगाउनाले आँखाका सम्पूर्ण रोग नष्ट हुन्छन ।

२ अथवा–१ मासा गुर्जोको रस, १ मासा सिंधेनुन र १ मासा मह मिलाएर नियम गरेर रोज आँखामा लगाउनाले आँखा चिलाउने, दुख्ने र मोतीबिन्दु समेत नष्ट हुन्छ ।

३ आँखाको फुलोमा–महमा सिंधेनुन घोटेर लगाउनाले केही दिनमा फुलो र पोल्ने पनि नष्ट हुन्छ ।

४ रतौंधी (राती नदेख्ने) मा–मह सलाईले लगाउनु । रतौंधी नष्ट हुन्छ ।

५ आँखाको कमजोरीमा–बेहान बेलुका सलाईले आँखामा मह लगाउनाले दृष्टिक्षीणता नष्ट हुन्छ र आँखाको तेज पनि बढ्दछ ।

६ कानको रोगमा–मह मनतातो पारी कानमा हाल्नाले कान दुख्न नष्ट हुन्छ र कानको घाउ पनि नष्ट हुन्छ ।

७ अथवा–महमा सिंधेनुन, कडुवा तेल र अदुवाको रस मिलाएर मनतातो गरी कानमा हाल्नाले कान दुखेको नष्ट हुन्छ ।

८ दाँतको रोगमा–मह र अमिलो मिलाएर दाँत माझ्नाले दाँत सफा र बलियो हुन्छ ।

९ अथवा–चाँडै नै दाँत झर्न, गिजा सुनिने, पीप आउने र दाँत दुख्ने रोग[1] लाग्यो भने प्रतिदिन महले कुल्ला गर्नू, आराम हुन्छ ।

१० दादमा–सुँपको बिउ पिंधेर मह मिलाई दादमा लगाउनाले दाद नष्ट हुन्छ ।

११ खटिरामा–खटिरामा मासु सड़ेको छ भने मह र घ्यू मिलाएर लेप गर्नू, घाउ शुद्ध हुन्छ ।

१२ अथवा–विषाएको घाउ छ भने मह लगाई दिनू, आराम हुन्छ ।

१३ अथवा–चोट लागेको ठाउँमा वरिपरि व्रण निक्लयो भने मह र घ्यू लगाई दिनू, आराम हुन्छ ।

१४ चिलाउनेमा–चोट लागेको ठाउँमा वरिपरि धेरै खटिरा आएर

---

१–डाक्टरहरू यस रोगलाई 'पायरिया' भन्दछन् ।

बाँधिदिनू, वातको वेदना नष्ट हुन्छ ।

२८ आगोले पोलेमा—पोल्नेबित्तिकै मह लगाइदिनू, जलन शान्त हुन्छ र जैलेसम्म घाउ आराम हुँदैन, मह लगाउँदै जानू ।

२९ अथवा—आगोले पोलेमा घाउ निको भइसकेपछि सेतो दाग बस्तछ । त्यो दाग हटाउनालाई रूवोको फाहा महले भिजाएर दागको ठाउँमा बाँधिदिनू, केही दिनमा सफेदीपन गएर छालाकै जस्तो रङ्ग हुन्छ ।

३० वात-रक्तमा—आधा तोला महमा १ तोला घ्यू, आधा तोला तिलको तेल र १ तोला मिश्री मिलाएर पिउनू । वात-रक्त आराम हुन्छ ।

३१ निद्रा-नाश गराउनामा—मह र घोड़ाको राल मिलाएर आँखामा लगाउनाले धेरै निद्रा लाग्ने रोग नष्ट हुन्छ ।

३२ गण्डमालामा—१ तोला सिप्लीकानको जराको काढ़ामा ठण्डा भए पछि अलिकति मह मिलाएर पिलाउनू । गण्डमाला नष्ट हुन्छ ।

३३ दममा—१ तोला त्रिफला र ५ लाल पिप्लाको चूर्णमा मह मिलाएर चाट्नू दम नष्ट हुन्छ ।

३४ रक्त-प्रदरमा—१ तोला डुम्रीको रसमा अलीकति मह मिलाएर चाट्नाले रक्त-प्रदर नष्ट हुन्छ ।

३५ जुकामा—महमा ३ मासा कालीकाठको गेडाको चूर्ण, ६ मासा त्रिफला र २ लाल पिप्लाको चूर्ण मिलाएर चाट्नाले जुका नष्ट हुन्छ ।

३६ हिक्कामा—महमा बिरेनुन र ६ मासा बिमिरोको रस मिलाएर पिउनाले हिक्का बन्द हुन्छ ।

३७ हाड़ भाँचिएमा—महमा कपड़ा भिजाएर भाँचिएको ठाउँमा काम्रो[1] बाँधिदिनू र ३ तोला मह पनि रोगीलाई केही दिन पिलाउनू, भाँचिएको हाड़ जोरिन्छ र आराम हुन्छ ।

३८ मोटोपन हटाउनामा—तातो पानी सेलाएपछि २ तोला मह

---

१—काम्रा दुइटा काठको छेस्को राखो त्यो ठाउँ हल्लन नपाउन गरो बाँधी दिनु, यसलाई 'काम्रो' भन्दछन् ।

बाँधिदिनू, वातको वेदना नष्ट हुन्छ ।

२८ आगोले पोलेमा–पोल्नेबित्तिकै मह लगाइदिनू, जलन शान्त हुन्छ र जैलेसम्म घाउ आराम हुँदैन, मह लगाउँदै जानू ।

२९ अथवा–आगोले पोलेमा घाउ निको भइसकेपछि सेतो दाग बस्तछ । त्यो दाग हटाउनालाई रूवोको फाहा महले भिजाएर दागको ठाउँमा बाँधिदिनू, केही दिनमा सफेदीपन गएर छालाकै जस्तो रङ्ग हुन्छ ।

३० वात-रक्तमा–आधा तोला महमा १ तोला घ्यू, आधा तोला तिलको तेल र १ तोला मिश्री मिलाएर पिउनू । वात-रक्त आराम हुन्छ ।

३१ निद्रा-नाश गराउनामा–मह र घोड़ाको राल मिलाएर आँखामा लगाउनाले धेरै निद्रा लाग्ने रोग नष्ट हुन्छ ।

३२ गण्डमालामा–१ तोला सिप्लीकानको जराको काढ़ामा ठण्डा भए पछि अलिकति मह मिलाएर पिलाउनू । गण्डमाला नष्ट हुन्छ ।

३३ दममा–१ तोला त्रिफला र ५ लाल पिप्लाको चूर्णमा मह मिलाएर चाट्नू दम नष्ट हुन्छ ।

३४ रक्त-प्रदरमा–१ तोला डुम्रीको रसमा अलीकति मह मिलाएर चाट्नाले रक्त-प्रदर नष्ट हुन्छ ।

३५ जुकामा–महमा ३ मासा कालीकाठको गेडाको चूर्ण, ६ मासा त्रिफला र २ लाल पिप्लाको चूर्ण मिलाएर चाट्नाले जुका नष्ट हुन्छ ।

३६ हिक्कामा–महमा बिरेनुन र ६ मासा बिमिरोको रस मिलाएर पिउनाले हिक्का बन्द हुन्छ ।

३७ हाड़ भाँचिएमा–महमा कपड़ा भिजाएर भाँचिएको ठाउँमा काम्रो[१] बाँधिदिनू र ३ तोला मह पनि रोगीलाई केही दिन पिलाउनू, भाँचिएको हाड़ जोरिन्छ र आराम हुन्छ ।

३८ मोटोपन हटाउनामा–तातो पानी सेलाएपछि २ तोला मह

१–काम्रा दुइटा काठको छेस्को राखो त्यो ठाउँ हल्लन नपाउने गरी बाँधी दिनू, यसलाई 'काम्रो' भन्दछन् ।

५२ अथवा–मह सित .पाकेको मालभोग केरा, १ तोला अमलाको रस र आधा तोला मिश्री मिलाएर खाने गरे पुरुषको प्रमेह र स्त्रीको प्रदर पनि नष्ट हुन्छ ।

५३ अथवा–मह र १ तोला गुर्जोको रस पिए प्रमेह नष्ट हुन्छ ।

५४ मूत्रनलीको घाउमा–मूत्रनलीमा घाउ भएर पिसाब गर्दा कष्ट हुन्छ भने महको पचका लिङ्गेन्द्रिय भित्र हाल्नू, आराम हुन्छ । (पचका हाल्दा पिसाब फिरेपछि मात्र पचका हाल्नू ।)

५५ बेरीबेरी[1] रोगमा–१ तोला मह र २ तोला गाईको ताजा घ्यू बेहानबेलुका चाटी १५ मिनटपछि गाईको दूध पिए बेरीबेरी नष्ट हुन्छ।

५६ मुखको सुन्दरतामा–राती सुत्ने बेला मह मुखमा घसेर सुत्नू र बेहान साबुन र तातो पानीले धुनू, केही दिनमा मुख सुन्दर हुन्छ ।

५७ फियो बढ़ेमा–१० मासा मह, २ तोला मिश्री, १ रत्ती पिप्ला, ७ गेड़ा मरिच र आधा माना गाईको दूध पिए फियो ठीक भई रगत बढ्छ ।

५८ बच्चाको दाँतमा–मह र धङ्गेरोको फूलको धूलो मिलाएर बच्चाको गिजामा मल्नाले दाँत चाँड़ै आउँछ र तकलीफ पनि हट्दछ ।

५९ अथवा–मह, घ्यू र पिप्लाको धूलो मिलाएर दाँतमा लगाउनाले पनि दाँतको पीडा नष्ट भई दाँत चाँड़ै नै निक्लन्छ ।

६० खोकीमा–बच्चाको खोकीमा १ तोला महमा १ रत्ती वंशलोचनको धूलो हालेर चटाउनू । बच्चाको खोकी नष्ट हुन्छ ।

६१ स्याल र कुकुर आदिको विषमा–३ तोला मह ५ तोला पानीमा मिलाएर पिलाउनू, घाउमा पनि महको लेप गर्नू, विष उत्रन्छ ।

६२ बारुलोले टोकेमा–बारुलाहरूले टोकेको ठाउँमा महको लेप गर्ने र चटाउनाले पनि विष नष्ट हुन्छ ।

६३ मूसाको विषमा–१ थोपा सिहुँडीको दूधमा आधा तोला कालो निसोथ र मह मिलाएर खानू । अजित नाउँका मूसाको विष नष्ट हुन्छ । (यसले धेरै दिशा लाग्छ ) ।

---

१–यो रोगमा गोड़ा सुनिन्छ, दिशा लाग्छ, जरो आउँछर केही दिनमा हृदय कमजोर हुन्छ।

५२ अथवा–महसित पाकेको मालभोग केरा, १ तोला अमलाको रस र आधा तोला मिश्री मिलाएर खाने गरे पुरुषको प्रमेह र स्त्रीको प्रदर पनि नष्ट हुन्छ।

५३ अथवा–मह र १ तोला गुर्जोको रस पिए प्रमेह नष्ट हुन्छ।

५४ मूत्रनलीको घाउमा–मूत्रनलीमा घाउ भएर पिसाब गर्दा कष्ट हुन्छ भने महको पचका लिङ्गेन्द्रिय भित्र हाल्नू, आराम हुन्छ। (पचका हाल्दा पिसाब फिरेपछि मात्र पचका हाल्नू।)

५५ बेरीबेरी[1] रोगमा–१ तोला मह र २ तोला गाईको ताजा घ्यू बेहानबेलुका चाटी १५ मिनटपछि गाईको दूध पिए बेरीबेरी नष्ट हुन्छ।

५६ मुखको सुन्दरतामा–राती सुत्ने बेला मह मुखमा घसेर सुत्नू र बेहान साबुन र तातो पानीले धुनू, केही दिनमा मुख सुन्दर हुन्छ।

५७ फियो बढ़ेमा–१० मासा मह, २ तोला मिश्री, १ रत्ती पिप्ला, ७ गेड़ा मरिच र आधा माना गाईको दूध पिए फियो ठीक भई रगत बढ्छ।

५८ बच्चाको दाँतमा–मह र धङेरोको फूलको धूलो मिलाएर बच्चाको गिजामा मल्नाले दाँत चाँड़ै आउँछ र तकलीफ पनि हट्दछ।

५९ अथवा–मह, घ्यू र पिप्लाको धूलो मिलाएर दाँतमा लगाउनाले पनि दाँतको पीडा नष्ट भई दाँत चाँड़ै नै निक्लन्छ।

६० खोकीमा–बच्चाको खोकीमा १ तोला महमा १ रत्ती वंशलोचनको धूलो हालेर चटाउनू। बच्चाको खोकी नष्ट हुन्छ।

६१ स्याल र कुकुर आदिको विषमा–३ तोला मह ५ तोला पानीमा मिलाएर पिलाउनू, घाउमा पनि महको लेप गर्नू, विष उत्रन्छ।

६२ बारुलोले टोकेमा–बारुलाहरूले टोकेको ठाउँमा महको लेप गर्ने र चटाउनाले पनि विष नष्ट हुन्छ।

६३ मूसाको विषमा–१ थोपा सिहुँडीको दूधमा आधा तोला कालो निसोथ र मह मिलाएर खानू। अजित नाउँका मूसाको विष नष्ट हुन्छ। (यसले धेरै दिशा लाग्छ)।

---

१–यो रोगमा गोड़ा सुनिन्छ, दिशा लाग्छ, जरो आउँछ र केही दिनमा हृदय कमजोर हुन्छ।

# नौसादर



नेपाली—नौसादर। हिन्दी—नौसादर। संस्कृत—नरसार।

१ कपाल दुखेमा–नौसादरको धूलो १।१ मासा ३।३ घण्टामा ३ पटक पानीसित खायो भने कपाल दुखेको नष्ट हुन्छ।

२ आँखा दुखेमा–नौसादर मसीनो पिंधी सलाईले आँखामा लाउनाले जाली, फुलो आदि नष्ट हुन्छन्। मोतीबिन्दु पनि नष्ट हुन्छ।

३ अथवा–नौसादर र फटकिरी बराबर खल गरी आँखामा लगाउनाले पनि आँखाका रोग नष्ट हुन्छन्। मोतीबिन्दु पनि आराम हुन्छ।

४ आधामा–२ रत्ती नौसादर, २ रत्ती कालादाना ( लहरेस्यूँड़ी ) मसीनो पिंधी पानी मिलाई नाकमा टप्काउनाले र नस हाल्नाले आधा कपाल दुखेको आराम हुन्छ।

५ अथवा–नौसादर र कुटकी खूब पिंधेर शिर र कन्चटमा लेप गर्नाले आधा कपाल दुखेको आराम हुन्छ।

६ अथवा–नौसादर ५ देखि १० रत्तीसम्म दिनको ३-४ पटक खानाले आधा कपाल दुखेको आराम हुन्छ।

७ दाँत दुखेमा–जुनेलो जति नौसादर रूवोको टुक्रामा हाली

# नौसादर



नेपाली—नौसादर । हिन्दी—नौसादर । संस्कृत—नरसार ।

१ कपाल दुखेमा–नौसादरको धूलो १११ मासा ३।३ घण्टामा ३ पटक पानीसित खायो भने कपाल दुखेको नष्ट हुन्छ ।

२ आँखा दुखेमा–नौसादर मसीनो पिंधी सलाईले आँखामा लाउनाले जाली, फुलो आदि नष्ट हुन्छन् । मोतीबिन्दु पनि नष्ट हुन्छ ।

३ अथवा–नौसादर र फटकिरी बराबर खल गरी आँखामा लगाउनाले पनि आँखाका रोग नष्ट हुन्छन् । मोतीबिन्दु पनि आराम हुन्छ ।

४ आधामा–२ रत्ती नौसादर, २ रत्ती कालादाना ( लहरेस्यूँड़ी ) मसीनो पिंधी पानी मिलाई नाकमा टप्काउनाले र नस हाल्नाले आधा कपाल दुखेको आराम हुन्छ ।

५ अथवा–नौसादर र कुटकी खूब पिंधेर शिर र कञ्चटमा लेप गर्नाले आधा कपाल दुखेको आराम हुन्छ ।

६ अथवा–नौसादर ५ देखि १० रत्तीसम्म दिनको ३-४ पटक खानाले आधा कपाल दुखेको आराम हुन्छ ।

७ दाँत दुखेमा–जुनेलो जति नौसादर रूवोको टुक्रामा हाली

२१ चोटलागेमा–चोट लागेमा, नील जमेकोमा, हाड़ फुस्किएको वा हाड़ भाँचिएकोमा पनि नौसादरको मलह्म बनाई लेप गर्नाले आराम हुन्छ ।

२२ थुनेलो भएमा–थुनेलो भएर थुन गानिएर असह्य वेदना भएको छ भने १ मासा नौसादर दिनको ३ पटक खान दिनाले र नौसादरको मलह्म थुनमा लगाउने गर्नाले पनि थुनेलो नष्ट हुन्छ, अरू खटिरा-पटिराले ढाकिएको भए पनि नष्ट हुन्छ ।

२३ मासिक-धर्ममा–नौसादर १ मासाको मात्रामा दिनको ३ पटक दिनाले मासिक-धर्म खुलेर आउँछ ।

२४ अण्डवृद्धिमा–बच्चाको अण्डमा पानी भरिएको छ भने नौसादर-को मलह्म लगाउनू, आराम हुन्छ ।

२५ बिच्छीको विषमा–नौसादर र हरिताल बराबर पिँधेर बिच्छीको विषमा लगाउनाले बिच्छीको विष नष्ट हुन्छ ।

२६ अथवा–नौसादर, चून र स्वाग यी ३ चीज खूब मसीनो सङ्ग पिंधी सुँघ्नाले बिच्छीको विष उत्रन्छ ।

२७ अथवा–जुनसुकै विषमा पनि ४ मासा नौसादर पानीसित खायो भने विषका विकारहरू सबै नष्ट हुन्छन् ।

२८ सर्पको बचाउमा–नौसादर पानीमा घोलेर घरको वरिपरि छरिदिनाले सर्पहरू त्यसको गन्धले आउँदैनन् ।

२९ उपदेशहरू–

(क) नौसादर ठूलो मात्रा गरी नखानु । १० मासाको मात्रामा खानाले यसको जहरीलो असर देखिन्छ र आमाशय र आन्द्रा आदि विकृत हुन्छन् ।

(ख) यसको विष हटाउन दूध र घ्यू खूब खानु, वमन गराउनु र ठण्डा औषधीको सेवन गर्नु । विष नष्ट हुन्छ ।

२१ चोटलागेमा–चोट लागेमा, नील जमेकोमा, हाड़ फुस्किएको वा हाड़ भाँचिएकोमा पनि नौसादरको मलह्म बनाई लेप गर्नाले आराम हुन्छ।

२२ थुनेलो भएमा–थुनेलो भएर थुन गानिएर असह्य वेदना भएको छ भने १ मासा नौसादर दिनको ३ पटक खान दिनाले र नौसादरको मलह्म थुनमा लगाउने गर्नाले पनि थुनेलो नष्ट हुन्छ, अरू खटिरा-पटिराले ढाकिएको भए पनि नष्ट हुन्छ।

२३ मासिक-धर्ममा–नौसादर १ मासाको मात्रामा दिनको ३ पटक दिनाले मासिक-धर्म खुलेर आउँछ।

२४ अण्डवृद्धिमा–बच्चाको अण्डमा पानी भरिएको छ भने नौसादर-को मलह्म लगाउनू, आराम हुन्छ।

२५ बिच्छीको विषमा–नौसादर र हरिताल बराबर पिंधेर बिच्छीको विषमा लगाउनाले बिच्छीको विष नष्ट हुन्छ।

२६ अथवा–नौसादर, चून र स्वाग यी ३ चीज खूब मसीनो सङ्ग पिंधी सुँघ्नाले बिच्छीको विष उत्रन्छ।

२७ अथवा–जुनसुकै विषमा पनि ४ मासा नौसादर पानीसित खायो भने विषका विकारहरू सबै नष्ट हुन्छन्।

२८ सर्पको बचाउमा–नौसादर पानीमा घोलेर घरको वरिपरि छरिदिनाले सर्पहरू त्यसको गन्धले आउँदैनन्।

२९ उपदेशहरू–

(क) नौसादर ठूलो मात्रा गरी नखानु। १० मासाको मात्रामा खानाले यसको जहरीलो असर देखिन्छ र आमाशय र आन्द्रा आदि विकृत हुन्छन्।

(ख) यसको विष हटाउन दूध र घ्यू खूब खानु, वमन गराउनु र ठण्डा औषधीको सेवन गर्नु। विष नष्ट हुन्छ।

८ अथवा–माप चिलिममा राखेर धुवाँ लिए हिक्का बन्द हुन्छ ।

९ नाथ्रो फुटेमा–मापको पिठो चिसो पानीमा पिंधी तालुमा लेप गर्नाले नाथ्रो फुटेको थामिन्छ ।

१० पित्तको सूजमा–माप पकाएर सुनिएको ठाउँमा पुल्टिस बाँधे पित्तबाट पैदा भएको शोथ नष्ट हुन्छ ।

११ निद्रा नलागेमा–१ तोला मापको जराको काढ़ा पकाएर पिलाउनाले निद्रा लाग्दछ र हाड़को पीडा पनि नष्ट गर्दछ ।

१२ अजीर्णमा–१ तोला माषको काढ़ा पकाएर १ लाल हींङ मिलाई पिउनाले अजीर्ण नष्ट हुन्छ ।

१३ शरीर दुखेमा–मापको पिठोमा नुन, सुठो र हींङ मिलाएर रोटी बनाउनू र एकापट्टि सेक्नू र आर्कोपट्टि ( काँचो भएपट्टि ) तिलको तेल लगाएर दुखेको अङ्गमा बाँध्नाले शरीरको पीडा आराम हुन्छ ।

१४ फोड़ामा–माषको पुल्टिस ( पीठो पानीमा ) पकाएर बाँध्नाले फोड़ा आराम हुन्छ ।

१५ तागत बढाउनु परेमा–माषको छाँटाको पीठो घ्यूमा रातो भुट्नू र मिश्री मिलाई २ तोलाको लड्डू बेहान-बेलुका दूधसित ४० दिन सेवन गर्नू ।

१६ जरायुको विकारमा–प्रकृतिको विचारले ४ तोलासम्म माप भुटेर खाने गर्नाले स्त्रीको जरायु-विकार नष्ट भई खूब हृष्ट-पुष्ट हुन्छन ।

१७ दूध बढाउनु परेमा–मापको दाल बेहान-बेलुका खानाले स्त्रीको दूध बढ्दछ र बालक हृष्ट-पुष्ट हुन्छन ।

१८ शीतबाट रक्षा–शरद ऋतुमा माप खाने गर्नाले शीतबाट रक्षा हुन्छ । शरीर गरम रहन्छ ।

१९ धातु-पुष्टिमा–आधा माना माप, आधा माना गहुँ आधा माना जौ, १ चौथाई सामा चामलको पीठो र आधा चौथाई पिप्लाको धूलो आधा माना घ्यूमा भुटेर १ माना चिनीको चास्नीमा साड्नू, ४।५ तोला को लड्डू बेहान-बेलुका दूधसित खानू, रति-शक्ति पनि खूब बढ्दछ ।

८ अथवा–माष चिलिममा राखेर धुवाँ लिए हिक्का बन्द हुन्छ ।

९ नाथ्री फुटेमा–माषको पिठो चिसो पानीमा पिंधी तालुमा लेप गर्नाले नाथ्रो फुटेको थामिन्छ ।

१० पित्तको सूजमा–माष पकाएर सुनिएको ठाउँमा पुल्टिस बाँधे पित्तबाट पैदा भएको शोथ नष्ट हुन्छ ।

११ निद्रा नलागेमा–१ तोला माषको जराको काढ़ा पकाएर पिलाउनाले निद्रा लाग्दछ र हाड़को पीडा पनि नष्ट गर्दछ ।

१२ अजीर्णमा–१ तोला माषको काढ़ा पकाएर १ लाल हींङ मिलाई पिउनाले अजीर्ण नष्ट हुन्छ ।

१३ शरीर दुखेमा–माषको पिठोमा नुन, सुठो र हींङ मिलाएर रोटी बनाउनू र एकापट्टि सेक्नू र आर्कोपट्टि ( काँचो भएपट्टि ) तिलको तेल लगाएर दुखेको अङ्गमा बाँध्नाले शरीरको पीडा आराम हुन्छ ।

१४ फोड़ामा–माषको पुल्टिस ( पीठो पानीमा ) पकाएर बाँध्नाले फोड़ा आराम हुन्छ ।

१५ तागत बढाउनु परेमा–माषको छाँटाको पीठो घ्यूमा रातो भुट्नू र मिश्री मिलाई २ तोलाको लड्डू बेहान-बेलुका दूधसित ४० दिन सेवन गर्नू ।

१६ जरायुको विकारमा–प्रकृतिको विचारले ४ तोलासम्म माष भुटेर खाने गर्नाले स्त्रीको जराय-विकार नष्ट भई खूब हृष्ट-पुष्ट हुन्छन ।

१७ दूध बढाउनु परेमा–माषको दाल बेहान-बेलुका खानाले स्त्रीको दूध बढ्दछ र बालक हृष्ट-पुष्ट हुन्छन् ।

१८ शीतबाट रक्षा–शरत् ऋतुमा माष खाने गर्नाले शीतबाट रक्षा हुन्छ । शरीर गरम रहन्छ ।

१९ धातु-पुष्टिमा–आधा माना माष, आधा माना गहुँ आधा माना जौ, १ चौथाई मासो चामलको पीठो र आधा चौथाई पिप्लाको धूलो आधा माना घ्यूमा भुटेर १ माना चिनीको चास्नीमा माड्नू, ४।५ तोला को लड्डू बेहान-बेलुका दूधसित खानू, रति-शक्ति पनि खूब बढ्दछ ।

देश-काल संस्कार संयोग इत्यादि कारणबाट द्रव्यको गुण फरक पर्छ, उदाहरणका निमित्त—यौटा मार्सी धान छ, त्यसको लावा बनाउँ सो बहुत हलुका हुन्छ, बहुत कमजोर, अग्नि मन्द भएको बेरामीलाई हित गर्ने हुन्छ। त्यसैको च्युरा बनाउनु सो बहुत दुर्जर हुन्छ, त्यसैको चामलको खट्टे बनाउनु त्यो झन् अपथ्य हुन्छ, त्यसैको भात बनाउनु, अर्कै गुण गर्छ, जाउलोको गुण अर्कै हुन्छ, माडमा अर्कै गुण हुन्छ र रोगीको अवस्थानुसारको पथ्य बताइएको हुन्छ। त्यस्तै घ्यू अमृतै हो, मह पनि हरेक रोगमा अनुपान रूपमा प्रयोग गरिने देव, पितृ, मनुष्य सबैलाई तृप्त गर्ने पंचामृतमध्येकै अमृत हो। यी दुइ चीज बराबर मात्रामा मिलाइयो भने विषको काम गर्छ। त्यस कारण औषध बनाउँदा वा प्रयोग गर्दा द्रव्य मिलाउन पर्‍यो भने आध्यात्मिक दृष्टि भएका ऋषिहरूले देखेर वा अनुभव गरेर लेखिदिएको शास्त्रानुसार नै द्रव्यहरु मेलन, संस्कार, प्रयोग गर्नु श्रेयस्कर हुन्छ। आफ्नो मनमाना गर्दा धोखा पर्ने संभव हुन्छ। शास्त्रमा एक-एक द्रव्यको पृथक्-पृथक् गुण लेखे र पनि ती द्रव्यको संयोगमा भिन्नै गुण लेखेका छन्; जस्तै हर्रो, बर्रो, अमलाहरूको भिन्नै-भिन्नै गुण लेखेर यी ३ द्रव्यको मेल त्रिफलाको गुण भिन्नै लेखिएको छ। त्यो यस प्रकार छ—

## हरीतकी (हर्रो) हर्रे

सन्सारमा हर्रो नचिन्ने र प्रयोग नगर्ने मानिस बहुतै कम होलान् इन्द्रले अमृत पान गर्दा १ थोपो जमीनमा गिर्‍यो, त्यसबाट हर्रो उत्पन्न भयो भन्ने प्रमाण छ। हुन पनि विभिन्न तरीकाबाट प्रयोग गर्दा अनेक रोग नाश गरेको अनुभव भैरहेछ। मात्रा र अनुपान कालका भेदले यसले फाइदा नगर्ने कुनै रोगै छैन। यसको सात जात बताएको छ तापनि लोक सुलभ प्रचलित भैरहेको अभया भन्ने ५ रेखा भएको हुन्छ। यसको पनि २ किसिमबाट व्यवहार भै रहेको छ। एकथरि कलिलैमा टिपेर गोमूत्रमा उसिनेर सुकाएर राख्छन्।

देश-काल संस्कार संयोग इत्यादि कारणबाट द्रव्यको गुण फरक पर्छ, उदाहरणका निमित्त—यौटा मार्सी धान छ, त्यसको लावा बनाउँ सो बहुत हलुका हुन्छ, बहुत कमजोर, अग्नि मन्द भएको बेरामीलाई हित गर्ने हुन्छ। त्यसैको च्युरा बनाउनु सो बहुत दुर्जर हुन्छ, त्यसैको चामलको खट्टे बनाउनु त्यो झन् अपथ्य हुन्छ, त्यसैको भात बनाउनु, अर्कै गुण गर्छ, जाउलोको गुण अर्कै हुन्छ, माडमा अर्कै गुण हुन्छ र रोगीको अवस्थानुसारको पथ्य बताइएको हुन्छ। त्यस्तै घ्यू अमृतै हो, मह पनि हरेक रोगमा अनुपान रूपमा प्रयोग गरिने देव, पितृ, मनुष्य सबैलाई तृप्त गर्ने पंचामृतमध्येकै अमृत हो। यी दुइ चीज बराबर मात्रामा मिलाइयो भने विषको काम गर्छ। त्यस कारण औषध बनाउँदा वा प्रयोग गर्दा द्रव्य मिलाउन पर्‍यो भने आध्यात्मिक दृष्टि भएका ऋषिहरूले देखेर वा अनुभव गरेर लेखिदिएको शास्त्रानुसार नै द्रव्यहरु मेलन, संस्कार, प्रयोग गर्नु श्रेयस्कर हुन्छ। आफ्नो मनमाना गर्दा धोखा पर्ने संभव हुन्छ। शास्त्रमा एक-एक द्रव्यको पृथक्-पृथक् गुण लेखे र पनि ती द्रव्यको संयोगमा भिन्नै गुण लेखेका छन्; जस्तै हर्रो, बर्रो, अमलाहरूको भिन्नै-भिन्नै गुण लेखेर यी ३ द्रव्यको मेल त्रिफलाको गुण भिन्नै लेखिएको छ। त्यो यस प्रकार छ—

## हरीतकी (हर्रो) हर्रे

सन्सारमा हर्रो नचिन्ने र प्रयोग नगर्ने मानिस बहुतै कम होलान् इन्द्रले अमृत पान गर्दा १ थोपो जमीनमा गिर्‍यो, त्यसबाट हर्रो उत्पन्न भयो भन्ने प्रमाण छ। हुन पनि विभिन्न तरीकाबाट प्रयोग गर्दा अनेक रोग नाश गरेको अनुभव भैरहेछ। मात्रा र अनुपान कालका भेदले यसले फाइदा नगर्ने कुनै रोगै छैन। यसको सात जात बताएको छ तापनि लोक सुलभ प्रचलित भैरहेको अभया भन्ने ५ रेखा भएको हुन्छ। यसको पनि २ किसिमबाट व्यवहार भै रहेको छ। एकथरि कलिलैमा टिपेर गोमूत्रमा उसिनेर सुकाएर राख्छन्।

गरी तेज बढाउँछ। दिशा पिसाब खलास गर्छ। ग्रहणी, विबन्ध, गानु, गोला, शूल, वमन, हिक्का, हृद्रोग, फीयो, कलेजो बढेको, पथरी, प्रमेह, अर्श, कमलपित्त, दम, खोकी, स्वर बसेको, सूज, पेटका जुका (चूर्ना) रक्त-विकार आदि संपूर्ण रोग निर्मूल हुन्छन्। वृद्धावस्थाले हत्पति आक्रमण गर्नसक्तैन। कपाल फुल्ने र गाला चाउरी पर्ने विरूप हुँदैन।

साधारण प्रकारले माथि लेखिएका रोगहरू यथा कथंचित जसो गरी सजिलो हुन्छ उसै गरी सेवन गरे पनि तत्तत् रोग नाश हुन्छन। त्यसै चपाए पनि अग्नि वर्धक हुन्छ, चूर्ण गरी खाए मल शोधन गर्छ। पकाएर (काढा) पिए दिशा कस्तछ, फुराएर मुखमा राखेर रस चुस्ने गर्‍यो भने त्रिदोष (वायु, पित्त, कफ) नाशक हुन्छ।

यो चीज सुलभ र सुख प्रयोग, बहु गुण युक्त हुनाले सर्वदा सर्वकाल प्रयोग गरे हानि केही छैन, लाभ असंख्य छ।

उन्मीलिनी बुद्धिबलेन्द्रियाणां निर्मूलिनी पित्तकफानिलानाम् ॥
विस्रंसिनी मूत्र शकृन्मलानां हरीतकी स्यात् सह भोजनेन ॥१॥

अन्नपानकृतान् दोषान् वातपित्तकफोद्भवान्।
हरीतकी हरत्याशु भुक्तस्योपरि योजिता ॥२॥
लवणेन कफं हन्ति पित्तं हन्ति सशर्करा ॥
घृतेन वातजान् रोगान् सर्वरोगान् गुडान्विता ॥३॥

भोजनका साथ सधैं हर्रोको सेवनले बुद्धि, बल, इन्द्रियशक्तिहरू बढ्दछन्। पित्त, कफ, वायु ठीक प्रमाणमा रहन्छन्। आरोग्यकर हुन्छन, दिशा पिशाब कफ पित्त जम्ता मलहरू बाहिर निकालिदिन्छ।

खानपान बाट हुने रोग र ऋतु स्वभावले वात पित्त कफ कुपित भएर हुने काल जन्य रोग पनि भोजन पछि सेवन गरेका हर्राले हरण गर्छ। नुनका साथ सेवन गर्नाले कफ (कफजन्य रोग) चिनी संग सेवन गर्नाले पित्त (पित्तजन्य रोग) घ्युका साथ सेवन गर्नाले सम्पूर्ण रोग नाश गर्छ।

हर्राका विषयमा धेरै लेख्नुभन्दा निम्न श्लोक द्वारा उपसंहार गर्नु योग्य छ।

गरी तेज बढाउँछ। दिशा पिसाब खलास गर्छ। ग्रहणी, विबन्ध, गानु, गोला, शूल, वमन, हिक्का, हृद्रोग, फीयो, कलेजो बढेको, पथरी, प्रमेह, अर्श, कमलपित्त, दम, खोकी, स्वर बसेको, सूज, पेटका जुका (चूर्ना) रक्त-विकार आदि संपूर्ण रोग निर्मूल हुन्छन्। वृद्धावस्थाले हत्पति आक्रमण गर्नसक्तैन। कपाल फुल्ने र गाला चाउरी पर्ने विरूप हुँदैन।

साधारण प्रकारले माथि लेखिएका रोगहरू यथा कथंचित जसो गरी सजिलो हुन्छ उसै गरी सेवन गरे पनि तत्तत् रोग नाश हुन्छन्। त्यसै चपाए पनि अग्नि वर्धक हुन्छ, चूर्ण गरी खाए मल शोधन गर्छ। पकाएर (काढा) पिए दिशा कस्तछ, फुराएर मुखमा राखेर रस चुस्ने गर्‍यो भने त्रिदोष (वायु, पित्त, कफ) नाशक हुन्छ।

यो चीज सुलभ र सुरक्ष प्रयोग, बहु गुण युक्त हुनाले सर्वदा सर्वकाल प्रयोग गरे हानि केही छैन, लाभ असंख्य छ।

उन्मीलिनी बुद्धिबलेन्द्रियाणां निर्मूलिनी पित्तकफानिलानाम्॥
विस्रंसिनी मूत्र शकृन्मलानां हरीतकी स्यात् सह भोजनेन॥१॥

अन्नपानकृतान् दोषान् वातपित्तकफोद्भवान्।
हरीतकी हरत्याशु भुक्तस्योपरि योजिता॥२॥
लवणेन कफं हन्ति पित्तं हन्ति सशर्करा॥
घृतेन वातजान् रोगान् सर्वरोगान् गुडान्विता॥३॥

भोजनका साथ सधैं हर्रोको सेवनले बुद्धि, बल, इन्द्रियशक्तिहरू बढ्दछन्। पित्त, कफ, वायु ठीक प्रमाणमा रहन्छन्। आरोग्यकर हुन्छन्, दिशा पिसाब कफ पित्त जम्ता मलहरू बाहिर निकालिदिन्छ।

खानपान बाट हुने रोग र ऋतु स्वभावले वात पित्त कफ कुपित भएर हुने काल जन्य रोग पनि भोजन पछि सेवन गरेका हर्राले हरण गर्छ। नुनका साथ सेवन गर्नाले कफ (कफजन्य रोग) चिनी संग सेवन गर्नाले पित्त (पित्तजन्य रोग) घ्युका साथ सेवन गर्नाले सम्पूर्ण रोग नाश गर्छ।

हर्राका विषयमा धेरै लेख्नुभन्दा निम्न श्लोक द्वारा उपसंहार गर्नु योग्य छ।

१ हर्रो २ बर्रो ४ अमला भन्दा ता सम भाग भएन, भन्ने शङ्का हुन्छ, तर यो पनि सम भागै हुन्छ। किनभने हर्रोको फलको प्रमाण २ तोलाको उत्तम मानिएको छ, बर्रोको फलको प्रमाण १ तोलाको छ, अमलाको प्रमाण आधा तोलाको मानिएको छ, तेसो हुनाले मिलाउँदा तौलबाट सम भागै हुनआउँछ, विरोध पर्दैन।

## त्रिकटु

त्यस्तै सुठो मरिच पिप्लाहरूको गुण भिन्न भिन्नै लेखेर यो तीनैवटाको समभागलाई त्रिकटु भन्ने संज्ञा राखेर यसको गुण भिन्नै लेखिएको छ। 'विश्वोपकुल्या मरिचं त्रयं त्रिकटु कथ्यते।' त्र्यूषण, व्योष पनि भनिन्छ। गुण—अग्नि दीपन गर्छ। श्वास, काश, चर्म रोग (चिलाउने खटिरा फुन्सीहरू निस्कने) गानु, गोला प्रमेह, कफ मेदा (मोटोपन) श्लीपद (हाथीपाउ) इत्यादि नाश गर्छ। यसैमा पिप्लामूल मिलाए पछि चतुरूषण भन्ने संज्ञा हुन्छ, यसमा यिनै गुणहरू तीक्ष्ण रूपमा रहन्छन् विशेष फरक पर्ने गुण हुँदैन।

## सुठो

(क) रुचि बढाउने, आमवात (बाथ) नाश गर्ने, पाचन (आहार-पाक) गर्ने, पीरो हलुका स्निग्ध, उष्ण मधुर पाकी (पहिले गरम गरे पनि जाठराग्निले पाक गरे पछि गुलीयो जस्तो शीतल काम गर्ने) वायु, कफ, कब्जियत नाश गर्ने, शुक्र वर्द्धक, स्वर खुलाउने, वमन, श्वास, कास, शूल, हृद्रोग, श्लीपद, सूज, अलकाई (बवासीर) पेट फुलेको इत्यादि नाश गर्छ। आग्नेय गुण बढता हुनाले जलीय भाग सुकाइदिन्छ। दिशा कब्ज गर्छ वायु कफले रोकिएको मल अनुलोमन (वायुलाई तलतिर घचेट्ने) हुनाले खलास पनि गर्छ।

(ख) अदुवा (आर्द्रक) पनि यस्तै हो। आलो (रसालो) अवस्थामा भन्दा संस्कार गरी सुकाइएको हुनाले आवस्थिक र संस्कार-

१ हर्रो २ बर्रो ४ अमला भन्दा ता सम भाग भएन, भन्ने शङ्का हुन्छ, तर यो पनि सम भागै हुन्छ। किनभने हर्रोको फलको प्रमाण २ तोलाको उत्तम मानिएको छ, बर्रोको फलको प्रमाण १ तोलाको छ, अमलाको प्रमाण आधा तोलाको मानिएको छ, तेसो हुनाले मिलाउँदा तौलबाट सम भागै हुनआउँछ, विरोध पर्दैन।

## त्रिकटु

त्यस्तै सुठो मरिच पिप्लाहरूको गुण भिन्न भिन्नै लेखेर यो तीनैवटाको समभागलाई त्रिकटु भन्ने संज्ञा राखेर यसको गुण भिन्नै लेखिएको छ। 'विश्वोपकुल्या मरिचं त्रयं त्रिकटु कथ्यते।' त्र्यूषण, व्योष पनि भनिन्छ। गुण—अग्नि दीपन गर्छ। श्वास, काश, चर्म रोग (चिलाउने खटिरा फुन्सीहरू निस्कने) गानु, गोला प्रमेह, कफ मेदा (मोटोपन) श्लीपद (हात्तीपाउ) इत्यादि नाश गर्छ। यसैमा पिप्लामूल मिलाए पछि चतुरूषण भन्ने संज्ञा हुन्छ, यसमा यिनै गुणहरू तीक्ष्ण रूपमा रहन्छन् विशेष फरक पर्ने गुण हुँदैन।

## सुठो

(क) रुचि बढाउने, आमवात (बाथ) नाश गर्ने, पाचन (आहार-पाक) गर्ने, पीरो हलुका स्निग्ध, उष्ण मधुर पाकी (पहिले गरम गरे पनि जाठराग्निले पाक गरे पछि गुलीयो जस्तो शीतल काम गर्ने) वायु, कफ, कब्जियत नाश गर्ने, शुक्र वर्द्धक, स्वर खुलाउने, वमन, श्वास, कास, शूल, हृद्रोग, श्लीपद, सूज, अलकाई (बवासीर) पेट फुलेको इत्यादि नाश गर्छ। आग्नेय गुण बढता हुनाले जलीय भाग सुकाइदिन्छ। दिशा कब्ज गर्छ वायु कफले रोकिएको मल अनुलोमन (वायुलाई तलतिर धचेट्ने) हुनाले खलास पनि गर्छ।

(ख) अदुवा (आर्द्रक) पनि यस्तै हो। आलो (रसालो) अवस्थामा भन्दा संस्कार गरी सुकाइएको हुनाले आवस्थिक र संस्कार-

समभाग मिलाएकोलाई चतुर्बीज भन्दछन् । यसको चूर्ण तातो पानी-सँग नित्य सेवन गरे ठूला-ठूला वात व्याधि पनि नाश हुन्छन् । अजीर्ण, शूल, पेट फुलेको, कम्मर कोखा दुख्ने, अरुचि इत्यादि रोग सहजै शान्ति हुन्छन् ।

## बेल (बिल्व)

यो सर्वत्र सुलभ र अति प्रसिद्ध चीज पनि हो, अति पवित्र र पौष्टिक रसायन पनि छ । गरम दिनमा पाकेका बेलको सर्बत बनाई प्युने चलन छ, यसले भोक प्यास परिश्रम शान्त गर्छ । दिमाग ठण्डा गर्छ, शरीर पुष्ट गर्छ, विष्टम्भी (दिशा कब्ज) गर्छ, बर्ता खाए अजीर्ण गर्छ ।

आयुर्वेद (निघण्टु) मा पाकेको भन्दा काँचो (बालबेल) को प्रशंसा गरेको छ ।

'फलेषु परिपक्कं यद्‌गुणवत्तदुदाहृतम् ।

बिल्वादन्यत्र विज्ञेयं ह्यामं तत्तु गुणाधिकम् ॥

अतः यो कच्चै अवस्थामा टिपेर चाना पारी सुकाएर राख्ने चलन छ । यसैलाई बालबेल भन्दछन् । यसको चूर्ण २ मासादेखि ५ मासा सम्म उमेर र अवस्था हेरी मात्रा गरी गुड वा चिनी मिलाई अमिलो दही मोही वा तातो पानीसँग खाने गरे आउँ रगत, केवल आउँ, पखाला, अतिसार, ग्रहणी इत्यादि यावत् पेटका रोग बिल्कुल सफा गरी शरीर हृष्ट पुष्ट बलवर्ण संपन्न गराउँछ । बालकका निमित्त झन् उपयोगी छ, यसमा अलिकति सूठाको चूर्ण मिलाए अरु स्वास्थ्यकर हुन्छ । बेलको पातको रस २ तोलामा मह मिलाएर पियो भने जीर्ण जरो नष्ट हुन्छ । वात व्याधिमा बेलको जराको काढा बहुत उप-योगी छ ।

## उदुम्बर (डुम्री) गूलर

डुम्रीको फल पाकेपछि मीठो हुन्छ; शीतल छ, पित्त, रक्त विकार

समभाग मिलाएकोलाई चतुर्बीज भन्दछन् । यसको चूर्ण तातो पानीसँग नित्य सेवन गरे ठूला-ठूला वात व्याधि पनि नाश हुन्छन् । अजीर्ण, शूल, पेट फुलेको, कम्मर कोखा दुख्ने, अरुचि इत्यादि रोग सहजै शान्त हुन्छन् ।

## बेल (बिल्व)

यो सर्वत्र सुलभ र अति प्रसिद्ध चीज पनि हो, अति पवित्र र पौष्टिक रसायन पनि छ । गरम दिनमा पाकेका बेलको सर्वत बनाई प्युने चलन छ, यसले भोक प्यास परिश्रम शान्त गर्छ । दिमाग ठण्डा गर्छ, शरीर पुष्ट गर्छ, विष्टम्भी (दिशा कब्ज) गर्छ, बर्ता खाए अजीर्ण गर्छ ।

आयुर्वेद (निघण्टु) मा पाकेको भन्दा काँचो (बालबेल) को प्रशंसा गरेको छ ।

'फलेषु परिपक्वं यद्‌गुणवत्तदुदाहृतम् ।

बिल्वादन्यत्र विज्ञेयं ह्यामं तत्तु गुणाधिकम् ॥

अतः यो कच्चै अवस्थामा टिपेर चाना पारी सुकाएर राख्ने चलन छ । यसैलाई बालबेल भन्दछन् । यसको चूर्ण २ मासादेखि ५ मासा सम्म उमेर र अवस्था हेरी मात्रा गरी गुड वा चिनी मिलाई अमिलो दही मोही वा तातो पानीसँग खाने गरे आउँ रगत, केवल आउँ, पखाला, अतिसार, ग्रहणी इत्यादि यावत् पेटका रोग बिल्कुल सफा गरी शरीर हृष्ट पुष्ट बलवर्ण संपन्न गराउँछ । बालकका निमित्त झन् उपयोगी छ, यसमा अलिकति सूठाको चूर्ण मिलाए अरु स्वास्थ्यकर हुन्छ । बेलको पातको रस २ तोलामा मह मिलाएर पियो भने जीर्ण जरो नष्ट हुन्छ । वात व्याधिमा बेलको जराको काढा बहुत उपयोगी छ ।

## उदुम्बर (डुम्री) गूलर

डुम्रीको फल पाकेपछि मीठो हुन्छ; शीतल छ, पित्त, रक्त विकार

ती जराहरू सफासँग धोएर सफा खलमा थिच्नु र सफा कपडामा निचोर्नु। त्यो रस ४।५ तोलामा २।३ मासा मिश्री मिलाई प्युनु दिमाग ठण्डा हुन्छ; पित्त, रक्त-पित्त, कमलपित्त, दाह, धातु दौर्बल्य प्रमेह प्रदर स्वेत-प्रदर मूत्रदोष शुक्रदोष इत्यादि अनेक रोग नष्ट हुन्छन्। बुद्धि, बल बढाउँछ। नेत्र रोग, हृदयरोग, नाश गर्छ। स्त्री-जाति ( गाइ-भैंसी आदि ) को दूध बढाउन परेमा यसको रसमा चिनी मिलाइ शरीर र उमेर अनुसार मात्रा गरी ७ दिनसम्म पिलायो भने प्रशस्त दूध आउँछ। शरीर पनि पुष्ट हुन्छ। कुट्न रस निकाल्न नमिले ३।४ वटा जरा तेसै चपाइ दुध वा पानीले नै निल्ने गरे पनि उक्त गुण मिल्छ।

## खयर ( खदिर ) कत्था

यो—गतार्थ प्रायः ( पुनरुक्ति भए जस्तो ) भो तापनि बोक्राको प्रयोग पहिले दिएको छैन।

खयरको दन्तधावन ( दतिवन ) लगाउनाले वा तेसै मुखमा राखी रस चुस्ने गरे दाँत हल्लेका भए पनि जम्दछन, दम खोकी जिभ्राका खटिरा थाँटीका खटिरा नाश हुन्छन्। खदिर कषाय ( बोक्राको काढा ) ले रक्त-विकार लुतो चिलाउने रोग वात-रक्त कुष्ठ समेत नाश हुन्छ। ठक्कर लागेको मर्केको सुनिएको अङ्गमा यसको लेपले फाइदा गर्छ। प्रमेह प्रदर नाश गर्छ, मुखको कान्ति बढाउँछ।

## सिमल ( शाल्मली ) सेमर

सिमल २ जातको हुन्छ योटा कूटसिमल अर्को सिमल, कूटसिमल लहरा जस्तो हुन्छ, बहुत लस्सादार कमलो हुन्छ, धातु पुष्ट गर्न र प्रमेह प्रदर मूत्र कृच्छ्र इत्यादि मूत्र दोष धातु दोष दार्बल्य रिंगटा पित्त-विकार आदि नाश गरी देह पुष्ट गर्नमा अति उत्तम छ। ४-५ तोला यसको लहरा तेसै चपाए पनि हुन्छ।

ती जराहरू सफासँग धोएर सफा खलमा थिच्नु र सफा कपडामा निचोर्नु। त्यो रस ४।५ तोलामा २।३ माषा मिश्री मिलाई ख्युनु दिमाग ठण्डा हुन्छ; पित्त, रक्त-पित्त, कमलपित्त, दाह, धातु दौर्बल्य प्रमेह प्रदर स्वेत-प्रदर मूत्रदोष शुक्रदोष इत्यादि अनेक रोग नष्ट हुन्छन्। बुद्धि, बल बढाउँछ। नेत्र रोग, हृदयरोग, नाश गर्छ। स्त्री-जाति (गाइ-भैंसी आदि) को दूध बढाउन परेमा यसको रसमा चिनी मिलाइ शरीर र उमेर अनुसार मात्रा गरी ७ दिनसम्म पिलायो भने प्रशस्त दूध आउँछ। शरीर पनि पुष्ट हुन्छ। कुट्न रस निकाल्न नमिले ३।४ वटा जरा तेसै चपाइ दुध वा पानीले नै निल्ने गरे पनि उक्त गुण मिल्छ।

## खयर (खदिर) कत्था

यो—गतार्थ प्रायः (पुनरुक्ति भए जस्तो) भो तापनि बोक्राको प्रयोग पहिले दिएको छैन।

खयरको दन्तधावन (दतिवन) लगाउनाले वा तेसै मुखमा राखी रस चुस्ने गरे दाँत हल्लेका भए पनि जम्दछन्, दम खोकी जिभ्राका खटिरा घाँटीका खटिरा नाश हुन्छन्। खदिर कषाय (बोक्राको काढा) ले रक्त-विकार लुतो चिलाउने रोग वात-रक्त कुष्ठ समेत नाश हुन्छ। ठक्कर लागेको मर्केको सुनिएको अङ्गमा यसको लेपले फाइदा गर्छ। प्रमेह प्रदर नाश गर्छ, मुखको कान्ति बढाउँछ।

## सिमल (शाल्मली) सेमर

सिमल २ जातको हुन्छ यौटा कूटसिमल अर्को सिमल, कूटसिमल लहरा जस्तो हुन्छ, बहुत लस्सादार कसलो हुन्छ, धातु पुष्ट गर्न र प्रमेह प्रदर मूत्र कृच्छ्र इत्यादि मूत्र दोष धातु दोष दौर्बल्य रिंगटा पित्त-विकार आदि नाश गरी देह पुष्ट गर्नमा अति उत्तम छ। ४-५ तोला यसको लहरा तेसै चपाए पनि हुन्छ।

करेष्विन्दोरङ्कः श्रुतिरियमलीकेति कलये ।
तथा ह्युच्चैः पित्त-कफ हृदमरुद् भेदिलशुनं
महातृष्यं लोकैरसुरभितया त्यज्यत इह ॥

चन्द्रमामा रहेको कलङ्क जस्तै धेरै गुणको समूहमा थोँटा अवगुण (दोष) तेसै दबिन्छ भन्ने यो भनाइ झुट्टै जस्तो लाग्छ; किनभने— अनेक गुणको खानि (महातृष्य) खूब कामशक्ति बढाउने लशुनमा यौटा दुर्गन्ध दोष छ भनेर निन्दित गरेको छ ।

कान पाके दुखेमा लशुनको पोटी डढाएको तेल हाले आराम हुन्छ । सुनिएको दुखेको ठाउँमा यसको लेप लगाउनाले आराम हुन्छ ।



करेष्विन्दोरङ्कः श्रुतिरियमलीकेति कलये ।
तथा ह्युच्चैः पित्त-कफ हृदमरुद् भेदिलशुनं
महातृष्यं लोकैरसुरभितया त्यज्यत इह ॥

चन्द्रमामा रहेको कलङ्क जस्तै धेरै गुणको समूहमा थोँटा अवगुण (दोष) तेसै दबिन्छ भन्ने यो भनाइ झुट्टै जस्तो लाग्छ; किनभने— अनेक गुणको खानि (महातृष्य) खूब कामशक्ति बढाउने लशुनमा थोँटा दुर्गन्ध दोष छ भनेर निन्दित गरेको छ ।

कान पाके दुखेमा लशुनको पोटी डढाएको तेल हाले आराम हुन्छ । सुनिएको दुखेको ठाउँमा यसको लेप लगाउनाले आराम हुन्छ ।

